# सामवेद

अनुवादक
तिलकप्रसाद लुइटेल

विद्यार्थी पुस्तक भण्डार
प्रकाशक तथा वितरक
भोटाहिटी, काठमाडौं

पुस्तक : सामवेद

प्रकाशक : विद्यार्थी पुस्तक भण्डार
भोटाहिटी, काठमाडौं
फोन नं. ४२२७२४६/४२४५८३४

संस्करण : पहिलो : २०६३
दोस्रो : २०७६

मूल्य : रु. २५०/-



ISBN : 99946-744-7-1

कम्प्युटर : सुलभ कम्प्युटर सर्भिस, बागबजार
फोन: २५२९५९

मुद्रक : स्काई मिडिया

# वेदोऽखिलो धर्ममूलः

## वैदिक सनातन कर्मकाण्ड महासङ्घ, नेपाल

वेद विश्वसाहित्यकै ज्येष्ठश्रेष्ठ अपौरुषेय ज्ञानगङ्गाको महासागरका रूपमा अभिलिखित आदि-ग्रन्थ मानिन्छ । यो ग्रन्थ सम्पूर्ण ज्ञानविज्ञानको आदिम स्रोत, ज्ञानसत्ता लाभ, विचार अर्थबोधक सर्वश्रेष्ठ ऋचाहरूको सँगालो हो । अन्वेषकका भौतिक, आध्यात्मिक र मिश्रित विचारधाराहरूकै आधारमा सर्वश्रेष्ठ, सर्वमान्य एवं सर्वपक्षीय तुलनात्मक अध्ययनका लागि अपरिहार्य, मानवसंस्कृति, सभ्यता, साहित्यकलाहरूको मूल एवं आर्य धर्मसंस्कृति, सभ्यता ज्ञानविज्ञानहरूको अपरिहार्य स्रोतका रूपमा वेद प्रतिष्ठित छ । वेदलाई सरल नेपाली भाषामा रूपान्तरण गरी नेपाली जनमानसमा सेवा पुऱ्याउने अनुवादक विद्वान् श्री तिलकप्रसाद लुइटेलजीलाई अन्तरआत्माद्वारा हार्दिक धन्यवादसहित उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

प्रा. पूर्णप्रकाश नेपाल 'यात्री'
संरक्षक
वैदिक सनातन कर्मकाण्ड महासङ्घ, नेपाल

प्रा. रामचन्द्र भण्डारी
महासचिव
वैदिक सनातन कर्मकाण्ड महासङ्घ, नेपाल

# मलाई मनमा लागेको

सामवेद चार वेदहरूमध्ये तेस्रो वेद मानिन्छ र यो ब्रह्मयामलबाट उत्पन्न भएको हो भनेको पनि सुन्न पाइन्छ । यसका अधिकांश मन्त्रहरू ऋग्वेदमै उपलब्ध छन् । ऋग्वेदमा नभएका केही मन्त्रहरू मात्र यसमा थप भएका छन् । पूर्वार्चिक र उत्तरार्चिक गरी सामवेद दुई भागमा रहेको छ । कौथुमीय, राणयणीय र जैमिनीय गरी यसका तीन शाखा भएको बताइन्छ । सामवेदमा नै ऋषिहरूले वेय, अरण्य, ऊह र ऊह्य यी चार किसिमका गान मन्त्रको रचना गरेका छन् भन्ने बताइएको छ । सामवेद नै गीतसङ्गीतको आधार हो भन्ने कुरो वेदको ज्ञान भएका विद्वान्हरूमा प्रचलित छ । यसो हुनाले पूर्वीय सङ्गीत परम्पराको आधार नै सामवेद हो भन्न सजिलै सकिन्छ । गीतसङ्गीतमा देखिने प्रथम, द्वितीय, तृतीय, चतुर्थ, पञ्चम, षष्ठ र सप्तम नामका सात स्वर, म, ग, रे, सा, नि, ध, प यी सात वेणु, ग्राम, मूर्छना, तान, स्थायी, अन्तरा आदि सबैको उद्गम सामवेद नै हो भन्न सकिन्छ । गीतसङ्गीतमा सबैको मन रमाउँछ, त्यसैले सामवेदसँग सबैका जीवनको सम्बन्ध रहेको कुरो आफैँ छर्लङ्ग हुन्छ ।

वेद ज्ञान हो, साम गान हो । वेदका पद्यात्मक मन्त्रलाई गीतको कौशलमा प्रयोग गरिएपछि सामवेद बन्यो । गीतसङ्गीतले मानवीय संवेदनालाई झङ्कृत गराउँछ । शब्दका सामर्थ्यले व्यक्त गर्न नसकेको अनुभूतिलाई सङ्गीतले अभिव्यक्त गर्दछ । वेद अनुभूतिहरूको सँगालो हो । शब्दले न त वेद नै व्यक्त हुन सम्भव छ, न कुनै मानव नै वेदका गहिराइमा पुग्न सक्दछ । ज्ञान, अनुभव, कर्तव्य आदिको सीमारेखाको अभाव पहिलेदेखि नै रहेको बुझिन्छ । अतः **'किङ्कर्म किमकर्मेति कवयोऽप्यत्रमोहिताः'** भन्ने ठाउँमा सङ्गीतले दिशाबोध गर्छ, किनकि मानिसका वाक्य आफैँमा पूर्ण नभएकै कारण **'नेति नेति'** को उद्घोष हुन्छ । वाद्ययन्त्रका तालस्वरमा सर्प नाचेको देख्दा प्रकृतिमा रहेका मानवइतर विभिन्न चेतनशील प्राणीहरू सङ्गीतमा रमाउँछन् भन्न सकिने ठाउँ छ । पुराना कथाहरूमा सङ्गीतका बलले ढुङ्गो टुसाएको, उन्यूँ फुलेको, सफा आकाशमा बादल छाएर पानी बर्सेको, समुद्रले सुगम बाटो प्रदान गरेकोजस्ता अनेकौँ नपत्याउँदा कथाहरू रचिएका छन् । समाजमा सङ्गीतले सबैको मन एकोहोऱ्याएको देख्दा समस्त स्थावरजङ्गम सङ्गीतकै सुरमा रहेको आभास हुन्छ । अतः अभेद्य रूपमा रहेको वेदको मर्म व्यक्त गर्ने उद्देश्यले प्राचीन ऋषिहरूले भावसम्प्रेषणको सरल उपायको अन्वेषण गर्दा गीतसङ्गीतको विकास गरेका हुन् कि जस्तो लाग्दछ । चरअचर दुवै संसारबाट आउने ध्वनिको सम्मिश्रणबाटै सफल सङ्गीतको उदय हुनाले यी दुवै नै सङ्गीतका कारक हुन् भन्न सकिन्छ र कतै यी दुवै सङ्गीतका भोक्ता पनि हुन् भनेझैँ लाग्दछ ।

**'किमिह किङ्काय स खलु किमुपायस्त्रिभुवनः किमाधारो धारता सृजति किमुपादान इति च'** जस्ता जिज्ञासा मानिसमा हुन्छन् । तिनको समाधानको आधार दक्षता हो । कुनै पनि क्षेत्रमा एउटा मानिसले दक्षता प्राप्त गर्नका लागि उसित त्यस क्षेत्रको ज्ञान र सिप दुवै चाहिन्छन् । सिपले ज्ञानलाई प्रस्तुत गर्ने अवसर दिन्छ भने ज्ञानले ठिक वा बेठिक कस्तो छ भन्ने बोध गराउँछ । एउटा मानिससित जति ज्ञान हुन्छ, त्यतिन्नै सिप हुन्छ भन्न सकिँदैन । कुनै विषयमा ज्ञानको स्तर सामान्य नै भए पनि मानिस अर्काले गरेको काम राम्रो लाग्यो वा लागेन भनी ठम्याउन सक्छ भने ज्ञानको स्तर विशिष्ट भएपछि यस ठाउँमा यस कारणले बेठिक भएको छ भनी औँल्याउन सक्दछ । अझ त्यस विषयको सिप पनि आर्जन गरेको छ भनेदेखि बेठिक भएको सच्याएर ठिक बनाउन सक्छ । गीतसङ्गीतका क्षेत्रमा पनि अपरिमित जिज्ञासा हुन्छन् । तिनको समाधानको लागि गीतसंगीतका ज्ञान र सिप दुवैको उस्तै आवश्यकता पर्दछ । सुन्न रुचाए पनि सङ्गीतका प्रविधिको ज्ञान मसित छैन । सङ्गीत किन राम्रो लाग्यो भन्ने प्रश्नको उत्तर दिन म सक्तिनँ । प्रत्यक्ष वाद्यवादन, गीतगायन र नृत्यनर्तन भएको पनि मैले देखेको छु । विद्युतीय श्रव्य र श्रव्यदृश्य सञ्चार सामग्रीले प्रसार गरेका साङ्गीतिक कार्यक्रमहरू पनि हेरेको छु । त्यस्ता प्रसारित सङ्गीतमध्ये कुनैले मलाई संसार बिर्सने गरी लठ्याएका छन् भने कुनैले त्यस्तो स्थिति प्रदान गर्न सकेनन् । अझ उही शब्दविन्यासलाई वाद्ययन्त्रमा आबद्ध गर्दा पनि साङ्गीतिक सम्प्रेषण फरक परेका हुन्छन् । त्यस्तो अवस्थामा कुनै सम्प्रेषणले मलाई मुग्ध पार्छ भने कुनै मलाई हेर्न वा सुन्न मन पनि लाग्दैन । तिनीहरूमध्ये कुन साङ्गीतिक प्रस्तुति राम्रो र कुन नराम्रो भनेर स्रष्टाका सिर्जनामा टीकाटिप्पणी गर्ने अधिकार मलाई छैन, किनभने मसित सङ्गीतको ज्ञान नै छैन, तर मेरो रुचि वा अरुचिका विषयमा अनुभव गर्न म स्वतन्त्र छु । मेरा यसै स्वतन्त्रतालाई आधार बनाएर यो र त्यो फरक छन् भनी आफ्नै मनसँग भन्न सक्छु, यसरी नै मेरा मनले सङ्गीतको फरक किसिम वा स्तर फरक परेको ठम्याउँछ, यद्यपि म तिनलाई शाब्दिक रूपमा वर्गीकरण गर्न सक्दिनँ । त्यसरी वर्गीकरण गर्ने कामको जिम्मा सङ्गीतकै क्षेत्रमा जीवनको सर्वस्व उत्सर्ग गरेका साधकहरूलाई दिनु उचित हुनेछ । मलाई रुचिकर होऊन् वा नहोऊन् तर मैले आफ्ना ठाउँबाट भन्नुपर्दा सामवेद नै ती सबै खालका सङ्गीतको स्रोत हो । त्यसो हुँदा सबै सङ्गीतकर्मीहरूको यो साझा सम्पत्ति हो ।

सामवेदलाई गीत हो भनेर मौखिक चर्चा गरेको सुनेको छु, ग्रन्थहरूमा लेखेको पनि पाएको छु तर हिजोआज गायन वा सङ्गीतका क्षेत्रमा रहेका सबैजसोसँग यसको जानकारी होला जस्तो मलाई लागेको छैन । उनीहरूबाटै स्थायी, अन्तरा, सारेगम आदि सात स्वर, सुर, ताल, लय आदि अनेकौँ कुरो गरेको सुन्न पाइन्छ । उनै संस्कृति संरक्षणको कुरो ठूलो स्वरले गर्छन् । तिनीहरूमध्येकै कतिपयबाट पूर्वीय शास्त्रीय

सङ्गीतभन्दा भिन्नै किसिमले सङ्गीत सिर्जना गर्ने परम्परा पनि बस्न लागेको पो हो कि जस्तो लाग्दछ । नयाँ आयामको खोजी हुनु र त्यसबाट नयाँ परम्परा बस्नुले पुरानाको भन्दा बढी योगदान दिन सक्यो भने त्यो स्वीकार्य हुन्छ तर पुरानोभन्दा कमसल निस्कियो भने त्यो अर्थहीन हुन्छ । अतः यस किसिमका सिर्जनाले सङ्गीतलाई सुसंस्कृत, सरल र सहज बनाउँदै लगेका हुन् कि विकृत बनाउन लागेका हुन् भन्ने कुराको पनि सङ्गीतक्षेत्रकै साधकले टुङ्गो लगाउन सके उचित हुने थियो । त्यसो हुँदा सङ्गीतकर्मीलाई सामवेदको जानकारी होस् भनेर हामीले शुभकामना दिनै पर्दछ । लोकसङ्गीत, पूर्वीय सङ्गीत, पाश्चात्य सङ्गीत, आधुनिक सङ्गीत अथवा यस्तै अन्य नामको भेद जेसुकै भए पनि, जस्तोसुकै सङ्गीतको सिर्जना गर्ने भए पनि सङ्गीतको स्रोत भनिएका सामवेदको ज्ञान भएका सङ्गीतकर्मीले जनरुचिअनुसारको योगदान समाजलाई दिन सक्लान् जस्तो मलाई लागेको छ, यद्यपि आजका विविधतापूर्ण सङ्गीतहरूलाई रुचाउने विविध खालका जनसमूह पनि छँदै छन् । विशेषतः दौंतरी सङ्गीतकारको सिर्जना रुचाउने दौंतरी श्रोताहरू नै बढी हुन्छन् । सङ्गीतका क्षेत्रमा रहनेहरू सबैले राम्रो प्रस्तुतिका लागि जहिलेसुकै अत्यधिक अभ्यासको खाँचो रहने कुरो गर्दछन् । अभ्यासले सिपको परिमार्जन हुन्छ । आखिर अभ्यासमा समय र श्रमको लगानी गर्नै पर्दछ भने सामवेदको नियमअनुसाशनको खोज गरेर अभ्यासमा लागेका खण्डमा पक्का पनि सन्तोषप्रद उपलब्धि हासिल हुने थियो होला ।

वेदको विद्वान् भएर होइन, केवल नेपाली पाठकको जिज्ञासालाई ध्यानमा राखेर यो ग्रन्थ तयार गर्ने प्रयास गरेको हुँ भनी मैले ऋग्वेदका विषयमा आफ्नो भनाइ लेख्दा उल्लेख गरेको छु र फेरि पनि त्यसै भन्दै छु । ऋग्वेद र यजुर्वेदको नेपाली भावार्थ लेख्न प्रेरित गर्ने कारक तत्त्व र जनसहयोग नै विशेषतः यस सामवेदका वाक्यको नेपाली भावार्थ लेखनमा पनि मलाई उत्प्रेरक बनेका छन् । मूल ऋग्वेद, त्यसका स्रष्टाहरू, मूल यजुर्वेद, मूल सामवेद, तिनका स्रष्टाहरू, ऋग्वेद र यजुर्वेदको नेपाली भावार्थ तयार गर्न मलाई सघाएका विभिन्न कृति, तिनका स्रष्टाहरू, अन्य सहयोगी महानुभावहरू, आफैँले भावार्थ लेखेका ऋग्वेद, यजुर्वेद र गायिका लोचन भट्टराईप्रति म विशेष आभारी छु ।

— विनीत

तिलकप्रसाद लुइटेल

# प्रकाशकीय

पाठकले खोजेको सामग्री उपलब्ध गराउनु हाम्रो व्यावसायिक कर्तव्य हो भने समाजको हित हुने सामग्री प्रकाशमा ल्याउनु समाजप्रतिको दायित्व हो । हामी वैदिक परम्परामा आबद्ध हिन्दू धर्मसंस्कृतिका अनुयायी हौं । हाम्रो परिचय वैदिक दर्शनमा आधारित कर्म, ज्ञान र भक्तिमा रहेको छ । वैदिक दर्शन वेदबाट निर्देशित छ । एकाग्र मनले कर्तव्यनिष्ठ रहँदै देश, समाज र परम्पराप्रति आदरको भाव प्रकट गर्नु र सत्कर्मप्रति इमानदार रहनु हाम्रा दर्शनको मूल अभिप्राय हो । हाम्रो धार्मिक मान्यता अहिंसा र सदाचारका जगमा अडिएको हुनाले हाम्रो समाज धर्मप्रति आस्थावान् छ । त्यसैले हाम्रो धर्म र दर्शनका बीच गहिरो नाता छ । अहिंसा र सदाचार हाम्रा समाजका मूलभूत आदर्श हुन्, जो श्रुति, स्मृति, पुराण, उपनिषद् आदिबाट समाजमा प्रचार हुन्छन् । हाम्रो समाज उसै वैदिक परम्पराले ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र गरी चार वर्णमा विभाजित छ । चार वर्णमध्ये ब्राह्मणले वेदको अध्ययन गर्ने अधिकार पाएको र अरू तीन वर्णले वेद पढ्नुहुँदैन भन्ने धारणा समाजमा रहेको पाइन्छ । यो सबै मानिसप्रति न्यायको विचार पक्कै होइन । यस विचारले गर्दा हाम्रा समाजका क्षत्रिय, वैश्य र शूद्र यी तीन वर्ण आफूलाई चिन्ने र चिनाउने शिक्षाबाट वञ्चित रहने सम्भावना हुन्छ । जुनसुकै किसिमको शिक्षा जुनसुकै जिज्ञासुले लिन पाउनुलाई मानवीय अधिकार मान्न सक्नुपर्छ । अन्य देशका जिज्ञासुले पढ्न पाएको सामग्री पढ्न हाम्रा समाजलाई हामीले नै बाधा हाल्यौं भने त्यसको हानी हामीलाई नै हुन्छ । चारै वर्णले इच्छाबमोजिम पढ्न पाएका खण्डमा मात्रै प्राचीन समयमा शिक्षाको प्रचारस्थलका रूपमा रहेको आर्यसभ्यताको गरिमा बढ्छ, प्राचीन कालका गार्गी मैत्रेयीझैं नारीहरू शिक्षित हुन पाउँछन् र सिङ्गो समाज शिक्षाका ज्योतिले झलमल्ल हुन्छ । शिक्षा समाजलाई अग्रगति प्रदान गर्ने शक्ति हो, यसमा जातजाति वा वर्णधर्मको तगारो हाल्नुभन्दा उदार मनले सबैसम्म पुऱ्याउनु समाजका लागि हितको विषय हुन्छ भन्ने हामीले मान्नुपर्दछ । यसै भावनाले प्रेरित भएर नै अङ्ग्रेजीलगायत विभिन्न भारतीय भाषाको जानकारी भएका संस्कृतका विद्वान् श्रीतिलकप्रसाद लुइटेलले सरल नेपाली भाषामा यजुर्वेदको भावार्थ लेखेर प्रकाशन गरिदिनका लागि आग्रह गर्नुभयो । हाम्रा प्रकाशनले समाजसेवाको उचित अवसर पाएझैं मानेर त्यो प्रस्ताव सहर्ष स्वीकार गऱ्यो । भविष्यमा पनि उहाँबाट यस्तै सामग्री आऊन् र समाजसेवा गर्न पाइयोस् भन्ने शुभकामना सहित ।

श्री शान्तकुमार गौतम
विद्यार्थी पुस्तक भण्डार

# विषयसूचि

ॐ

**भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।**

# सामवेद संहिता

## आग्नेय पर्व

## अथ प्रथमोऽध्यायः

**ऋषि–** भरद्वाज बार्हस्पत्य। मेधातिथि काण्व। उशना काव्य। सुदीति, पुरुमीढ आंगिरस। वतस काण्व। वामदेव। आयुङ्क्ष्वाहि। वामदेव गौतम। प्रयोग भार्गव। मधुच्छन्दा र्जश्वामित्र। शुनःशेप अजीगर्ति। वसिष्ठ मैत्रावरुणि। विरूप आङ्गिरस। गोपवन आत्रेय। प्रस्कण्व काण्व। सिन्धुद्वीप आम्बरीष अथवा त्रित आप्त्य। शंयु बार्हस्पत्य। भर्ग प्रागाथ। सौभरि काण्व। मनु वैवस्वत। मेधातिथि, मेध्यातिथि काण्व। विश्वामित्र गाथिन। कण्व घौर। उत्कील कात्य। श्यावाश्व अथवा वामदेव। उपस्तुत वार्ष्टिहव्य। बृहदुक्थ वामदेव। कुत्स आङ्गिरस। त्रिशिरा त्वाष्ट्र। बुध गविष्ठिर आत्रेय। वत्सप्रि भालन्दन। पायु भारद्वाज। गय आत्रेय द्वित मृक्तवाहा आत्रेय। वसूयव आत्रेय। पूरु आत्रेय। वामदेव अथवा कश्यप मारीच अथवा मनु वैवश्वत अग्नि तापस। वामदेव, कश्यप, असित अथवा देवल। सोमाहुति भार्गव। दीर्घतमा औचथ्य। गोतम राहुगण। त्रित आप्त्य। इरिम्बिठि काण्व। विश्वमना वैयश्व। ऋजिश्वा भारद्वाज। प्रयोग भार्गव अथवा सौभरि काण्व।

**छन्द–** अग्नि। इन्द्र। ब्रह्मणस्पति। यूप। पूषा। विश्वेदेवा। अङ्गिरा। पवमान सोम। अदिति।

**देवता–** गायत्री। बृहती। त्रिष्टुप्। जगती। अनुष्टुप्। उष्णिक्।

### प्रथमः खण्डः

पहिलो खण्ड

**अग्न आ याहि वीतये गृणानो हव्यदातये। नि होता सत्सि बर्हिषि ॥१॥**

हे प्रकाशक र सर्वव्यापक अग्निदेव ! हविलाई गति दिनका लागि तिमी आऊ। सबैले तिम्रो स्तुति गर्दछन्। यज्ञमा हामी तिम्रो स्वागत गर्दछौं, किनभने तिमी नै सबै पदार्थ प्रदान गर्दछौ।

**त्वमग्ने यज्ञानां होता विश्वेषां हितः। देवेभिर्मानुषे जने ॥२॥**

हे अग्निदेव ! तिमी समस्त देवशक्तिलाई एकत्र गर्ने, सम्पूर्ण यज्ञका होता र देवतालाई आह्वान गर्ने भएकाले मानिसका यज्ञमा देवताहरूबाट होता निर्धारित गरिएका छौ।

**अग्निं दूतं वृणीमहे होतारं विश्ववेदसम्। अस्य यज्ञस्य सुक्रतुम् ॥३॥**

हे सर्वज्ञाता अग्निदेव ! तिमी यज्ञका विधाता हौ। सम्पूर्ण देवशक्तिलाई सन्तुष्ट राख्न तिमी समर्थ छौ। यज्ञको विधि र व्यवस्थाका स्वामी तिमी नै हौ। यस्तो सामर्थ्य भएका तिमीलाई हामी देवदूतका रूपमा स्वीकार गर्दछौं।

**अग्निर्वृत्राणि जङ्घनद्द्रविणस्युर्विपन्यया। समिद्धः शुक्र आहुतः ॥४॥**

सत्प्रयासबाट प्रसन्न भएर याजकलाई प्रसन्नता प्रदान गर्ने हे प्रदीप्त अग्निदेव ! हामीलाई बन्धनमा राख्ने खालका दुष्ट प्रवृत्ति विनाश गर।

**प्रेष्ठं वो अतिथिं स्तुषे मित्रमिव प्रियम्। अग्ने रथं न वेद्यम् ॥५॥**

हे अग्निदेव ! उपासकको अभिलाषा पूरा गर्ने, सधैँ सबैमाथि कृपा गर्ने, मित्रजस्तो व्यवहार गर्ने तिमी हाम्रो प्रार्थनाले प्रसन्न होऊ।

**त्वं नो अग्ने महोभिः पाहि विश्वस्या अरातेः। उत द्विषो मर्त्यस्य ॥६॥**

हे अग्नि ! संसारसित द्वेष गर्ने व्यक्ति र शत्रुबाट हाम्रो रक्षा गर तथा विषम परिस्थितिमा हामीलाई धैर्यवान् बनाऊ।

**एह्यू षु ब्रवाणि तेऽग्न इत्थेतरा गिरः। एभिर्वर्धास इन्दुभिः ॥७॥**

हामी तिम्रै लागि स्तुति गर्दछौँ। तिमी स्तुति सुनेर प्रकट होऊ र यस सोमरसले आफ्नो महानता विस्तार गर।

**आ ते वत्सो मनो यमत्परमाच्चित्सधस्थात्। अग्ने त्वा कामया गिरा ॥८॥**

सर्वव्यापी प्रदीप्त हे अग्निदेव ! हामी तिम्रा पुत्र हौँ, हृदयदेखि नै स्तुति गर्दै तिमीलाई आफूतिर आकर्षित गर्न चाहन्छौँ।

**त्वामग्ने पुष्करादध्यथर्वा निरमन्थत। मूर्ध्नो विश्वस्य वाघतः ॥९॥**

परम श्रेष्ठ, अखिल विश्व धारण गर्ने हे अग्निदेव ! अथर्वाले तिमीलाई विश्वका महान्तम आधारका रूपमा अरणीमन्थनद्वारा प्रकट गरे।

**अग्ने विवस्वदा भरास्मभ्यमूतये महे। देवो ह्यसि नो दृशे ॥१०॥**

हे अग्निदेवता ! हाम्रो श्रेष्ठता रक्षा गर्नका लागि हामीलाई तिमी उपयुक्त आवास प्रदान गर। तिमी प्रकाशहरूमा सर्वश्रेष्ठ प्रकाशवान् छौ र तिमी नै समर्थ तथा शक्तिशाली छौ।

**इति प्रथमः खण्डः**

पहिलो खण्ड समाप्त भयो

***

## द्वितीयः खण्डः

दोस्रो खण्ड

**नमस्ते अग्न ओजसे गृणन्ति देव कृष्टयः। अमैरमित्रमर्दय ॥१॥**

हे दिव्य क्षमताले सम्पन्न अग्निदेव ! समस्त साधकहरू तिमीलाई नमस्कार गर्दछन्। तिमी अहितकारीका विनाशक हुनाले तिनीहरूलाई संहार गर।

**दूतं वो विश्ववेदसं हव्यवाहममर्त्यम्। यजिष्ठमृञ्जसे गिरा ॥२॥**

सम्पूर्ण ज्ञानले सम्पन्न हे अग्निदेव ! तिमी हविवाहक हौ। समस्त देवशक्तिका प्रतिनिधि तिमी यज्ञका साधनरूप हौ। तिमीसित हामी स्तुतिका माध्यमबाट अनुकूल भइदिन प्रार्थना गर्दछौँ। तिमी सधैँ कृपावान् भइराख।

**उप त्वा जामयो गिरो देदिशतीर्हविष्कृतः। वायोरनीके अस्थिरन् ॥३॥**

हे अग्निदेव ! यजमानका वाणीले उच्चरित हुने प्रिय स्तुतिले तिम्रो गुण प्रकट गर्दछन्। उनीहरू वायुका सहयोगले तिमीलाई प्रदीप्त गर्दछन्।

**उप त्वाग्ने दिवेदिवे दोषावस्तर्धिया वयम्। नमो भरन्त एमसि ॥४॥**

हे प्रचुर तेजले सम्पन्न अग्निदेव ! हामी तिम्रा सच्चा उपासक हौँ। तिमीबाटै प्रेरित भएका सद्‌बुद्धिले हामी तिम्रो स्तुति गरिरहेका छौँ। हामी दिनरात निरन्तर तिम्रो गुणगान गर्दछौँ। हे अग्निदेव ! हामीलाई तिम्रो निकटता प्राप्त भइरहोस्।

**जराबोध तद्विविड्ढि विशेविशे यज्ञियाय। स्तोमं रुद्राय दृशीकम् ॥५॥**

स्तुतिवाक्यद्वारा देवताहरूलाई जागृत गराउने हे अग्निदेव ! यी यजमानले पवित्र स्थलका दुष्टतालाई विनाश गरून् भनेर हामी तिमीलाई आह्वान गर्दछौँ।

**प्रति त्यं चारुमध्वरं गोपीथाय प्र हूयसे। मरुद्भिरग्न आ गहि ॥६॥**

हे अग्निदेव ! श्रेष्ठ यज्ञको गरिमा संरक्षण गर्नका लागि मरुत्‌हरूसँगै तिमीलाई आह्वान गर्दछौँ। देवताहरूका लागि गरिएका यस यज्ञमा तिमी आऊ।

**अश्वं न त्वा वारवन्तं वन्दध्या अग्निं नमोभिः। सम्राजन्तमध्वराणाम् ॥७॥**

सूर्यजतै अन्धकार विनाशक, यज्ञका अधिपति हे अग्निदेव ! हामी तिमीलाई स्तुति र वन्दना गर्दछौँ। घोडाका पुच्छरका रौँले झिँगा भगाएझैँ तिमी आफ्ना ज्वालाले हाम्रा विरोधीहरूलाई टाढा पन्छाइदेऊ।

**और्वभृगुवच्छुचिमप्नवानवदा हुवे। अग्निं समुद्रवाससम् ॥८॥**

समुद्रमा वास गर्ने हे अग्निदेव ! भृगु र अप्नवान् आदि ज्ञानी ऋषिले साँच्चो मनले तिम्रो प्रार्थना गरेका छन्। हामी पनि हृदयदेखि नै तिम्रो स्तुति गर्दछौँ।

**अग्निमिन्धानो मनसा धियं सचेत मर्त्यः। अग्निमिन्धे विवस्वभिः ॥९॥**

मन लगाएर अग्नि प्रदीप्त गर्ने साधकले आफ्नो श्रद्धा प्रदीप्त गराउँछ। हामी सूर्यको किरणसँगै अग्निहोत्रको व्यवस्था गर्दछौँ।

**आदित्प्रत्नस्य रेतसो ज्योतिष्पश्यन्ति वासरम्। परो यदिध्यते दिवि ॥१०॥**

द्युलोकभन्दा पर स्वयं प्रकाशित सविता र दिउँसो देखिने सूर्यले सबै प्राचीनतम तेजस्वी स्वरूपमा इन्द्रदेवकै तेज देखेका छन्।

## इति द्वितीयः खण्डः

दोस्रो खण्ड समाप्त भयो

***

## तृतीयः खण्डः

तेस्रो खण्ड

**अग्निं वो वृधन्तमध्वराणां पुरूतमम्। अच्छा नप्त्रे सहस्वते ॥१॥**

हे ऋत्विक् हो ! आफ्ना श्रेष्ठतम पारमार्थिक कार्यमा सहायक, अति श्रेष्ठ, सबैका हितैपि र बलशाली अग्निदेवका निकट रहौँ।

**अग्निस्तिग्मेन शोचिषा यं सद्विश्वं न्यत्रिणम्। अग्निर्नो वंसते रयिम् ॥२॥**

हे अग्निदेव ! तिमी आफ्ना प्रज्वलित, तीक्ष्ण ज्वालाले विघ्नकारक तत्त्व नष्ट गर अनि जसले तिम्रो उपासना र स्तुति गर्दछन्, तिनलाई बल तथा ऐश्वर्य प्रदान गर।

**अग्ने मृड महाँ असि य ईमा देवयुं जनम्। इयेथ बर्हिरासदम् ॥३॥**
हे अग्निदेव ! उपासकलाई समृद्ध र सुखी बनाऊ। तिमी सामर्थ्यवान् र महान् छौ। उपासक यजमानका नजिकै पवित्र कुशका आसनमा बस्न आऊ।

**अग्ने रक्षा णो अंहसः प्रति ष्म देव रीषतः। तपिष्ठैरजरो दह ॥४॥**
हे अग्निदेव ! हामीलाई पापबाट बचाऊ। हाम्रो रक्षा गरेर तिमी आफ्ना अजरअमर र प्रखर तेजले हिंस्रक शत्रुको कामना भस्मीभूत गराऊ।

**अग्ने युंक्ष्वा हि ये तवाश्वासो देव साधवः। अरं वहन्त्याशवः ॥५॥**
हे ज्योतिपुञ्ज अग्निदेव ! तिमीलाई यज्ञका निम्ति वहन गर्ने कुशल र श्रेष्ठ अश्व रथमा नियोजित गर।

**नि त्वा नक्ष्य विश्पते द्युमन्तं धीमहे वयं। सुवीरमग्न आहुत ॥६॥**
हे आभायुक्त सुवीर अग्निदेव ! तिमीलाई हामी यहाँ प्रतिष्ठित गराउँछौं। हे उपास्य संसारका स्वामी ! तिमीलाई जुन याजकहरूले स्तुति गर्दछन् तिनीहरू सुखी हुन्छन्। हामी तिमीलाई आफ्ना मनमा धारण गर्दछौ।

**अग्निर्मूर्धा दिवः ककुत्पतिः पृथिव्या अयम्। अपां रेतांसि जिन्वति ॥७॥**
सर्वश्रेष्ठ देवता, आकाशका उच्चतम स्थानमा प्रतिष्ठित, पृथ्वीका स्वामी अग्निदेवतामा ओज स्थापित गरिएको छ, उनी जललाई गति प्रदान गर्नका लागि समर्थ छन्।

**इममू षु त्वमस्माकं सनिं गायत्रं नव्यांसम्। अग्ने देवेषु प्र वोचः ॥८॥**
हे अग्निदेव ! गायत्रीजस्तै प्राणपोषक हाम्रा स्तोत्र र नवीन अन्न देवताहरूसमक्ष तिमी पुऱ्याइदेऊ।

**तं त्वा गोपवनो गिरा चनिष्ठदग्ने अङ्गिरः। सपावक श्रुधी हवम् ॥११॥**
गोपवनका स्तुतिले प्रकट भएका, शरीरका अङ्गहरूमा सूक्ष्म रूपले विद्यमान, सबैलाई पवित्र गराउने हे अग्निदेव ! तिमी हाम्रो प्रार्थना ध्यानपूर्वक सुन। मानवशरीरमा रहेका चेतनाका सूक्ष्म केन्द्रहरू नै स्वास्थ्यका रहस्य हुन्।

**परि वाजपतिः कविरग्निर्हव्यान्क्रमीत्। दधद्रत्नानि दाशुषे ॥१०॥**
सर्वज्ञ, अन्नका स्वामी अग्निदेव याजकले दिएको हवनीय पदार्थ स्वीकार गर्दछन् र परमार्थको हित गर्न चाहनेलाई धनधान्यले परिपूर्ण बनाउँछन्।

**उदु त्यं जातवेदसं देवं वहन्ति केतवः। दृशे विश्वाय सूर्यम् ॥११॥**
सम्पूर्ण प्राणीका ज्ञाता सूर्यदेव अग्निलाई किरणका रूपमा स्वीका गरेर समस्त विश्वलाई दृष्टि प्रदान गर्नका लागि ज्योतिर्मयी रश्मि विशेष विधिले प्रकाशित गराएका छन्।

**कविमग्निमुप स्तुहि सध्यधर्माणमध्वरे। देवममीवचातनम् ॥१२॥**
हे ऋत्विक्हरू हो ! लोकहितकारी यज्ञमा रोग नष्ट गराउने ज्ञानवान् अग्निदेवको स्तुति तिमीहरू विशेष रूपले गर।

**शं नो देवीरभिष्टये शं नो भवन्तु पीतये। शं योरभि स्रवन्तु नः ॥१३॥**

हामीलाई सुखशान्ति प्रदान गर्ने जलप्रवाह प्रकट होस्। त्यो जल पिउने योग्य, कल्याणकारी र सुखकर होस्। शिरमाथि बर्सिने रोग हामीदेखि टाढा लगिदेओस्।

**कस्य नूनं परीणसो धियो जिन्वसि सत्पते। गोषाता यस्य ते गिरः ॥१४॥**

हे सत्यका रक्षक अग्निदेव ! तिमी कस्ता बुद्धिले प्रसन्न हुन्छौ ? तिमीलाई कसरी र कुन खालका स्तुति गर्नाले ज्ञानको साक्षात्कार हुन सक्दछ ?

## इति तृतीयः खण्डः

तेस्रो खण्ड समाप्त भयो

***

## चतुर्थः खण्डः

चौथो खण्ड

**यज्ञायज्ञा वो अग्नये गिरागिरा च दक्षसे। प्रप्र वयममृतं जातवेदसं प्रियं मित्रं न शंसिषम् ॥१॥**

सर्वज्ञ, अमर, हितकारी, मित्रजस्ता अग्निदेवलाई हामी प्रशंसा गर्दछौँ। हे उद्‌गाताहरू हो ! प्रत्येक स्तुति र यज्ञको आयोजनामा उनै बलशाली अग्निदेवलाई स्तुति गर।

**पाहि नो अग्न एकया पाह्युश्त द्वितीयया। पाहि गीर्भिस्तिसृभिरूर्जाम्पते पाहि चतसृभिर्वसो ॥२॥**

सबैलाई स्थापित गर्ने हे अग्निदेव ! पहिलो स्तुतिले रक्षा गर, दोस्रो स्तुतिले अभय प्रदान गर र तेस्रो स्तुतिले संरक्षण प्रदान गर। हे ऊर्जाका स्वामी ! तिमी चौथो स्तुतिले हामी सबैको पालन गर।

**बृहद्भिरग्ने अर्चिभिः शुक्रेण देव शोचिषा। भरद्वाजे समिधानो यविष्ठ्य रेवत्पावक दीदिहि ॥३॥**

हे ठूलो ज्वाला युक्त तरुण अग्निदेव ! सम्पन्नता र पवित्रता प्रदान गर्ने तिमी महान् छौ। तिमी आफ्ना प्रखर तेजले अत्यन्त तेजस्वीरूपमा प्रज्वलित भएर भरद्वाजका लागि ऐश्वर्य प्रदान गर।

**त्वे अग्ने स्वाहुत प्रियासः सन्तु सूरयः। यन्तारो ये मघवानो जनानामूर्वान्दयन्त गोनाम् ॥४॥**

हे अग्निदेव ! अग्निमा उत्तम कार्य गर्ने विद्वान्हरू, धनको लगानी गर्नेहरू, प्रजाको व्यवस्था बनाउनेहरू र गाई पालन गर्नेहरू तिम्रो कृपाका पात्र बनून्।

**अग्ने जरितर्विश्पतिस्तेपानो देव रक्षसः। अप्रोषिवान्गृहपतिमर्महाँ असि दिवस्पायुर्दुरोणयुः ॥५॥**

हे ज्ञानस्वरूप अग्निदेव ! तिमी प्रजाको रक्षण र पोषण गर्दै आसुरी प्रकृतिलाई दुःख दिन्छौ। हे द्युलोकका रक्षक ! घरका स्वामी भएर सधैँ घरैमा वन्दनीय हुन्छौ।

तिमीलाई ज्यादै श्रद्धापूर्वक जागृत गराउँछन्। हे अग्निदेव ! आलस्यहीन होताको हव्य देवतासम्म पुऱ्याउँछौ र स्वयं उनीहरूका माझमा सुशोभित हुन्छौ।

**अदर्शि गातुवित्तमो यस्मिन्व्रतान्यादधुः। उपो षु जातमार्यस्य वर्धनमग्निं नक्षन्तु नो गिरः ॥३॥**

धर्ममार्गका ज्ञाता अग्निदेव प्रकट भएका छन्, उनीबाट यज्ञको नियम पूरा हुन्छ। उत्तम मार्गबाट प्रकट हुने, सज्जनको प्रगतिका आधार अग्निदेव हाम्रो स्तुति स्वीकार गरून्।

**अग्निरुक्थे पुरोहितो ग्रावाणो बर्हिरध्वरे। ऋचा यामि मरुतो ब्रह्मणस्पतिं देवाँ अवो वरेण्यम् ॥४॥**

स्तुतिले यज्ञ सम्पन्न गर्न पुरोहित, अग्नि, ग्रावा र कुशआसन आदि स्थापित छन्। हे मरुत्हरू हो ! हे ब्रह्मणस्पतिदेव ! हे देवताहरू हो ! हामी वेदमन्त्रले तिमीहरूसित श्रेष्ठ रक्षणको कामना गर्दछौँ।

**अग्निमीडिष्वावसे गाथाभिः शीरशोचिषम्। अग्निं राये पुरुमीढह श्रुतं नरोऽग्निं सुदीतये छर्दिः ॥५॥**

हे स्तोता हो ! विस्तृत एवं विकराल ज्वाला भएका अग्निदेवको स्तुति गर। उद्गाताले उनै प्रसिद्ध अग्निदेवसित धन र प्रकाशयुक्त आवास प्राप्तिका लागि प्रार्थना गरून्।

**श्रुधि श्रुत्कर्ण वह्निभिर्देवैरग्ने सयावभिः। आ सीदतु बर्हिषि मित्रो अर्यमा प्रातर्यावभिरध्वरे ॥६॥**

प्रार्थनमाथि ध्यान दिने हे अग्निदेव ! हाम्रो स्तुति स्वीकार गर। दिव्य अग्निदेवजस्तै गतिमा हिँड्ने मित्र, अर्यमा आदि देवगण प्रातःकालीन यज्ञमा आएर बसून्।

**प्र दैवोदासो अग्निर्देव इन्द्रो न मज्मना। अनु मातरं पृथिवीं वि वावृते तस्थौ नाकस्य शर्मणि ॥७॥**

इन्द्रदेवजस्तै शक्तिशाली अग्निदेव दिवोदासका लागि पृथ्वीमा प्रकट भए। आफ्ना यज्ञीय कार्यको परिणामस्वरूप दिवोदास नै स्वर्गका अधिकारी भए।

**अध ज्मो अध वा दिवो बृहतो रोचनादधि। अया वर्धस्व तन्वा गिरा ममा जाता सुक्रतो पृण ॥८॥**

हे इन्द्रदेव उत्तम यज्ञका आधार पृथ्वी र द्युलोकमा तिमी आफ्नो आभा विस्तार गर र आफ्ना प्रेरणाले हाम्रा सहयोगीलाई पोषण प्रदान गर।

**कायमानो वना त्वं यन्मातॄरजगन्नपः। न तत्ते अग्ने प्रमृषे निवर्तनं यद्दूरे सन्निहाभुवः ॥९॥**

हे अग्निदेव ! तिमी पदार्थका मूल घटकहरूलाई एकत्र गर्नमा समर्थ छौ, वनलाई आकार प्रदान गर्ने हौ। तिमी मातारूपी जलका नजिक शान्त भावमा रहेर सबै पदार्थहरूलाई उत्पन्न गर्दछौ। तिम्रो समाप्ति हामीलाई सहन नहोस्। तिमी टाढा भएर पनि हाम्रा नजिकै प्रकट हुन्छौ।

**नि त्वामग्ने मनुर्दधे ज्योतिर्जनाय शश्वते। दीदेथ कण्व ऋतजात उक्षितो यं नमस्यन्ति कृष्टयः ॥१०॥**

हे अग्निदेव ! विचारवान् व्यक्तिले तिमीलाई वरण गर्दछन्। अनादि कालदेखि नै मानव जातिका लागि तिम्रो ज्योति प्रकाशित छ। तिम्रो प्रकाश आश्रमका ज्ञानवान् ऋषिहरूमा उत्पन्न हुने गर्दछ। यज्ञमा नै तिम्रो प्रज्वलित रूप प्रकट हुन्छ। त्यस बेला सबै मानिसहरू तिमीलाई नमस्कार गर्दछन्।

## इति पञ्चमः खण्डः

पाँचौं खण्ड समाप्त भयो

***

## षष्ठः खण्डः

छैटौं खण्ड

**देवो वो द्रविणोदाः पूर्णां विवष्ट्वासिचम्। उद्वा सिञ्चध्वमुप वा पृणध्वमादिद्वो देव ओहते ॥१॥**

हे याजकहरू हो ! तिमीहरूबाट धन प्रदाता अग्निदेवले भाव र पात्रमा पूर्ण आहुतिको अपेक्षा गर्दछन्। तिमीहरू उनलाई पूर्ण सिञ्चित गर। त्यसो भएपछि ती देवताले तिम्रा कार्यलाई वहन गर्दछन्।

**प्रैतु ब्रह्मणस्पतिः प्र देव्येतु सूनृता। अच्छा वीरं नर्यं पङ्क्तिराधसं देवा यज्ञं नयन्तु नः ॥२॥**

ब्रह्मणस्पति हाम्रो अनुकूल भएर यज्ञमा आऊन्। हामीलाई सत्यरूप दिव्य वाणी प्राप्त होस्। मनुष्यका हितकारी देवगण हाम्रा यज्ञमा पङ्क्तिबद्ध भएर अधिष्ठित होऊन्, शत्रु विनाश गरून् र हामीलाई मानवकल्याणका मार्गमा लैजाऊन्।

**ऊर्ध्व ऊ षु ण ऊतये तिष्ठा देवो न सविता। ऊर्ध्वो वाजस्य सनिता यदञ्जिभिर्वाघद्भिर्विह्वयामहे ॥३॥**

हे काठरूपी पवित्र स्थानमा रहने अग्निदेव ! सर्वोत्पादक सवितादेवले अन्तरिक्षबाट हामी सबैको रक्षा गर्दछन्। मन्त्रोच्चारणपूर्वक हवि प्रदान गर्ने याजकहरूले तिम्रा उत्कृष्ट स्वरूपको आह्वान गरेका छन्।

**प्र यो राये निनीषसि मर्तो यस्ते वसो दाशत्। स वीरं धत्ते अग्न उक्थशंसिनं त्मना सहस्रपोषिणम् ॥४॥**

सबैका आधार बनेका हे अग्निदेव ! ऐश्वर्यका लागि तिम्रो उपासक बनेर हवि प्रदान गर्ने साधक हजारौं व्यक्तिको पोषण गर्न सक्षम वीर पुत्र उत्पन्न गर्न समर्थ हुन्छन्।

**प्र वो यह्वं पुरूणां विशां देवयतीनाम्। अग्निं सूक्तेभिर्वचोभिर्वृणीमहे यं समिदन्य इन्धते ॥५॥**

हामी ऋत्विक्‌हरू आफ्ना साधारण वाक्यले व्यक्तिमा देवत्व विकास गर्ने महानताको वर्णन गर्दछौं। त्यस महानताको वर्णन ऋषिहरूले राम्रोसित गरेका छन्।

**अयमग्निः सुवीर्यस्येशे महः सौभगस्य। राय ईशे स्वपत्यस्य गोमत ईशे वृत्रहथानाम् ॥६॥**

अग्निदेव महान् पुरुषार्थ, सौभाग्य, धन, ऐश्वर्य र असल सन्तानका अधिपति हुन्। गाईका रक्षक र वृत्रको नाश गराउने स्वामी उनै हुन्।

**त्वमग्ने गृहपतिस्त्वं होता नो अध्वरे। त्वं पोता विश्ववार प्रचेता यक्षि यासि च वार्यम् ॥७॥**

हे अग्निदेव ! तिमी यस यज्ञका होता र गृहपतिजस्तै हौ। तिमी सबै जनाबाट स्वीकार गर्न योग्य छौ र सबैलाई पवित्र गराउँछौ। तिमी श्रेष्ठ ज्ञानी हौ र धन आदि प्राप्त गरेर वितरण गर्दछौ।

**सखायस्त्वा ववृमहे देवं मर्तास ऊतये। अपां नपातं सुभगं सुदंससं सुप्रतूर्तिमनेहसम् ॥८॥**

हे उत्तमकर्मा, उत्तम ऐश्वर्ययुक्त, निष्पाप, पापनाशक, पानीलाई तल खस्न नदिने अग्निदेव ! संरक्षण पाउनका लागि हामी मानिसहरू तिम्रो मित्रभाव र निकटता स्वीकार गर्दछौँ।

## इति षष्ठः खण्डः

छैटौँ खण्ड समाप्त भयो

***

## सप्तमः खण्डः

सातौँ खण्ड

**आ जुहोता हविषा मर्जयध्वं नि होतारं गृहपतिं दधिध्वम्। इडस्पते नमसा रातहव्यं सपर्यता यजतं पस्त्यानाम् ॥१॥**

हे ऋत्विक्हरू हो ! सर्वत्र शुद्धता बढाउनका लागि तिमीहरू यज्ञ गर। हवनीय पदार्थका साथै गृहपति अग्निको पनि स्थापना गर र स्तुति गर्दै उनको सम्मान गर।

**चित्र इच्छिशोस्तरुणस्य वक्षथो न यो मातरावन्वेति धातवे। अनूधा यदि जीजनदधा चिदा ववक्षत्सद्यो महि दूत्यां३चरन् ॥२॥**

शिशु अवस्थाबाट सोभ्कै युवक हुने गरेका अग्निदेवको क्रम ज्यादै अद्भुत छ। उनी उत्पन्न भएपछि आफ्ना स्तनविनाका दुवै मातासँग दुध खान गइरहँदैनन्, बरु त गतिलो दूतको भूमिका निर्वाह गर्न थालेर सोभ्कै देवताकहाँ हवि पुऱ्याउँछन्।

**इदं त एकं पर ऊ त एकं तृतीयेन ज्योतिषा सं विशस्व। संवेशने तन्वे३ चारुरेधि प्रियो देवानां परमे जनित्रे ॥३॥**

हे मृत्युको गाँस बनेका मृतक पुत्र ! तिम्रो एक अंश अग्नि हुन्, दोस्रो अंश वायु हुन् र तेस्रो अंश ज्योतिरूप आत्मतत्त्व हो। ती तीनैबाट संयुक्त भएका हे पुरुष ! तेजस्वी रूप प्राप्त गर। पवित्र स्थानमा रहेर देवशक्तिको प्रिय र श्रेष्ठ बन।

**इमं स्तोममर्हते जातवेदसे रथमिव सं महेमा मनीषया। भद्रा हि नः प्रमतिरस्य संसद्यग्ने सख्ये मा रिषामा वयं तव ॥४॥**

पूजनीय र सर्वज्ञानसम्पन्न अग्निलाई यज्ञमा प्रकट गराउनका लागि रथझैँ विचारपूर्वक स्तुति गरिएको छ। यस यज्ञाग्निका सम्पर्कले हाम्रो बुद्धि कल्याणकारी बन्दछ। हे अग्निदेव ! तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

**मूर्धानं दिवो अरतिं पृथिव्या वैश्वानरमृत आ जातमग्निम्। कविं सम्राजमतिथिं जनानामासन्ना पात्रं जनयन्त देवाः ॥५॥**

द्युलोकको सबैभन्दा माथि बस्ने, भूलोकका स्वामी, वैश्वानर अग्निदेव सबै प्राणीभित्र छन्। ज्ञानी अतिथिजस्ता र पूज्य देवताहरूका मुखरूपी अग्निदेवलाई देवताहरूले नै प्रकट गरेका हुन्।

**वि त्वदापो न पर्वतस्य पृष्ठादुक्थेभिरग्नेजनयन्त देवाः। तं त्वा गिरः सुष्टुतयो वाजयन्त्याजिं न गिर्ववाहो जिग्युरश्वाः ॥६॥**

हे इन्द्रदेव ! पर्वतको माथिल्लो भागबाट जल प्रवाहित भएझैँ यज्ञकर्म र स्तुति गर्नाले मानिसलाई तिमीबाट मनोवाञ्छित फल प्राप्त हुन आउँछन्। हे स्तुतिले पूजा गरिने इन्द्रदेव ! युद्धक्षेत्रमा तीव्र गतिले अश्व गएझैँ अन्न प्राप्तिको इच्छा भएका भरद्वाज आदि तिमीकहाँ आइपुग्दछन्।

**आ वो राजानमध्वरस्य रुद्रं होतारं सत्ययजं रोदस्योः। अग्निं पुरा तनयित्नोरचित्ताद्धिरण्यरूपमवसे कृणुध्वम् ॥७॥**

हे सत्पुरुष हो ! चञ्चल बिजुलीजस्तै आउने मृत्युभन्दा पहिले आफ्नो रक्षा गर्नका लागि यज्ञका स्वामी, देवता निम्त्याउने, रुद्रका रूपजस्ता, द्यावापृथिवीका बीचमा वास्तविक यजन प्रक्रिया चलाउने, सुनौलो आभायुक्त अग्निदेवलाई घोषणापूर्वक प्रकट गरेका छन्।

**इन्धे राजा समर्यो नमोभिर्यस्य प्रतीकमाहुतं घृतेन। नरो हव्येभिरीडते सबाध आग्निरग्रमुषसामशोचि ॥८॥**

असल शासकजस्ता अग्निदेवलाई वन्दनापूर्वक अन्न र घिउले प्रज्वलित गर्दै छौँ। मानिसहरू निरन्तर आहुतिले अग्निदेवको यजन गर्दछन् र घिउले संवर्द्धन गर्छन्। अग्निदेव उषाहरूभन्दा पहिले प्रकाशित हुन्छन्।

**प्र केतुना बृहता यात्यग्निरा रोदसी वृषभो रोरवीति। दिवश्चिदन्तादुपमामुदानडपामुपस्थे महिषो ववर्ध ॥९॥**

अग्निदेव धुवाँरूपी विशाल पताकाले युक्त भएर द्युलोक र पृथ्वीमा व्याप्त छन्। उनी देवता आह्वान गर्ने बेलामा साँढे डुक्रिएझैँ शब्द निकाल्छन्। उनी द्युलोकनजिकै व्याप्त रहन्छन् र जलको आश्रयस्थल अन्तरिक्षमा विद्युत्‌का रूपमा संवर्द्धित हुन्छन्।

**अग्निं नरो दीधितिभिररण्योर्हस्तच्युतं जनयत प्रशस्तम्। दूरेदृशं गृहपतिमथव्युम् ॥१०॥**

प्रशंसनीय, गतिमान, परैबाट देखा पर्ने गृहपतिको रूपमा रहेका अग्निलाई असल मानिसले हातका औँलाका कुशलताले अरणी मन्थन गरेर प्राप्त गरे।

## इति सप्तमः खण्डः

सातौँ खण्ड समाप्त भयो

***

## अष्टमः खण्डः

आठौँ खण्ड

**अबोध्यग्निः समिधा जनानां प्रति धेनुमिवायतीमुषासम्। यह्वाइव प्र वयामुज्जिहानाः प्र भानवः सस्रते नाकमच्छ ॥१॥**

उषाकालमा गाई जागेझैँ याजकका समिधाले प्रज्वलित भई जागेका दिव्य ज्वाला रुखको हाँगो मौलाएझैँ द्युलोकसम्म फैलिन्छन्।

**प्र भूर्जयन्तं महां विपोधां मूरैरमूरं पुरां दर्माणम्। नयन्तं गीर्भिर्वना धियं धा हरिश्मश्रुं न वर्मणा धनर्चिम् ॥२॥**

हे स्तोता हो ! पशुका विजेता, महिमायुक्त र ज्ञानीलाई धारण गर्ने अग्निदेवको स्तुति गर्न योग्य होओ। सबै ज्ञानी मानिस शत्रुको सहर विनाशक, गर्भमा झैँ अरणीभित्र रहने, प्रशंसनीय, हरियो आभायुक्त, तेजस्वी ज्वालायुक्त र स्तुतिप्रेमी अग्निदेवलाई हविष्यान्न समर्पित गरेर आफ्नो अभीष्ट फल उपलब्ध गर्दछन्।

**शुक्रं ते अन्यद्यजतं ते अन्यद्विषुरूपे अहनी द्यौरिवासि। विश्वा हि माया अवसि स्वधावो भद्रा ते पूषन्निह रातिरस्तु ॥३॥**

हे पूषादेव ! तिम्रो एउटा सफा रूप दिन हो भने अर्को रूप रात्रि हो। परस्पर विरोधी यी दुवै तिम्रा रूप आआफ्ना महिमाले उद्भासित छन्। हे पोषणकर्ता पूषादेव ! द्युलोकझैँ आभासम्पन्न तिमी सम्पूर्ण जीवजगत्को रक्षा गर्दछौ। तिम्रो कल्याणकारी अनुदान हामीलाई प्राप्त होस्।

**इडामग्ने पुरुदंसं सनिं गोः शश्वत्तमं हवमानाय साध। स्यान्नः सूनुस्तनयो विजावाग्ने सा ते सुमतिर्भूत्वस्मे ॥४॥**

हे अग्निदेव ! यज्ञ आदि कार्यका लागि, अनेकौँ सत्कर्मका लागि र गाईको स्याहारका लागि उचित भूमि हामीलाई प्रदान गर। हाम्रा पुत्रले सन्तान बढाऊन्। तिम्रो सद्बुद्धि हामीलाई पनि प्राप्त होस्।

**प्र होता जातो महान्नभोविन्नृषद्मा सीददपां विवर्ते। दधद्यो धायि सुते वयांसि यन्ता वसूनि विधते तनूपाः ॥५॥**

मानवजातिका प्रत्येक घर र मेघका बीचमा विद्युत्का रूपमा यज्ञका अग्नि प्रतिष्ठित छन्। राम्रोसित प्रतिष्ठित अग्निदेव उपासकलाई अन्न प्रदान गर्ने र शरीरका संरक्षक सिद्ध हुन्छन्।

**प्र सम्राजमसुरस्य प्रशस्तं पुंसः कृष्टीनामनुमाद्यस्य। इन्द्रस्येव प्र तवसस्कृतानि वन्दद्वारा वन्दमाना विवष्टु ॥६॥**

शत्रुका सहर ध्वस्त गर्ने वीरलाई हामी वन्दना गर्दछौँ। असुर र वीर मानिसले स्तुति गरका सम्राट् इन्द्रजस्ता बलवान् अग्निका कार्यको हामी स्तुति र बयान गर्दछौँ।

**अरण्योर्निहितो जातवेदा गर्भ इवेत्सुभृतो गर्भिणीभिः। दिवेदिव ईड्यो जागृवद्भिर्हविष्मद्भिर्मनुष्येभिरग्नि ॥७॥**

गर्भिणीका पेटमा सुरक्षित गर्भजस्तै सर्वज्ञ अग्निदेव अरणीभित्र अटाएर बसेका हुन्छन्। यज्ञका लागि जागरुक रहने हुनाले होताहरूले सधैँ वन्दना गर्दछन्।

**सनादग्ने मृणसि यातुधानान्न त्वा रक्षांसि पृतनासु जिग्युः। अनु दह सहमुरान्कयादो मा ते हेत्या मुक्षत दैव्यायाः ॥८॥**

हे ज्ञानवान्, बलशाली अग्निदेव ! सधैँ तिमी राक्षसलाई दल्दै आएका छौ। तिनलाई युद्धमा परास्त गराएका छौ। क्रूर प्रकृतिका, अभक्ष्य आहार खाने दुष्टलाई तिमी नाश गर। तिम्रो तेजबाट तिनीहरू जोगिन नसकून्।

## इति अष्टमः खण्डः

आठौँ खण्ड समाप्त भयो

***

## नवमः खण्डः

नवौँ खण्ड

**अग्न ओजिष्ठमा भर द्युम्नमस्मभ्यमध्रिगो। प्र नो राया पनीयसे रत्सि वाजाय पन्थाम् ॥१॥** [२]

हे निर्बाध गति भएका अग्निदेव ! ओजस्विता प्रदान गर्ने सम्पदा हामीलाई प्रदान गर। हे देव ! हामीलाई प्रशंसनीय धन र शक्ति प्राप्त हुने मार्ग देखाऊ।

**यदि वीरो अनु ष्यादग्निमिन्धीत मर्त्यः। आजुह्वद्धव्यमानुषक् शर्म भक्षीत दैव्यम् ॥२॥**

वीर पुत्र प्राप्तिका लागि मानिसले अग्निलाई प्रदीप्त गरून् र सधैँभरि हवनीय पदार्थ प्रयोग गर्दै दिव्य सुख प्राप्त गर्ने मार्ग प्रशस्त गराऊन्।

**त्वेषस्ते धूम ऋण्वति दिवि षञ्छुक्र आततः। सूरो न हि द्युता त्वं कृपा पावक रोचसे ॥३॥**

प्रदीप्त भइसकेपछि अग्निको सेतो धुवाँ अन्तरिक्षमा फैलिएको देखिन्छ। हे पावन अग्निदेव ! स्तुतिका प्रभावले तिमी प्रकाशित हुन्छौ।

**त्वं हि क्षैतवद्यशोऽग्ने मित्रो न पत्यसे। त्वं विचर्षणे श्रवो वसो पुष्टिं न पुष्यसि ॥४॥**

हे अग्निदेव ! तिमी सबैका मित्र हौ। अन्न र तेजका अधिपति हौ। हे अग्निदेव ! तिमी सर्वद्रष्टा हौ, पोषक पदार्थले हामीलाई पुष्ट बनाऊ।

**प्रातरग्निः पुरुप्रियो विश स्तवेतातिथिः। विश्वे यस्मिन्नमर्त्ये हव्यं मर्तास इन्धते ॥५॥**

अग्निदेव सबैका लागि प्रिय छन्। यिनी बिहानीको सवनमा प्रजाहरूका अतिथिझैँ पूजनीय र स्तुत्य हुन्छन्। अविनाशी अग्निदेव यजमानसित सबै खालका हव्य पदार्थ प्राप्त गर्दछन्।

**यद्वाहिष्ठं तदग्नये बृहदर्च विभावसो। महिषीव त्वद्रयिस्त्वद्वाजा उदीरते ॥६॥**

अग्निदेवको स्तुति शीघ्र प्रभावकारी स्तोत्रले गरिन्छ। दीप्तिमान् अग्निदेव हामीलाई मनग्गे धनधान्य प्रदान गर्ने कृपा गरून्।

**विशोविशो वो अतिथिं वाजयन्तः पुरुप्रियम्। अग्निं वो दुर्यं वचः स्तुषे शूषस्य मन्मभिः ॥७॥**

अन्न र बल चाहने हे मानिस हो ! सर्वप्रिय र सर्वपूज्य अग्निदेवको स्तुति गर। हामी सबै ऋत्विक्हरू पनि यी गृहपति अग्निदेवलाई सुखदायक स्तोत्रले स्तुति गर्दछौँ।

**बृहद्वयो हि भानवेऽर्चा देवायाग्नये। यं मित्रं न प्रशस्तये मर्तासो दधिरे परः ॥८॥**

मित्रजस्तै, तेजस्वी अग्निदेवलाई स्तुति गर्नका लागि याजकहरू अगाडि स्थापित गरेर प्रचुर मात्रामा हविष्यान्नको आहुति प्रदान गर्दछन्।

**अगन्म वृत्रहन्तमं ज्येष्ठमग्निमानवम्। यः स्म श्रुतर्वन्नार्क्षे बृहदनीक इध्यते ॥९॥**

ऋक्षपुत्र श्रुतर्वाका लागि प्रचण्ड ज्वालाजस्ता, वृत्रसंहारक, श्रेष्ठ मानिसका हितकारी अग्निदेवलाई हामी वरण गर्दछौँ।

**जातः परेण धर्मणा यत्सवृद्भिः सहाभुवः। पिता यत्कश्यपस्याग्निः श्रद्धा माता मनुः कविः ॥१०॥**

पिता कश्यप, माता श्रद्धा र स्तोता मनु भएका अग्निदेव उत्तम कर्मद्वारा प्रारम्भ गरिएका यज्ञमा प्रकट हुन्छन्।

**इति नवमः खण्डः**

नवौँ खण्ड समाप्त भयो

***

## दशमः खण्डः

दसौँ खण्ड

**सोमं राजानं वरुणमग्निमन्वारभामहे। आदित्यं विष्णुं सूर्यं ब्रह्माणं च बृहस्पतिम् ॥१॥**

हामी आफ्नो संरक्षण र पालनका लागि राजा सोम, अग्निदेव, आदित्यगण, विष्णुदेव, सूर्यदेव, प्रजापति ब्रह्मा र बृहस्पतिदेवलाई स्त्रोत्रले आमन्त्रित गर्दछौँ।



**इत एत उदारुहन्दिवः पृष्ठान्या रुहन्। प्र भूर्जयो यथा पथोद्यामङ्गिरसो ययुः ॥२॥**

अङ्गिरस् ऋषिले श्रेष्ठ यज्ञका प्रभावले द्युलोक प्राप्त गरेका छन् र त्यसैका प्रभावले उनी माथिल्लो स्तरमा प्रतिष्ठित र स्थापित भएका छन्।

**राये अग्ने महे त्वा दानाय समिधीमहि। ईडिष्वा हि महे वृषं द्यावा होत्राय पृथिवी ॥३॥**

हे अग्निदेवता ! महान् ऐश्वर्य प्रदान गर्नका लागि तिमीलाई हामी समिधाले प्रदीप्त गराउँछौँ। हे यज्ञकर्ताहरू हो ! महान् यज्ञका लागि पृथ्वी एवं द्युलोकको स्तुति गर।

**दधन्वे वा यदीमनु वोचद्ब्रह्माणि वेरु तत्। परि विश्वानि काव्या नेमिश्चक्रमिवाभुवत् ॥४॥**

अग्निदेवलाई लक्ष्य गरेर यस यज्ञमा मन्त्रोच्चारण गर्दै हविष्यान्न समर्पित गरिएको कुरो अग्निदेव जान्दछन्। धुराका चारैतिर चक्र घुमेझैँ अग्निदेवका वरिपरि स्तुति घुम्दछन्।

**प्रत्यग्ने हरसा हरः शृणाहि विश्वतस्परि। यातुधानस्य रक्षसो बलं न्युब्जवीर्यम् ॥५॥**

आफ्ना तेजले आततायी असुर नष्ट गर्ने हे अग्निदेव ! यी असुरको बल र पराक्रम तिमी पूरै विनाश गरिदेऊ।

**त्वमग्ने वसूँरिह रुद्राँ आदित्याँ उत। यजा स्वध्वरं जनं मनुजातं घृतप्रुषम् ॥६॥**

वसु, रुद्र र आदित्य आदि देवताहरूको प्रसन्नताका लागि यज्ञ गर्ने हे अग्निदेव ! घिउको आहुतिले महान् यज्ञ सम्पन्न गर्ने मनुका सन्तानहरूलाई तिमी सत्कार गर।

## इति दशमः खण्डः

दसौँ खण्ड समाप्त भयो

***

## एकादशः खण्डः

एघारौँ खण्ड

**पुरु त्वा दाशिवाँ वोचेऽरिरग्ने तव स्विदा। तोदस्येव शरण आ महस्य ॥१॥**

अग्निदेव महान् सम्पत्तिशालीका शरणमा आएकाहरूको सेवकजस्तै छन्। हामीहरू उनका लागि आहुति प्रदान गर्दै स्तुति गान गर्दछौँ।

**प्र होत्रे पूर्व्यं वचोऽग्नये भरता बृहत्। विपां ज्योतींषि बिभ्रते न वेधसे ॥२॥**

हे ऋत्विक्हरू हो ! मेधावीहरूमा तेज, धारण गर्ने, प्रत्येक जनको उन्नति गराउने, देवतालाई बोलाइदिने अग्निदेवका लागि महान् र पुरातन स्तोत्र उच्चारण गर।

**अग्ने वाजस्य गोमत ईशानः सहसो यहो। अस्मे धेहि जातवेदो महि श्रवः ॥३॥**

बलपूर्वक उत्पन्न हुने हे ज्ञानसम्पन्न अग्निदेव ! तिमी अन्न र गाई आदि पशुधनले सम्पन्न छौ। हाम्रा लागि पनि तिमी अपार वैभव प्रदान गर।





**अग्ने यजिष्ठो अध्वरे देवान्देवयते यज। होता मन्द्रो विराजस्यति स्त्रिधः ॥४॥**
यज्ञमा पूजनीय, देवतालाई बोलाउने र शत्रुमाथि विजय प्राप्त गर्ने हे अग्निदेव ! तिमी याजक र देवताहरूका लागि यज्ञको नियम पूरा गराउँदै साह्रै राम्रा देखिन्छौ।

**जज्ञानः सप्त मातृभिर्मेधामशासत श्रिये। अयं ध्रुवो रयीणां चिकेतदा ॥५॥**
सात माताबाट उत्पन्न बुद्धिको शक्ति बढाउने प्रयत्नमा लागेको यस सोमले धनसम्पदा राम्ररी चिनेको छ।

**उत स्या नो दिवा मतिरदितिरूत्या गमत्। सा शन्ताता मयस्करदप स्रिधः ॥६॥**
हे देवताकी माता अदिति ! पूर्ण रक्षासाधनसँगै आऊ। शत्रु हनन गर र हामीलाई सुख र शान्ति प्रदान गर।

**ईडिष्वा हि प्रतीव्यां३ यजस्व जातवेदसम्। चरिष्णुधूममगृभीतशोचिषम् ॥७॥**
हे स्तोता हो ! शत्रुविजयी, अदम्य तेजयुक्त, सर्वव्यापी, धुवाँले सुशोभित, सर्वज्ञ अग्निदेवलाई तिमीहरू अर्चना गर।

**न तस्य मायया च न रिपुरीशीत मर्त्यः। यो अग्नये ददाश हव्यदातये ॥८॥**
आफूलाई हविष्यान्न आहुति प्रदान गर्ने यजमानमाथि कुनै पनि दुष्टका मायाको प्रभाव पर्न अग्निदेवले दिँदैनन्।

**अप त्यं वृजिनं रिपुं स्तेनमग्ने दुराध्यम्। दविष्ठमस्य सत्पते कृधी सुगम् ॥९॥**
हे अग्निदेव ! दुष्ट चोर र पापी शत्रुलाई तिमी पर भगाऊ। तिनीहरूको स्वभाव बदल र तिनीहरूबाट हाम्रो रक्षा गर्दै सर्वतोभावले हित गर।

**श्रुष्ट्यग्ने नवस्य मे स्तोमस्य वीर विश्पते। नि मायिनस्तपसा रक्षसो दह ॥१०॥**
हे प्रजापालक अग्निदेव ! हाम्रो यो नयाँ स्तोत्र सुनेर उत्साही हुँदै तिमी छली र कपटी दुष्टलाई आफ्ना प्रखर तेजले भस्म गराइदेऊ।

**इति एकादशः खण्डः**
एघारौँ खण्ड समाप्त भयो

***

## द्वादशः खण्डः
बाह्रौँ खण्ड

**प्र मंहिष्ठाय गायत ऋताव्ने बृहते शुक्रशोचिषे। उपस्तुतासो अग्नये ॥८॥**
हे स्तोता हो ! श्रेष्ठ स्तोत्रले अग्निदेवको स्तुति गर। सत्य र यज्ञका पालक, महान् तेजस्वी र रक्षक उनै हुन्।

**प्र सो अग्ने तवोतिभिः सुवीराभिस्तिरति वाजकर्मभिः। यस्य त्वं सख्यमाविथ ॥२॥**
हे अग्निदेव ! तिमीले मित्र बनेर सहयोग गरेका स्तोताले श्रेष्ठ सन्तान, अन्न, बल आदि समृद्धिप्रदायक संरक्षण प्राप्त गर्दछन्।

**तं गूर्धया स्वर्णरं देवासो देवमरतिं दधन्विरे। देवत्रा हव्यमूहिषे ॥३॥**
हे स्तोता हो ! स्वर्गमा रहेका देवताका लागि हवि पुऱ्याउने अग्निदेवको स्तुति गर। याजकहरू स्तुति गर्दछन् र देवतालाई हव्य प्रदान गर्दछन्।

**मा नो हृणीथा अतिथिं वसुरग्निः पुरुप्रशस्त एषः। यः सुहोता स्वध्वरः ॥४॥**
हाम्रा प्रिय अतिथिजस्ता अग्निदेवलाई यज्ञभन्दा पर नलैजाऔँ। उनी देवतालाई बोलाउने, धनदाता र अनेकौँ मानिसहरूबाट स्तुत्य छन्।

**भद्रो नो अग्निराहुतो भद्रा रातिः सुभग भद्रो अध्वरः। भद्रा उत प्रशस्तयः ॥५॥**
हविले सन्तुष्ट भएका हे अग्निदेव ! हाम्रा लागि मङ्गलकारी होऊ। हे ऐश्वर्यशाली ! हामीलाई कल्याणकारी धन प्राप्त होस् र तिम्रो स्तुति हाम्रा लागि मङ्गलकारी होस्।

**यजिष्ठं त्वा ववृमहे देवं देवत्रा होतारममर्त्यम्। अस्य यज्ञस्य शुक्रतुम् ॥६॥**
हे श्रेष्ठ याज्ञिक अग्निदेव ! यो यज्ञ राम्ररी सम्पन्न गराऊ, हामी स्तुति गर्दछौँ।

**तदग्ने द्युम्नमा भर यत्सासाहा सदने कं चिदत्रिणम्। मन्युं जनस्य दूढ्यम् ॥७॥**
हे अग्निदेव ! हामीलाई प्रखर तेज प्रदान गर। त्यस तेजले यज्ञमा आउने दुष्टलाई नियन्त्रित गर्न सकियोस् र दुर्बुद्धिबाट उत्पन्न क्रोध हटाउन सकियोस्।

**यद्वा उ विश्पतिः शितः सुप्रीतो मनुषो विशे। विश्वेदग्निः प्रति रक्षांसि सेधति ॥८॥**
यजमानका रक्षक र हविष्यान्नले प्रदीप्त हुने अग्निदेव प्रसन्न भएर याजककहाँ प्रतिष्ठित हुन्छन्। उनी सबै दुष्ट र दुराचारीलाई विनाश गर्दछन्।

**इति द्वादशः खण्डः**
बाह्रौँ खण्ड समाप्त भयो

***

**इति सामवेद संहिता प्रथमोऽध्यायः**
सामवेद संहिताको पहिलो अध्याय समाप्त भयो।

ॐ

**भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।**

# सामवेद संहिता

## अथ द्वितीयोऽध्यायः

**ऋषि–** शंयु बार्हस्पत्य। श्रुतकक्ष अथवा आङ्गिरस। हर्यत प्रागाथ। श्रुतकक्ष आङ्गिरस। देवजामय इन्द्रमातर ऋषिक। गोषूक्ति अश्वसूक्ति काण्वायन। मेधातिथि काण्व प्रियमेध, आङ्गिरस। सुकक्ष श्रुतकक्ष। भारद्वाज। श्रुतकक्ष। मधुच्छन्दा वैश्वामित्र। त्रिशोक काण्व। वसिष्ठ मैत्रावरुणि। काण्व। घौर। वत्स काण्व। कुसीदी काण्व। मेधातिथि काण्व। श्यावाश्व आत्रेय। प्रगाथ काण्व। इरिम्बिठि काण्व। गोतम राहूगण। भरद्वाज बार्हस्पत्य। बिन्दू अथवा पूतदक्ष आङ्गिरस। शुनःशेप आजीगर्ति। शुनःशेप आजीगर्ति अथवा वामदेव। विश्वामित्र गाथिन। प्रियमेध आङ्गिरस वामदेव गौतम। गोधा ऋषिका। दध्यङ्ङाथर्वण। प्रस्कण्व काण्व। उलो वातायन सत्यधृति वारुणि। गृत्समद शौनक। सुकक्ष आङ्गिरस ब्रह्मातिथि काण्व। विश्वामित्र गाथिन अथवा जमदग्नि। दुर्मित्र अथवा सुमित्र कौत्स। विश्वामित्र गाथिन अथवा अभीपाद् उदल।

**देवता–** इन्द्र। मरुद्गण। सदसस्पति। अश्विनीकुमार। मित्रावरुण। विष्णु।

**छन्द–** गायत्री

### प्रथमः खण्डः

पहिलो खण्ड

**तद्वो गाय सुते सचा पुरुहूताय सत्वने। शं यद्गवे न शाकिने ॥१॥**

हे स्तुति गर्ने स्तोताहरू हो! सोमरस तयार पारिसकेपछि बलवान् शत्रु जित्ने उनै इन्द्रदेवको यशोगान गर। राम्रो घाँसमा गाई रमाएझैँ सोमसहितका स्तुतिमा इन्द्रदेव खुसी हुन्छन्।

**यस्ते नूनं शतक्रतविन्द्र द्युम्नितमो मदः। तेन नूनं मदे मदेः ॥२॥**

हे सयौँ कर्म गर्ने इन्द्रदेव! तिम्रा लागि अति तेजस्वी, पेलेर तयार पारेको सोमरस तयार गरेका छौँ, त्यो पान गरेर तृप्त होऊ र धन आदि दिएर हामीलाई आनन्दित गराऊ।

**गाव उप वदावटे मही यज्ञस्य रप्सुदा। उभा कर्णा हिरण्यया ॥३॥**

सूर्यरश्मि यज्ञका लागि आऊन्, तिनले पृथ्वीलाई यज्ञीय रूप प्रदान गर्दछन्। तिनका दुवै किनारा चम्किला छन्।

**अरमश्वाय गायत श्रुतकक्षारं गवे। अरमिन्द्रस्य धाम्ने ॥४॥**

गाई, अश्व र इन्द्रदेवको आवास प्राप्त गर्नका लागि श्रुतकक्ष ऋषि स्तोत्र गाउँछन्।

**तमिन्द्रं वाजयामसि महे वृत्राय हन्तवे। स वृषा वृषभो भुवत् ॥५॥**

वृत्र नाश गर्नेलाई हामी प्रशंसा र स्तुति गर्दछौँ। ती दान दाता इन्द्रदेवले हामीलाई धनधान्यले भरिपूर्ण गराऊन्।

**त्वमिन्द्र बलादधि सहसो जात ओजसः। त्वं सन्वृषन्वृषेदसि ॥६॥**

हे बलवर्द्धक इन्द्रदेव! तिमी शत्रु पराजित गर्ने सामर्थ्य र धैर्यले प्रख्यात छौ। तिमी सबैभन्दा सामर्थ्यशाली र साधकको कामना पूरा गर्ने हौ।

**यज्ञ इन्द्रमवर्धयद्यद्भूमिं व्यवर्तयत्। चक्राण ओपशं दिवि ॥७॥**

यज्ञले इन्द्रदेवलाई खुसी पारेपछि उनले द्युलोकमा आवास बनाएर पृथ्वीलाई विस्तृत गराए।

**यदिन्द्राहं यथा त्वमीशीय वस्व एक इत्। स्तोता मे गोसखा स्यात् ॥८॥**

हे इन्द्रदेव ! तिमीजस्तै समस्त ऐश्वर्यको स्वामी म भएँ भने मेरा पनि धनधान्यले सम्पन्न तिम्रा जस्तै अनेकौं स्तोता होलान्।

**पन्यंपन्यमित्सोतार आ धावत मद्याय। सोमं वीराय शूराय ॥९॥**

हे सोम शोधन गर्न लागेका याजक हो ! पराक्रमी, शूरवीर इन्द्रदेवका लागि आनन्द दिने खालको सोमरस अर्पित गर।

**इदं वसो सुतमन्धः पिबा सुपूर्णमुदरम्। अनाभयिन्ररिमा ते ॥१०॥**

नडराउने, ऐश्वर्यवान् हे इन्द्रदेव ! तिमी पेलेर तयार गरेको सोमरस ग्रहण गरेर पूर्ण रूपले सन्तुष्ट होऊ। तिमीलाई आनन्दित गर्नका लागि यो सोमरस अर्पित छ।

## इति प्रथमः खण्डः

पहिलो खण्ड समाप्त भयो

***

## द्वितीयः खण्डः

दोस्रो खण्ड

**उद्घेदभि श्रुतामघं वृषभं नर्यापसम्। अस्तारमेषि सूर्य ॥१॥**

संसारप्रसिद्ध, ऐश्वर्यसम्पन्न, शक्तिशाली, मानिसका हितैषि र अस्त्र प्रहार गर्ने उदीयमान सूर्य इन्द्रदेव नै हुन्।

**यदद्य कच्च वृत्रहन्नुदगा अभि सूर्य। सर्वं तदिन्द्र ते वशे ॥२॥**

वृत्रसंहारक, उदीयमान इन्द्रदेव ! तिमीले प्रकट गर्ने सबै थोक तिम्रै अधिकारमा हुन्छ।

**य आनयत्परावतः सुनीती तुर्वशं यदुम्। इन्द्रः स नो युवा सखा ॥३॥**

शत्रुले निकै पर लगेर फ्याँकेका तुर्वश र यदुलाई उत्तम नीतिले फिर्ता ल्याउने इन्द्रदेवता नै हाम्रा लागि असल मित्र हुन्।

**मा न इन्द्राभ्याऽदिशः सूरो अक्तुष्वा यमत्। त्वा युजा वनेम तत् ॥४॥**

हे इन्द्रदेव ! सर्वत्र विचरणशील, सबैतिर शस्त्र फ्याँक्नेहरू रातका समयमा हाम्रा नजिक आउन नसकून्। तिम्रा कृपाले तिनीहरू नाश होऊन्।

**एन्द्र सानसिं रयिं सजित्वानं सदासहम्। वर्षिष्ठमूतये भर ॥५॥**

हे इन्द्रदेव ! तिमी हाम्रो जीवन संरक्षण गर र शत्रु परास्त गर्न ऐश्वर्यले समृद्ध गराऊ।

**इन्द्रं वयं महाधन इन्द्रमर्भे हवामहे। युजं वृत्रेषु वज्रिणम् ॥६॥**

हामी सानाठूला सबै खालका प्राणीहरू इन्द्रदेवलाई सङ्ग्राममा सहयोगका निम्ति बोलाउँछौं। वृत्तासुरको विनाश गर्नका लागि उनले हातमा वज्र लिएका छन्।

**अपिबत्कद्रुवः सुतमिन्द्रः सहस्रबाह्वे। तत्राददिष्ट पौंस्यम् ॥७॥**

कद्रुले निकालेको सोमरस इन्द्रदेवले पान गरे र हजारौं भुजा भएका बलशाली शत्रु संहार गरे। यसबाट उनको दर्शनीय पराक्रम प्रकट भयो।

**वयमिन्द्र त्वायवोऽभि प्र नोनुमो वृषन्। विद्धी त्वाऽस्य नो वसो ॥८॥**

हे श्रेष्ठ वीर इन्द्रदेव ! हामी तिम्रो कामना गर्दै बारम्बार नमस्कार गर्दछौं। तिमी सबैलाई आश्रय प्रदान गर्छौ, त्यसैले हाम्रो प्रार्थना सुनेर त्यसमाथि ध्यान दिने कृपा गर।

**आ घा ये अग्निमिन्धते स्तृणन्ति बर्हिरानुषक्। येषामिन्द्रो युवा सखा ॥९॥**

यज्ञाग्नि प्रज्वलित गराउने याजक आफ्ना मित्र चिरयुवा इन्द्रदेवलाई यज्ञशालामा पवित्र आसन प्रदान गर्दछन्।

**भिन्धि विश्वा अप द्विषः परि बाधो जही मृधः। वसु स्पार्हं तदा भर ॥१०॥**

हे इन्द्रदेव ! हाम्रा सबै हिंस्रक शत्रु विनाश गरेर हामीदेखि पर हटाइदेऊ र उनको ऐश्वर्य हाम्रा नजिक ल्याइदेऊ।

## इति द्वितीयः खण्डः

दोस्रो खण्ड समाप्त भयो

***

## तृतीयः खण्डः

तेस्रो खण्ड

**इहेव शृण्व एषां कशा हस्तेषु यद्वदान्। नि यामञ्चित्रमृञ्जते ॥१॥**

मरुत्‌गणका हातमा रहेका चाबुकबाट आउने ध्वनि जस्ता किसिमले निस्कँदै छ, त्यस्तै टङ्कारो रूपमा हामी सुन्दै छौं। त्यस ध्वनिले लडाइँमा असामान्य शक्ति प्रदर्शित गर्दछ।

**इम उ त्वा वि चक्षते सखाय इन्द्र सोमिनः। पुष्टावन्तो यथा पशुम् ॥२॥**

पशु पाल्नेले हातमा घाँस लिएर स्नेहपूर्वक पशुतिर हेरेझैं तिमीलाई तृप्त गर्ने याजक सोम आदि हातमा लिएर तिमीतिर हेरिरहन्छन्।

**समस्य मन्यवे विशो विश्वा नमन्त कृष्टयः। समुद्रायेव सिन्धवः ॥३॥**

नदीहरू समुद्रमा मिसिनका लागि वेगले गएझैं सबै प्रजा उग्र इन्द्रदेवप्रति नमस्कार गर्दै आकर्षित हुन्छन्।

**देवानामिद्‌वो महत्तदा वृणीमहे वयम्। वृष्णामस्मभ्यमूतये ॥४॥**

हे बलशाली देवता हो ! तिमीहरूको संरक्षण हाम्रा निम्ति पूज्य छ, आफ्नो कामना पूरा गर्नका लागि तिमीहरूका महिमाशाली संरक्षणको याचना गर्दछौं।

**सोमानां स्वरणं कृणुहि ब्रह्मणस्पते। कक्षीवन्तं य औशिजः ॥५॥**

हे सम्पूर्ण ज्ञानका अधिपति ब्रह्मणस्पतिदेव ! सोमरस सेवन गराउने यजमानलाई तिमी उशिज्‌का पुत्र औशज अर्थात् कक्षीवान्‌लाई जस्तै उत्तम प्रकाशले सम्पन्न गराइदेऊ।

**बोधन्मना इदस्तु नो वृत्रहा भूर्यासुतिः। शृणोतु शक्र आशिषम् ॥६॥**

इन्द्रदेवका लागि धेरै किसिमका मानिसले सोमरस तयार गर्दछन्। उनले हाम्रो कामना जान्दछन्। युद्धक्षेत्रमा शत्रु पराजित गर्ने, सामर्थ्यवान् र वृत्रसंहारक इन्द्रदेवले हाम्रो स्तुति ध्यानपूर्वक सुनून्।

**अद्या नो देव सवितः प्रजावत्सावीः सौभगम्। परा दुःष्वप्न्यं सुव ॥७॥**

हे सवितादेव ! आज हामीलाई पुत्रपौत्रसहितको पवित्र ऐश्वर्य प्रदान गर। दुःखदायी स्वप्नजस्तो दरिद्रता हामीबाट पर हटाऊ।

**क्व३ स्य वृषभो युवा तुविग्रीवो अनानतः। ब्रह्मा कस्तं सपर्यति ॥८॥**

युवा, सशक्त गर्धन भएका र कसैसित पनि नझुक्ने इन्द्रदेव यस बेला कहाँ छन् ? कुन याजकले उनको पूजा गर्दछन् ?

**उपह्वरे गिरीणां सङ्गमे च नदीनाम्। धिया विप्रो अजायत ॥९॥**

पर्वतका गुफा, घाटी र नदीका सङ्गममा विप्रहरू उत्पन्न हुन्छन्, इन्द्रको आराधना गर्दछन् र उनीहरूले इन्द्रदेवतालाई प्राप्त गर्दछन्।

**प्र सम्राजं चर्षणीनामिन्द्रं स्तोता नव्यं गीर्भिः। नरं नृषाहं मंहिष्ठम् ॥१०॥**

हे स्तोताहरू हो ! मानिसमध्ये राम्रो प्रतिष्ठा पाएका, स्तुति गर्न योग्य, शत्रुजयी नेतृत्व क्षमताले सम्पन्न इन्द्रदेवको स्तुति गर।

## इति तृतीयः खण्डः

तेस्रो खण्ड समाप्त भयो

***

## चतुर्थः खण्डः

चौथो खण्ड

**अपादु शिप्रयन्धसः सुदक्षस्य प्रहोषिणः। इन्दोरिन्द्रो यवाशिरः ॥१॥**

किरीटधारी इन्द्रदेवले देवताका लागि हवि दिन कुशल याज्ञिकद्वारा समर्पित जौको पिठो र दुध मिसिएको सोमरसरूपी हविष्यान्न ग्रहण गरे।

**इमा उ त्वा पुरूवसोऽभि प्र नोनुवुर्गिरः। गावो वत्सं न धेनवः ॥२॥**

हे ऐश्वर्यवान् इन्द्रदेव ! दुधालु गाई आफ्ना बाछातिर कुदेर जानका लागि हतारिएझैँ तिमीलाई हामी स्तुति गर्दछौँ।

**अत्राह गोरमन्वत नाम त्वष्टुरपीच्यम्। इत्था चन्द्रमसो गृहे ॥३॥**

सूर्यास्त भइसकेपछि उदाउने गतिमान् चन्द्रमण्डलमा त्वष्टाको दिव्य तेज छ भन्ने मनीषिहरूले अनुभव गरे।

**यदिन्द्रो अनयद्रितो महीरपो वृषन्तमः। तत्र पूषाभवत्सचा ॥४॥**

महाबली इन्द्रदेवले वर्षाका रूपमा जल प्रवाहित गराउँदा पोषण गर्नमा समर्थ पूषादेव उनका सहयोगी हुन्छन्।

**गौर्धयति मरुतां श्रवस्युर्माता मघोनाम्। युक्ता वह्नी रथानाम् ॥५॥**
धनसम्पन्न मरुत्‌हरूलाई पृथ्वीरूपी गौमाताले अन्न आदि उत्पादन गर्ने इच्छाले पुत्रलाई दुधपान गराउँछिन् र तिनैले अश्वरूपी मरुत्‌हरूलाई रथमा नियोजित गर्दछन्।

**उप नो हरिभिः सुतं याहि मदानां पते। उप नो हरिभिः सुतम् ॥६॥**
हे सोमका अधिपति इन्द्रदेव ! श्रेष्ठ घोडामा हाम्रा सोमयज्ञमा बारम्बार आऊ।

**इष्य होत्रा असृक्षतेन्द्रं वृधन्तो अध्वरे। अच्छावभृथमोवसा ॥७॥**
इन्द्रदेवको प्रशंसा गर्ने याजक आफ्ना शक्तिले हाम्रा यज्ञमा अवभृथ स्नान गरुन्जेल यज्ञको आहुति दिइरहन्छन्।

**अहमिद्धि पितुष्परि मेधामृतस्य जग्रह। अहं सूर्य इवाजनि ॥८॥**
हामीले पालनकर्ता यज्ञरूपी इन्द्रदेवको बुद्धि आफूतिर आकर्षित गरेका छौँ। यसबाट हामी सूर्यजस्तै तेजले युक्त भएका छौँ।

**रेवतीर्नः सधमाद इन्द्रे सन्तु तुविवाजाः। क्षुमन्तो याभिर्मदेम ॥९॥**
इन्द्रदेवका कृपाले हामी धनधान्यले परिपूर्ण भएर प्रफुल्लित हुन्छौँ र उनकै प्रभावले हाम्रा गाईहरू पनि प्रशस्त मात्रामा दुध, घिउ आदि दिन सक्ने होऊन्।

**सोम पूषा च चेततुर्विश्वासां सुक्षितीनाम्। देवत्रा रथ्योर्हिता ॥१०॥**
देवताहरूका रथमा आसीन भएका सोम र पूषादेवताहरू नै सबै मानिसलाई सन्तुष्टि तथा खुसीयाली प्रदान गर्दछन्।

## इति चतुर्थः खण्डः
चौथो खण्ड समाप्त भयो

***

## पञ्चमः खण्डः
पाँचौँ खण्ड

**पान्तमा वो अन्धस इन्द्रमभि प्र गायत। विश्वासाहं शतक्रतुं मंहिष्ठं चर्षणीनाम् ॥१॥**
हे याजक हो ! सामर्थ्यवान्, सयौँ किसिमका यज्ञ आदि कर्म गर्ने, शत्रुनाशक, सोमरस पान गर्ने, इन्द्रदेवको प्रार्थना विशेष स्तोत्रले गर।

**प्र व इन्द्राय मादनं हर्यश्वाय गायत। सखायः सोमपाव्ने ॥२॥**
हे साधकहरू हो ! किरणरूपी अश्वका स्वामी, सोमपान गर्ने इन्द्रदेवतालाई आनन्द प्रदान गर्ने खालका स्तोत्र गाओ।

**वयमु त्वा तदिदर्था इन्द्र त्वायन्तः सखायः। कण्वा उक्थेभिर्जरन्ते ॥३॥**
हे इन्द्रदेव ! तिमीसित मित्रता गर्ने रहर भएर हामी कण्वका वंशज याजकहरू र सबै हाम्रा पुत्रपौत्रादि स्तोत्रले तिम्रो स्तुति गर्दछौँ।

**इन्द्राय मद्वने सुतं परि ष्टोभन्तु नो गिरः। अर्कमर्चन्तु कारवः ॥४॥**
आनन्दमयी प्रकृति भएका, इन्द्रदेवका लागि निकालेको दिव्य सोमरसलाई स्तोताहरू

स्तुतिले प्रशंसा गर्दछन्। स्तोताहरू पूज्य सोमको प्रार्थना गर्दछन्।

**अयं त इन्द्र सोमो निपूतो अधि बर्हिषि। एहीमस्य द्रवा पिब ॥५॥**

हे इन्द्रदेव ! वेदिकामाथि सुशोभित, आसनमा स्थापित, शोधित सोमरस तिम्रा लागि प्रस्तुत छ, चाँडै आएर पान गर।

**सुरूपकृत्नुमूतये सुदुघामिव गोदुहे। जुहूमसि द्यविद्यवि ॥६॥**

मिठो दुध दिने गाईलाई गोठालाले दिनहुँ बोलाएझैं हामी विश्वामित्र आदि ऋषिहरू आआफ्नो संरक्षणका लागि सुन्दर र यज्ञ सम्पन्न गर्ने इन्द्रलाई आह्वान गर्दछौं।

**अभि त्वा वृषभा सुते सुतं सृजामि पीतये। तृम्पा व्यश्नुही मदम् ॥७॥**

हे बलशाली इन्द्रदेव ! यस सोमयज्ञमा तिम्रा लागि सोमरस समर्पित गर्दछौं। तिमी यो तृप्तिकारक सोमरस पान गर।

**य इन्द्र चमसेष्वा सोमश्चमूषु ते सुतः। पिबेदस्य त्वमीशिषे ॥८॥**

हे सामर्थ्यशाली इन्द्रदेव ! तिम्रा लागि शुद्ध सोमरस चमस पात्रमा भरेर राखिएको छ। तिमी यो दिव्य रस पान गर।

**योगेयोगे तवस्तरं वाजेवाजे हवामहे। सखया इन्द्रमूतये ॥९॥**

सत्कर्मको शुभारम्भ गर्ने र हरेक किसिमका सङ्ग्राममा बलशाली सिद्ध हुने गरेका इन्द्रदेवलाई हामी आफ्नो संरक्षणका लागि मित्रका रूपमा आह्वान गर्दछौं।

**आ त्वेता नि षीदतेन्द्रमभि प्र गायत। सखायः स्तोमवाहसः ॥१०॥**

हे यज्ञ गर्ने मित्रहरू हो ! इन्द्रदेवलाई प्रसन्न गराउने उद्देश्यले प्रार्थना गर्नका लागि झट्टै आएर बस र हरेक किसिमले उनको स्तुति गर।

## इति पञ्चमः खण्डः

पाँचौं खण्ड समाप्त भयो

***

## षष्ठः खण्डः

छैटौं खण्ड

**इदं ह्यन्वोजसा सुतं राधानां पते। पिबा त्वाऽस्य गिर्वणः ॥१॥**

हे ऐश्वर्यका धनी र स्तुति योग्य इन्द्रदेव ! बलले निकालेको सोमरस रुचाएर पान गर।

**महाँ इन्द्रः पुरश्च नो महित्वमस्तु वज्रिणे। द्यौर्न प्रथिना शवः ॥२॥**

इन्द्रदेव श्रेष्ठ र महान् छन्। वज्रधारी इन्द्रदेवको यश द्युलोकजत्तिकै व्यापक बनेर फैलिएको छ। उनका बलको प्रशंसा चारै दिशामा होओस्।

**आ तू न इन्द्र क्षुमन्तं चित्रं ग्राभं सं गृभाय। महाहस्ती दक्षिणेन ॥३॥**

महान् भुजा भएका हे इन्द्रदेव ! हामीलाई न्यायले उपार्जन गरिएको, प्रशंसनीय ऐश्वर्य दाहिने हातले प्रदान गर।

**अभि प्र गोपतिं गिरेन्द्रमर्च यथा विदे। सूनुं सत्यस्य सत्पतिम् ॥४॥**

हे याजक हो ! गाई पाल्ने, सत्यनिष्ठ, सज्जनका संरक्षक इन्द्रदेवलाई मन्त्र उच्चारण

गर्दै प्रार्थना गर, त्यसबाट उनका शक्तिको आभास हुन सकोस्।

**कया नश्चित्र आ भुवदूती सदावृधः सखा। कया शचिष्ठया वृता ॥५॥**

निरन्तर गतिशील हे इन्द्रदेव ! तिमी कुनकुन तृप्तिकारक पदार्थ अर्पण गर्दा र कस्ता पूजाविधिले प्रसन्न हुन्छौ ? तिमी कुन दिव्य शक्तिका सहायताले हाम्रो सहयोग गर्छौ ?

**त्यमु वः सत्रासाहं विश्वासु गीर्ष्वायतम्। आ च्यावयस्यूतये ॥६॥**

हे याजक हो ! आफ्ना समस्त वाणीले उच्चरित उत्तम स्तुतिले आफ्नो संरक्षणका लागि असुरविजयी इन्द्रदेवलाई आह्वान गर।

**सदसस्पतिमद्भुतं प्रियमिन्द्रस्य काम्यम्। सनिं मेधामयासिषम् ॥७॥**

इन्द्रदेवका प्रिय मित्र हुनाले खोजेको कुरो दिन सक्ने, सबैको मर्म बुझ्ने र असल व्यवहारका स्वामी सदसस्पतिदेवबाट हामी अद्‌भुत ज्ञानबुद्धि प्राप्त गर्दछौँ।

**ये ते पन्था अधो दिवो येभिर्व्यश्वमैरयः। उत श्रोषन्तु नो भुवः ॥८॥**

हे इन्द्रदेवता ! द्युलोकबाट पृथ्वीतर्फ फर्किएका तिम्रा मार्गमा तिमी सृष्टिको सञ्चालन गर्दछौ, त्यो मार्ग हाम्रा यज्ञसम्म आइपुग्दछ, तिमी उसै मार्गबाट हाम्रा यज्ञमा आऊ।

**भद्रंभद्रं न आ भरेषमूर्जं शतक्रतो। यदिन्द्र मृडयासि नः ॥९॥**

हे सयौँ यज्ञ पूरा गर्ने इन्द्रदेव ! हामीलाई सुखकारी अन्नबलले युक्त ऐश्वर्य प्रचुर मात्रामा प्रदान गर। किनभने तिमीले नै हामीलाई सुखी बनाउँछौ।

**अस्ति सोमो अयं सुतः पिबन्त्यस्य मरुतः। उत स्वराजो अश्विना ॥१०॥**

हामीबाट शोधित यो सोमरस तेजस्वी मरुत्‌गण र अश्विनीकुमारले पान गर्दछन्।

**इति षष्ठः खण्डः**

छैटौँ खण्ड समाप्त भयो

***

## सप्तमः खण्डः

सातौँ खण्ड

**ईङ्खयन्तीरपस्युव इन्द्रं जातमुपासते। वन्वानासः सुवीर्यम् ॥१॥**

इन्द्रदेवका नजिक पुगेर उनको सेवा गर्ने, यज्ञ आदि सत्कर्म गर्नमा लागेका माताहरूले उनैको उपासना अर्चना गर्दछन्। उनीबाट सुखकारी श्रेष्ठ धन उपलब्ध गराउँछन्।

**न कि देवा इनीमसि न क्या योपयामसि। मन्त्रश्रुत्यं चरामसि ॥२॥**

हे देवता हो ! हामी याजक कोही पनि अमर्यादित र धर्मविहीन कर्म गर्दैनौँ। हामी कसैको केही हानी गर्दैनौँ। हातमा हवन सामग्री लिएर हामी यज्ञ आदि श्रेष्ठ कर्म सम्पन्न गर्दछौँ।

**दोषो आगाद् बृहद्गाय द्युमद्गामन्नाथर्वण। स्तुहि देवं सवितारम् ॥३॥**

हे प्रकाशमार्गका अनुयायी अथर्ववेदीय ब्राह्मणहरू हो ! हे बृहत् नामका सामवेदी स्तोताहरू हो ! यज्ञको कार्यका दोषहरू मेट्याउनका लागि सवितादेवताको स्तुति गर।



**एषो उषा अपूर्व्या व्युच्छति प्रिया दिवः। स्तुषे वामश्विना बृहत् ॥४॥**

अपूर्व प्रिय उषादेवीले अन्तरिक्षमा उदाएर अन्धकार नाश गर्दछिन्। देवी उषाका कार्यमा सहयोगी हे अश्विनीकुमारहरू ! हामी महान् स्तोत्रले तिमीहरूलाई स्तुति गर्दछौँ।

**इन्द्रो दधीचो अस्थभिर्वृत्राण्यप्रतिष्कुतः। जघान नवतीर्नव ॥५॥**

अपराजित इन्द्रदेवले दधीचिका हड्डीले उनान्सय राक्षसहरूको वध गरिदिए।

**इन्द्रेहि मत्स्यन्धसो विश्वेभिः सोमपर्वभिः। महाँ अभिष्टिरोजसा ॥६॥**

हे इन्द्रदेव ! सोमरूपी अन्नले तिमी प्रफुल्लित हुन्छौ। त्यसैले तिमी आफ्ना शक्तिले दुष्ट शत्रुमाथि विजय प्राप्त गर्दछौ। विजयश्रीले आफूलाई वरण गरून् भनेर क्षमता आर्जन गर्न तिमी यज्ञशालामा आऊ।

**आ तू न इन्द्र वृत्रहन्नस्माकमर्धमा गहि। महान्महीभिरूतिभिः ॥७॥**

हे वृत्र हनन गर्ने इन्द्रदेव ! महान् संरक्षणका साधनसँगै तिमी हामीकहाँ आऊ।

**ओजस्तदस्य तित्विष उभे यत्समवर्तयत्। इन्द्रश्चर्मेव रोदसी ॥८॥**

द्युलोकदेखि पृथ्वीलोकसम्म आवरणजस्तै भएर फिँजिँदै सुरक्षा गर्ने इन्द्रदेवको ओज अत्यन्त तेजस्वी भएर फैलिएको छ।

**अयमु ते समतसि कपोत इव गर्भधिम्। वचस्तच्चिन्न ओहसे ॥९॥**

हे इन्द्रदेव ! गर्भिणी पोथीसँग भाले ढुकुर बसेझैँ स्नेहपूर्वक पेटमा बस्ने यो सोमरस तिम्रा लागि प्रस्तुत छ। तिमी हाम्रो निवेदन स्वीकार गर।

**वात आ वातु भेषजं शम्भु मयोभु नो हृदे। प्र ण आयूँषि तारिषत् ॥१०॥**

हाम्रा हृदयमा शान्ति र सुख दिन सक्ने औषधिलाई वायुदेवले हामीकहाँ पुऱ्याऊन्। यी औषधिले हामीलाई दीर्घजीवी बनाऊन्।

## इति सप्तमः खण्डः

सातौँ खण्ड समाप्त भयो

***

## अष्टमः खण्डः

आठौँ खण्ड

**यं रक्षन्ति प्रचेतसो वरुणो मित्रो अर्यमा। न किः स दभ्यते जनः ॥१॥**

ज्ञानसम्पन्न मित्र, वरुण र अर्यमा आदि देवताहरूको संरक्षण प्राप्त भएका याजकलाई कसैले पनि दमन गर्न सक्दैन।

**गव्यो षु णो यथा पुराश्वयोत रथया। वरिवस्या महोनाम् ॥२॥**

हे इन्द्रदेव ! सधैँको जस्तै हामीलाई उत्तम गाई, असल अश्वले युक्त रथ र प्रतिष्ठापूर्ण धन प्रदान गर्ने इच्छाले तिमी हाम्रा नजिकै आऊ।

**इमास्त इन्द्र पृश्नयो घृतं दुहत आशिरम्। एनामृतस्य पिप्युषीः ॥३॥**

हे इन्द्रदेव ! तिम्रा यज्ञ प्रक्रिया अगाडि बढाउँदै पोषित गर्ने गाईका रूपमा रहेका





पृश्निहरूले यो दुधरूपी आशिर र हविरूपी घिउ प्रदान गर्दछन्।

**अया धिया च गव्यया पुरुणामन्पुरुष्टुत। यत्सोमेसोम आभुवः ॥४॥**

धेरै नाम भएका, धेरै तिरबाट प्रशंसित हे इन्द्रदेव ! तिमी पुगेका प्रत्येक सोमयज्ञमा गाईको कामना गर्ने बुद्धिले हामी तिम्रो स्तुति गर्दछौँ।

**पावका नः सरस्वती वाजेभिर्वाजिनीवती। यज्ञं वष्टु धियावसुः ॥५॥**

सरस्वतीले पवित्र बनाउँछिन्, पोषण दिन्छिन् र उनी बुद्धिमत्तापूर्वक ऐश्वर्य दान गर्छिन्। उनै देवी सरस्वतीले ज्ञान र कर्मद्वारा हाम्रो यज्ञ सफल गराइदिऊन्।

**क इमं नाहुषीष्वा इन्द्रं सोमस्य तर्पयात्। स नो वसून्या भरात् ॥६॥**

यी इन्द्रदेवतालाई तृप्त गर्न नचाहने मानिस को होला ? उनै इन्द्रदेव हाम्रा यज्ञमा आऊन् र हामीलाई ऐश्वर्य प्रदान गरून्।

**आ याहि सुषुमा हि त इन्द्र सोमं पिबा इमम्। एदं बर्हिः सदो मम ॥७॥**

हे इन्द्रदेव ! हाम्रा यज्ञमा आऊ, सोमरस तयार गरेर तिम्रा लागि चढाएका छौँ। पान गरेर उच्च आसनमा विराजमान होऊ।

**महि त्रीणामवरस्तु द्युक्षं मित्रस्यार्यम्णः। दुराधर्षं वरुणस्य ॥८॥**

मित्र, वरुण र अर्यमा तीन देवताको तेजस्वी, संयुक्त अवस्थाको संरक्षण हामीलाई प्राप्त होस्। त्यसबाट हामी अर्को पक्षका शत्रुलाई पराजित गर्न सक्षम होऔँ।

**त्वावतः पुरूवसो वयमिन्द्र प्रणेतः। स्मसि स्थातर्हरीणाम् ॥९॥**

धनवान्, श्रेष्ठ नायक र अश्वका स्वामी हे इन्द्रदेव ! तिमीजस्तो रक्षक अर्को कोही पनि छैन। तिमीप्रति हामी समर्पित भएकाले सधैँ सुरक्षित रहन सकौँ।

## इति अष्टमः खण्डः

आठौँ खण्ड समाप्त भयो

***

## नवमः खण्डः

नवौँ खण्ड

**उत्त्वा मन्दन्तु सोमाः कृणुष्व राधो अद्रिवः। अव ब्रह्मद्विषो जहि ॥१॥**

हे इन्द्रदेव ! यो सोमरस तिमीलाई आनन्द प्रदान गर्ने होस्। हे वज्रधारी इन्द्रदेव ! हामीलाई तिमी ऐश्वर्य प्रदान गर र ज्ञानसित द्वेष गर्नेलाई संहार गर।

**गिर्वणः पाहि नः सुतं मधोर्धाराभिरज्यसे। इन्द्र त्वादातमिद्यशः ॥२॥**

हे स्तुति योग्य इन्द्रदेव ! हामीले छानेको सोमरस खाऊ। किनभने यस आनन्ददायी सोमरसका धाराले तिर्खा मेटिन्छ। हे इन्द्रदेव ! हामीलाई तिम्रै कृपाले यश प्राप्त हुन्छ।

**सदा व इन्द्रश्चर्कृषदा उपो नु स सपर्यन्। न देवो वृतः शूर इन्द्रः ॥३॥**

हे स्तोताहरू हो ! यी इन्द्रदेवता सधैँ तिमीहरूका सहयोगी नै रहेका छन्। उनी पूजाका साथै यज्ञतर्फ उन्मुख छन्। यसै कारणले महान् वीर इन्द्रदेवता हाम्रा लागि पूज्य रहेका छन्।

**आ त्वा विशन्त्विन्दवः समुद्रमिव सिन्धवः। न त्वामिन्द्राति रिच्यते ॥४॥**

हे इन्द्रदेव ! समुद्रमा नदी मिसिएझैं सोमरस तिमीभित्र प्रवेश गर्दछ। हे इन्द्रदेव ! तिमीभन्दा महान् अर्को कुनै पनि देवता छैन।

**इन्द्रमिद्गाथिनो बृहदिन्द्रमर्केभिरर्किणः। इन्द्रं वाणीरनूषत ॥५॥**

सामवेदको गानमा साधना गर्ने साधकहरू गाउन योग्य स्तुति गाथाले देवराज इन्द्रलाई प्रसन्न गर्दै छन्। यज्ञ गर्ने याज्ञिकहरू पनि मन्त्रोच्चारण गर्दै इन्द्रको प्रार्थना गर्दै छन्।

**इन्द्र इषे ददातु न ऋभुक्षणमृभुं रयिम्। वाजी ददातु वाजिनम् ॥६॥**

हे बलशाली ! शक्तिसम्पन्न इन्द्रदेवले हामीलाई श्रेष्ठ धनले सधैं पूर्ण गराऊन्। अन्न प्राप्त गर्नका लागि श्रेष्ठ उत्तराधिकार प्रदान गरून्। हामीलाई बलवान् बनाऊ।

**इन्द्रो अङ्ग महद्भयमभी षदप चुच्यवत्। स हि स्थिरो विचर्षणिः ॥७॥**

युद्धकुशल विश्वद्रष्टा इन्द्रदेवताले हामी सबैका मनको पराजय होला भन्ने ठूलो डर सधैंका लागि तुरुन्तै मेटाइदिन्छन्।

**इमा उ त्वा सुतेसुते नक्षन्ते गिर्वणो गिरः। गावो वत्सं न धेनवः ॥८॥**

हे स्तुत्य इन्द्रदेव ! दुधालु गाई बाछाका छेउमा आफैं पुगेझैं गरी सोम तयार गर्ने यज्ञका समयमा तिम्रा सामु स्तुति स्वतः पुग्दछ।

**इन्द्रा नु पूषणा वयं सख्याय स्वस्तये। हुवेम वाजसातये ॥९॥**

हामी अन्न प्राप्तिका लागि र आफ्नो कल्याणका लागि मित्रस्वरूप इन्द्र र पूषादेवलाई स्तुतिद्वारा बोलाउँछौं।

**नकि इन्द्र त्वदुत्तरं न ज्यायो अस्ति वृत्रहन्। न क्येवं यथा त्वम् ॥१०॥**

हे शत्रुसंहारक इन्द्रदेव ! तिमीभन्दा महान् अर्को कोही पनि छैन। तिमीजत्तिको अर्को कुनै देवता पनि छैन।

## इति नवमः खण्डः

नवौं खण्ड समाप्त भयो

***

## दशमः खण्डः

दसौं खण्ड

**तरणिं वो जनानां त्रदं वाजस्य गोमतः। समानमु प्र शंसिषम् ॥१॥**

सज्जनलाई बाधाबाट पार लगाउने, शत्रुलाई भयभीत गराउने, पशुरूपी धनले सम्पन्न, अन्न दान गर्ने र उन्नतिशील इन्द्रदेवलाई हामी स्तुति गर्दछौं।

**असृग्रमिन्द्र ते गिरः प्रति त्वामुदहासत। अजोषा वृषभं पतिम् ॥२॥**

हे इन्द्रदेव ! तिम्रो स्तुति गर्नका लागि हामीले स्तोत्र रचना गरेका छौं। हे बलशाली र पालनकर्ता इन्द्रदेव ! स्तुतिका साथमा हामीले गरेको प्रार्थना तिमी स्वीकार गर।

**सुनीथो घा स मर्त्यो यं मरुतो यमर्यमा। मित्रास्पान्त्यद्रुहः ॥३॥**

मरुत्हरू, मित्र र अर्यमादेव द्रोहरहित भएर जुन साधकको रक्षा गर्दछन्, त्यो साधक निश्चित रूपले श्रेष्ठ मार्गमा गमन गर्ने हुन्छ।

**यद्वीडाविन्द्र यत्स्थिरे यत्पर्शाने पराभृतम्। वसु स्पार्हं तदा भर ॥४॥**

हे इन्द्रदेव ! हामीलाई तिमी स्थायी सम्पत्ति प्रदान गर, त्यो पुष्ट र स्थिर भई भूमिमा विद्यमान रहोस् र कसैले स्पर्श नगरेको होस्।

**श्रुतं वो वृत्रहन्तमं प्र शर्धं चर्षणीनाम्। आशिषे राधसे महे ॥५॥**

हे ऋत्विक् हो ! तिमीहरूले वृत्रहन्ता, बलशाली, हितैषि इन्द्रदेवको स्तुति सुनेकै छौ। त्यसैले म इन्द्रदेवता हुनाले मानिसको हितलाई विचार गर्छु र तिमीहरूलाई महान् ऐश्वर्य प्रदान गर्दछु।

**अरं त इन्द्र श्रवसे गमेम शूर त्वावतः। अरं शक्र परेमणि ॥६॥**

हे वीर इन्द्रदेवता ! हामीले तिम्रो यश धेरै पटक सुनेका छौँ। हे सामर्थ्यशाली इन्द्रदेवता ! तिमीजस्ता महान् देवताका नजिकमा रहन पाउँदा हामी ज्यादै खुसी भएका छौँ।

**धानावन्तं करम्भिणमपूपवन्तमुक्थिनम्। इन्द्र प्रातर्जुषस्व नः ॥७॥**

हे इन्द्रदेव ! दही र पिठो मिसाएर पकाएको पुरोडाशको हवि हामी मन्त्रोच्चारण गर्दै समर्पित गर्दछौँ। तिमी बिहानै यो स्वीकार गर।

**अपां फेनेन नमुचेः शिर इन्द्रोदवर्तयः। विश्वा यदजयः स्पृधः ॥८॥**

प्रतिस्पर्धा गर्ने सबै असुरलाई पराजित गरिसकेपछि इन्द्रदेवले नमुचीको शिर फिँज उठेका पानीमा हालेर नष्ट पारिदिए।

**इमे त इन्द्र सोमाः सुतासो ये च सोत्वाः। तेषां मत्स्व प्रभूवसो ॥९॥**

हे महान् ऐश्वर्यशाली इन्द्रदेवता ! यो सोमरस तिम्रा लागि शोधित गरेर राखिएको छ। तिमी यसरी शुद्ध गरिएको सोमरस पान गरेर आनन्दित होऊ।

**तुभ्यं सुतासः सोमाः स्तीर्णं बर्हिर्विभावसो। स्तोतृभ्य इन्द्र मृडय ॥१०॥**

हे महान् ऐश्वर्यशाली इन्द्रदेवता ! तिम्रा लागि यो शोधित सोमरस आसनमा राखिएको छ। हे इन्द्रदेवता ! यस पवित्र कुशआसनमा बसेर तिमी सोमरस पान गर्दै साधकहरूलाई प्रसन्न गराऊ।

## इति दशमः खण्डः

दसौँ खण्ड समाप्त भयो

***

## एकादशः खण्डः

एघारौँ खण्ड

**आ व इन्द्रं कृविं यथा वाजयन्तः शतक्रतुम्। मंहिष्ठं सिञ्च इन्दुभिः ॥१॥**

अन्नको कामना गर्ने किसानले खेतमा पानी लगाएझैं हामी बलको कामना गर्ने साधकहरू महान् इन्द्रदेवलाई सोमरसले सेचन गर्दछौँ।

**अतश्चिदिन्द्र न उपा याहि शतवाजया। इषा सहस्रवाजया ॥२॥**

हे इन्द्रदेव ! सयौं किसिमका बलले परिपूर्ण हजारौं किसिमका पोषक तत्त्व र रसका साथमा अन्तरिक्षबाट तिमी हाम्रा यज्ञमा आउने कृपा गर।

आ बुन्दं वृत्रहा ददे जातः पृच्छाद्विमातरम्। क उग्राः के ह शृण्विरे ॥३॥
वृत्र मार्ने इन्द्रदेवले जन्मँदै हातमा धनुषबाण लिएका थिए र मातासित यस संसारमा सबैभन्दा पराक्रमी वीर को होला भनेर सोधेका थिए।

बृबदुक्थं हवामहे सृप्रकरस्नमूतये। साधः कृण्वन्तमवसे ॥४॥
सम्पूर्ण जगत्को संरक्षणका लागि आफ्ना भुजा फैलाउने र सत्कर्म गर्ने उनै इन्द्रदेवको सर्वत्र गुणगान गरिन्छ, हामी पनि आह्वान गर्दछौँ।

ऋजुनीती नो वरुणो मित्रो नयतु विद्वान्। अर्यमा देवैः सजोषाः ॥५॥
मित्र र वरुणजस्ता ज्ञानी देवताले हामीलाई सरल नीतिपथमा अघि बढाइरहून्। देवताहरूका सहचर अर्यमाले हामीलाई सरल मार्गबाट उन्नतिशील बनाऊन्।

दूरादिहेव यत्सतोऽरुणप्सुरशिश्वितत्। वि भानुं विश्वथातनत् ॥६॥
अति टाढा भए पनि नजिकैजस्तो देखिने रातो आभायुक्त उषाले आफ्ना स्वर्णिम रश्मि फैलाउँदा त्यस प्रकाशले सारा विश्व नै प्रकाशित हुन्छ।

आ नो मित्रावरुणा घृतैर्गव्यूतिमुक्षतम्। मध्वा रजांसि सुक्रतू ॥४॥
हे मित्रावरुण हो ! तिमीहरू गाईलाई घिउले सम्पन्न गराओ र हाम्रा घरबासमा पनि असल रसले सेचन गर।

उदु त्ये सूनवो गिरः काष्ठा यज्ञेष्वत्नत। वाश्रा अभिज्ञु यातवे ॥८॥
शब्द नाद गर्ने मरुत्गणले यज्ञका लागि जल बगाए। बगिरहेको पानी खान गाईहरू कराउँदै आउँछन्। ती गाईहरू घुँडासम्म पानीमा पस्न प्रेरित हुन्छन्।

इदं विष्णुर्वि चक्रमे त्रेधा नि दधे पदम्। समूढमस्य पांसुले ॥९॥
विष्णुदेवताका तीन चरणले संसारको सबै भागलाई मापन गरेको हुन्छ। धुलो लागेका उनैका गोडामा सम्पूर्ण संसार अटाएको छ। उनको महिमाको मर्म बुझेकाहरूले यस्तो कुरो जान्दछन्।

## इति एकादशः खण्डः
एघारौँ खण्ड समाप्त भयो

***

## द्वादशः खण्डः
बाह्रौँ खण्ड

अतीहि मन्युषाविणं सुषुवांसमुपेरय। अस्य रातौ सुतं पिब ॥१॥
हे इन्द्रदेव ! अधिक क्रोधित भएर निकालेको सोमरस ग्रहण नगर। उत्तम विधिले सोमरस निकाल्ने साधकका यज्ञमा पुगेर सोमरस पान गर।

कदु प्रचेतसे महे वचो देवाय शस्यते। तदिद्ध्यस्य वर्धनम् ॥२॥
इन्द्रदेवको गुणगान गर्ने हाम्रा सामान्य किसिमका स्तोत्रले पनि महान् ज्ञानी इन्द्रदेवता हामीसित प्रसन्न हुने गर्दछन्।

**उक्थं च न शस्यमानं नागो रयिरा चिकेत। न गायत्रं गीयमानम् ॥३॥**
इन्द्रदेव स्तुति नगर्नेहरूका शत्रु हुन्। स्तोताले स्तोत्र पढेको उनलाई राम्ररी थाहा छ। उनी सामवेदको गाना पनि सुन्दछन् र बुझ्दछन् पनि।

**इन्द्र उक्थेभिर्मन्दिष्ठो वाजानं च वाजपतिः। हरिवांत्सुतानां सखा ॥४॥**
महान् बलशाली, अश्वले युक्त, सुसज्जित इन्द्रदेवता सोमयज्ञका साधकहरूको स्तोत्रले आनन्दित हुन्छन् र उनीहरूका सहायक बन्ने गर्दछन्।

**आ याह्युप नः सुतं वाजेभिर्मा हृणीयथाः। महाँ इव युवजानिः ॥५॥**
पत्नीव्रत धारण गर्ने वीर पुरुषजस्ता हे इन्द्रदेवता ! तिमी हाम्रै सोमयज्ञमा आएर हविष्यान्न ग्रहण गर। अरूको अन्नतिर दृष्टि नलगाऊ।

**कदा वसो स्तोत्रं हर्यत अव श्मशा रुधद्वाः। दीर्घं सुतं वाताप्याय ॥६॥**
स्तुतिले प्रसन्न हुने हे इन्द्रदेव ! नहरमा बगाउन पानी रोकिएझैँ तयार गरिएको सोमरस तिमीलाई प्रदान गर्न कहिले रोकौँ ?

**ब्राह्मणादिन्द्र राधसः पिबा सोममृतूँरनु। तवेदं सख्यमस्तृतम् ॥७॥**
हे इन्द्रदेव ! तिमी ब्रह्मज्ञान भएका साधकका पात्रबाट सोमरस पान गर, किनकि ती साधकसित तिम्रो अटुट मित्रता रहेको छ।

**वयं घा ते अपि स्मसि स्तोतार इन्द्र गिर्वणः। त्वं नो जिन्व सोमपाः ॥८॥**
सोमरस पिएर सन्तुष्ट हुने, प्रशंसा गर्न योग्य हे इन्द्रदेव ! हामी तिम्रो स्तुति गर्दछौँ। हामीलाई तिमी सन्तुष्टि प्रदान गर।

**एन्द्र पृक्षु कासु चिन्नृम्णं तनूषु धेहि नः। सत्राजिदुग्र पौंस्यम् ॥९॥**
हे इन्द्रदेवता ! यज्ञीय कार्यमा प्रयुक्त हाम्रा अङ्गमा बल प्रदान गर। हे वीर इन्द्रदेवता ! सबै शत्रुहरूलाई एकै पटक पराजित गर्नका लागि हामीलाई शक्ति प्रदान गर।

**एवा ह्यसि वीरयुरेवा शूर उत स्थिरः। एवा ते राध्यं मनः ॥१०॥**
हे बलवान् इन्द्रदेव ! रणक्षेत्रमा शत्रु पराजित गर्दै अडिग रहने तिमी शूरवीर हौ। तिम्रो मन प्रशंसाका लागि योग्य छ।

**इति द्वादशः खण्डः**
बाह्रौँ खण्ड समाप्त भयो

***

**इति सामवेद संहिता द्वितीयोऽध्यायः**
सामवेद संहिताको दोस्रो अध्याय समाप्त भयो।

ॐ

**भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।**

# सामवेद संहिता

## तृतीयोऽध्यायः

## त्रयोदशः खण्डः

तेह्रौं खण्ड

**ऋषि—** वसिष्ठ मैत्रावरुणि। भरद्वाज बार्हस्पत्य। प्रस्कण्व काण्व। नोधा गौतम। कलि प्रागाथ। मेधातिथि काण्व। भर्ग प्रागाथ। प्रागाथ घौर काण्व। पुरुहन्मा आङ्गिरस। मेधातिथि काण्व। विश्वामित्र गाथिन। गोतम राहूगण। नृमेध, पुरुमेध आङ्गिरस। मेधातिथि अथवा मेध्यातिथि काण्व देवातिथि काण्व। रेभ काश्यप। जमदग्नि भार्गव। वत्स। नृमेध आङ्गिरस। इरिम्बिठि काण्व। मेध्य काण्व। परुच्छेप दैवोदासि। वामदेव गौतम। मेधातिथि मेध्यातिथ्य काण्व अथवा विश्वामित्र। श्रुष्टिगु काण्व। अश्विनीकुमार वैवस्वत। गातु आत्रेय। पृथु वैन्य। सप्तगु आङ्गिरस। गौरिवीति शाक्त्य। वेन भार्गव। बृहस्पति अथवा नकुल। सुहोत्र भारद्वाज। द्युतान मारुत। बृहदुक्थ वामदेव्य। अरिष्टनेमि ताक्ष्र्य। भरद्वाज। विमद ऐन्द्र अथवा वसुकृत वासुक्र। रेणु वैश्वामित्र। मधुच्छन्दा वैश्वामित्र। जेता माधुच्छन्दस। अत्रि भौम। तिरश्ची आङ्गिस। नीपातिथि काण्व। तिरश्ची आङ्गिरस अथवा शंयु बार्हस्पत्य।

**देवता—** इन्द्र। ताक्ष्र्य अथवा सूर्य। मरुत्गण। त्वष्टा, पर्जन्य, ब्रह्मणस्पति, अदिति। उषा। अश्विनीकुमार। वेन।

**छन्द—** बृहती। त्रिष्टुप्। अनुष्टुप्।

**अभि त्वा शूर नोनुमोऽदुग्धा इव धेनवः। ईशानमस्य जगतः स्वर्दृशमीशानमिन्द्र तस्थुषः ॥१॥**

हे शूरवीर इन्द्रदेव ! तिमी यस स्थावर र जङ्गम संसारका स्वामी हौ। नदुहिएको गाई बाछो भेट्नका लागि लालायित भएझैँ दिव्य दृष्टिसम्पन्न तिम्रो दर्शनका लागि हामी लालायित रहन्छौँ।

**त्वामिद्धि हवामहे सातौ वाजस्य कारवः। त्वां वृत्रेष्विन्द्र सत्पतिं नरस्त्वां काष्ठास्वर्वतः ॥२॥**

हे इन्द्रदेव ! हामी स्तोताहरू तिमीलाई आह्वान गर्दछौँ र अन्न प्राप्तिको इच्छा गर्दछौँ। तिमी सज्जनका रक्षक हौ। शत्रु जित्नका लागि हामी तिमीलाई आह्वान गर्दछौँ।

**अभि प्र वः सुराधसमिन्द्रमर्च यथा विदे। यो जरितृभ्यो मघवा पुरूवसुः सहस्रेणेव शिक्षति ॥३॥**

हे ऋत्विक्हरू हो ! ऐश्वर्यवान् इन्द्रदेव स्तुति गर्नेलाई अनेकौँ किसिमका श्रेष्ठ धनले सम्पन्न बनाउँछन्। अतः उत्तम धन प्राप्त गर्नका लागि सकेसम्म उनैको अर्चना गर।

**तं वो दस्ममृतीषहं वसोर्मन्दानमन्धसः। अभि वत्सं न स्वसरेषु धेनव इन्द्रं गीर्भिर्नवामहे ॥४॥**

हे ऋत्विक् हो ! शत्रुबाट रक्षा गर्ने, तेजस्वी सोमरसले सन्तुष्ट हुने इन्द्रदेवलाई हामी स्तुति गर्दछौँ। त्यो स्तुति गोठमा आफ्ना बाछासँग जान गाई हतारिएजस्तै हुन्छ।

**तरोभिर्वो विदद्वसुमिन्द्रं सबाध ऊतये। बृहद् गायन्तः सुतसोमे अध्वरे हुवे भरं न कारिणम् ॥५॥**

बालकले अभिभावक गुहारेझैँ हामी आफ्ना हितैषि इन्द्रदेवलाई सहायताका लागि बोलाउँछौँ। सोमयज्ञमा ऐश्वर्य दिने, वेगवान् अश्वयुक्त इन्द्रदेवलाई आफ्नो रक्षाका लागि आराधना गरौँ।

**तरणिरित्सिषासति वाजं पुरन्ध्या युजा। आ व इन्द्रं पुरुहूतं नमे गिरा नेमिं तष्टेव सुद्रुवम् ॥६॥**

तत्परताका साथ कार्य गर्नेले नै उन्नतिशील भएर अन्न र बल प्राप्त गर्दछ। सिकर्मीले गोलो पार्दै पाङ्ग्रो बनाएझैँ हामी आफ्ना स्तोत्रले इन्द्रदेवलाई आफूतिर झुकाउँछौँ।

**पिबा सुतस्य रसिनो मत्स्वा न इन्द्र गोमतः। आपिर्नो बोधि सधमाद्ये वृधे३ऽस्माँ अवन्तु ते धियः ॥७॥**

हे इन्द्रदेव ! गाईको दुधमा मिसेर रसका रूपमा हामीले सोमरस शोधन गरेका छौँ, पान गर र प्रफुल्लित होऊ। हाम्रा कार्यमा सङ्गठित रूपमा सहयोगी हुँदै हामीलाई उन्नतिको मार्ग देखाऊ। तिम्रो बुद्धि हाम्रो संरक्षक बनोस्।

**त्वं ह्येहि चेरवे विदा भगं वसुत्तये। उद्वावृषस्व मघवन् गविष्टय उदिन्द्राश्वमिष्टये ॥८॥**

हे इन्द्रदेव ! हामी उत्तम आचरणयुक्त भएर तिमीलाई आह्वान गर्दछौँ। हे ऐश्वर्यवान् इन्द्रदेव ! गाई, अश्व र श्रेष्ठ धन प्राप्ति गर्ने हाम्रो कामना पूरा गराऊ।

**नहि वश्चरमं च न वसिष्ठः परिमंसते। अस्माकमद्य मरुतः सुते सचा विश्वे पिबन्तु कामिनः ॥९॥**

हे मरुत्‌हरू हो ! तिमीहरूमध्येका कनिष्ठको पनि वसिष्ठ ऋषिले स्तुति गर्दछन्। आज हाम्रा यस यज्ञमा सँगसँगै बसेर तिमीहरू सबैले सोमरस पान गर।

**मा चिदन्यद्वि शंसत सखायो मा रिषण्यत। इन्द्रमित्स्तोता वृषणं सचा सुते मुहुरुक्था च शंसत ॥१०॥**

हे मित्रहरू हो ! इन्द्रदेवबाहेक अन्य कुनै देवताको स्तुति गरेर लाभ छैन। त्यसमा शक्ति नष्ट नगरौँ। सोम शोधित गरेर, एकत्र भएर, संयुक्त रूपले बलशाली इन्द्रदेवकै बारम्बार प्रार्थना गरौँ।

**इति त्रयोदशः खण्डः**

तेह्रौँ खण्ड समाप्त भयो

***

# चतुर्दशः खण्डः

## चौधौँ खण्ड

**नकिष्टं कर्मणा नशद्यश्चकार सदावृधम्। इन्द्रं न यज्ञैर्विश्वगूर्तमृभ्वसमधृष्टं धृष्णुमोजसा ॥१॥**

स्तुत्य, महाबलशाली, समृद्ध, अपराजित, शत्रु दमन गर्ने इन्द्रदेवलाई यज्ञ आदि कर्मले आफ्नो सहचर बनाउने साधकको कर्म कसैले नष्ट गर्द सक्दैन।

**य ऋते चिदभिश्रिषः पुरा जत्रुभ्य आतृदः। सन्धाता सन्धिं मघवा पुरूवसुर्निष्कर्ता विह्रुतं पुनः ॥२॥**

गलाको हड्डी रगत निस्कन नपाउँदै अन्य औषधिविनै इन्द्रदेवले जोडिदिन्छन्। धनका स्वामी इन्द्रदेवले छिन्नभिन्न भएकालाई फेरि सग्लो वा एकीकृत गर्दछन्।

**आ त्वा सहस्रमा शतं युक्ता रथे हिरण्यये। ब्रह्मयुजो हरय इन्द्र केशिनो वहन्तु सोमपीतये ॥३॥**

हे इन्द्रदेव ! स्वर्णिम रथमा जुट्ने, स्तुति योग्य, लामो जगर भएका, सयौँ वा हजारौँ घोडाले सोमपान गर्नका लागि तिमीलाई यहाँ लिएर आऊन्।

**आ मन्द्रैरिन्द्र हरिभिर्याहि मयूररोमभिः। मा त्वा के चिन्नि येमुरिन्न पाशिनोऽति धन्वेव ताँ इहि ॥४॥**

यात्रीले मरुस्थल पार गरेझैँ हे इन्द्रदेव ! मयुरले आनन्ददायी पँखेटा फिँजाएको जस्तो जगर भएका घोडामा मार्गको बाधा हटाउँदै तिमी आऊ। बाटामा जाल फिँजाउनेहरूले तिमीलाई बाधा हाल्न नसकून्।

**त्वमङ्ग प्र शंसिषो देवः शविष्ठ मर्त्यम्। न त्वदन्यो मघवन्नस्ति मर्डितेन्द्र ब्रवीमि ते वचः ॥५॥**

हे प्रशंसनीय बलवान् इन्द्रदेव ! तिमी आफ्ना तेजले तेजस्वी भएर साधकको प्रशंसा गर्दछौ। हे ऐश्वर्यवान् इन्द्रदेव ! सुख प्रदान गर्ने तिमीबाहेक अन्य कोही पनि छैन। त्यसैले हामी सबैले तिम्रै स्तवन गरिरहेका छौँ।

**त्वमिन्द्र यशा अस्यृजीषी शवसस्पतिः। त्वं वृत्राणि हंस्यप्रतीन्येक इत्पुर्वनुत्तश्चर्षणीधृति ॥६॥**

हे इन्द्रदेव ! तिमी बलशाली, सोमपान गर्ने र कीर्तिवान् छौ। मानिसको हितका लागि अत्यधिक बलशाली शत्रुलाई कसैको सहायता विना एक्लै नष्ट गर्न समर्थ छौ।

**इन्द्रमिद्देवतातय इन्द्रं प्रयत्यध्वरे। इन्द्रं समीके वनिनो हवामह इन्द्रं धनस्य सातये ॥७॥**

दैवी प्रयोजनका लागि गरेका यज्ञमा हामी याजकहरू प्रारम्भ र समाप्त हुने बेलामा इन्द्रदेवलाई आह्वान गर्दछौँ। धन प्राप्तिका कामनाले पनि इन्द्रदेवलाई आह्वान गर्दछौँ।

**इमा उ त्वा पुरूवसो गिरो वर्धन्तु या मम। पावकवर्णाः शुचयो विपश्चितोऽभि स्तोमैरनूषत ॥८॥**

हे ऐश्वर्यवान् इन्द्रदेव हाम्रा स्तुतिले तिम्रो कीर्ति बढोस्। अग्निजस्तै प्रखर, पवित्र

आत्माका विद्वान् साधकले तिम्रो स्तोत्र गाएर प्रार्थना गर्दछन्।

**उदु त्ये मधुमत्तमा गिर स्तोमास ईरते। सत्राजितो धनसा अक्षितोतयो वाजयन्तो रथा इव ॥९॥**

वास्तविक विजय प्रदान गर्ने, ऐश्वर्य प्राप्तिका माध्यम, निरन्तरका रक्षक, मधुर स्तोत्र, यी सबै युद्धको उपकरण रथजस्तै हुनाले हामी निरन्तर स्तोत्र गायन गर्दछौँ।

**यथा गौरो अपा कृतं तृष्यन्नेत्यवेरिणम्। आपित्वे नः प्रपित्वे तूयमा गहि कण्वेषु सु सचा पिब ॥१०॥**

हे इन्द्रदेव ! तिर्खाएको गौर मृग तलाउनजिक कुदेर गएझैँ तिमी हाम्रा सहचर बनेर यज्ञमा आऊ र हामी कण्वपुत्रहरूका यज्ञमा सोमपान गरेर सन्तुष्ट होऊ।

## इति चतुर्दशः खण्डः

चौधौँ खण्ड समाप्त भयो

***

## पञ्चदशः खण्डः

पन्धौँ खण्ड

**शग्ध्यू३ षु शचीपत इन्द्र विश्वाभिरूतिभिः। भगं न हि त्वा यशसं वसुविदमनु शूर चरामसि ॥१॥**

शचीका पति, शूरवीर हे इन्द्रदेव ! सबै किसिमका रक्षा साधनसँगै हामीलाई अभीष्ट फल प्रदान गर। सौभाग्ययुक्त धन प्रदान गर्ने तिमीलाई हामी आराधना गर्दछौँ।

**या इन्द्र भुज आभरः स्ववाँ असुरेभ्यः। स्तोतारमिन्मघवन्नस्य वर्धय ये च त्वे वृक्तबर्हिषः ॥२॥**

आत्मशक्तिसम्पन्न हे इन्द्रदेव ! तिमी राक्षसलाई जितेर ल्याएको धनले स्तोताको संरक्षण गर। जसले तिमीलाई आह्वान गर्दछन्, तिनको उन्नति गराऊ।

**प्र मित्राय प्रार्यम्णे सचथ्यमृतावसो। वरूथ्ये३ वरुणे छन्द्यं वचः स्तोत्रं राजसु गायत ॥३॥**

हे परमार्थी याज्ञिक हो ! मित्र, वरुण, अर्यमादेव यज्ञशालामा प्रतिष्ठित भइसकेपछि छन्दोबद्ध र गाउन योग्य स्तोत्रले उनीहरूको प्रार्थना गर।

**अभि त्वा पूर्वपीतय इन्द्र स्तोमेभिरायवः। समीचीनास ऋभवः समस्वरन् रुद्रा गृणन्त पूर्व्यम् ॥४॥**

हे इन्द्रदेव ! उहिलेदेखि नै ऋभु र रुद्रहरूले तिम्रो स्तुति गर्दै आएका छन्। याजकहरू स्तुति गर्दै सोमपान गर्नका लागि सर्वप्रथम तिमीलाई नै बोलाउँछन्।

**प्र व इन्द्राय बृहते मरुतो ब्रह्मार्चत। वृत्रं हनति वृत्रहा शतक्रतुर्वज्रेण शतपर्वणा ॥५॥**

हे मरुत् हो ! महान् इन्द्रदेवका लागि स्तुति अर्पित गर। शतकर्मा इन्द्रले सयौँ ग्रन्थि भएका वज्रले वृत्रलाई मार्दछन्।



**बृहदिन्द्राय गायत मरुतो वृत्रहन्तमम्। येन ज्योतिरजनयन्नृतावृधो देवं देवाय जागृवि ॥६॥**

यज्ञका संवर्द्धक हे मरुत् हो ! सामगानद्वारा देवताहरूले इन्द्रदेवलाई जागृत र ज्योतिसम्पन्न गराएका थिए। शत्रु संहार गर्ने उही बृहत् साम इन्द्रका लागि गाओ।

**इन्द्र क्रतुं न आ भर पिता पुत्रेभ्यो यथा। शिक्षा णो अस्मिन्पुरुहूत यामनि जीवा ज्योतिरशीमहि ॥७॥**

हे इन्द्रदेव ! हामीलाई उत्तम कर्मको फल प्राप्त होस्। पिताले पुत्रलाई धन आदि दिएर पालनपोषण गरेझैँ हामीलाई तिमी पोषित गर। अनेकौँले सहायताका लागि बोलाइने हे इन्द्रदेव ! नित्य यज्ञमा हामीलाई तिमी दिव्य तेज प्रदान गर।

**मा न इन्द्र परा वृणग्भवा नः सधमाद्ये। त्वं न ऊती त्वमिन्न आप्यं मा न इन्द्र परावृणक् ॥८॥**

हे हाम्रा रक्षक र बन्धु इन्द्रदेव ! हाम्रा यज्ञमा आऊ। हामीलाई कहिल्यै पर नपार।

**वयं घ त्वा सुतावन्त आपो न वृक्तबर्हिषः। पवित्रस्य प्रस्रवणेषु वृत्रहन् परि स्तोतार आसते ॥९॥**

हे वृत्रहन्ता इन्द्रदेव ! जल ओरालोतिर बगेझैँ शोधित सोमरससहित झुकेर हामी तिमीलाई नमस्कार गर्दछौँ। पवित्र यज्ञका कुशका आसनमा एकैसाथ बसेर याजकहरू तिम्रो उपासना गर्दछन्।

**यदिन्द्र नाहुषीष्वा ओजो नृम्णं च कृष्टिषु। यद्वा पञ्चक्षितीनां द्युम्नमा भर सत्रा विश्वानि पौंस्या ॥१०॥**

हे इन्द्रदेव ! सङ्गठित प्रजामा हुने पराक्रम र समाजका पाँच वर्गमा हुने धनको ऐश्वर्य हामीलाई देऊ। एकताबाट हामीलाई शक्ति प्राप्त होस्।

**इति पञ्चदशः खण्डः**

पन्ध्रौँ खण्ड समाप्त भयो

***

## षोडशः खण्डः

सोह्रौँ खण्ड

**सत्यमित्था वृषेदसि वृषजूतिर्नोऽविता। वृषा ह्युग्र शृण्विषे परावति वृषो अर्वावति श्रुतः ॥१॥**

हे वीर इन्द्रदेव ! टाढा वा नजिक, जहाँसुकैका देशमा शक्तिशाली भनेर तिम्रो ख्याति फैलिएको छ। हे बलशाली इन्द्रदेव ! सोमयज्ञ गर्ने हामी याजकले आह्वान गर्दा आएर हाम्रो संरक्षण गर।

**यच्छक्रासि परावति यदर्वावति वृत्रहन्। अतस्त्वा गीर्भिर्द्युगदिन्द्र केशिभिः सुतावाँ आ विवासति ॥२॥**

सामर्थ्यवान्, वृत्रहन्ता हे इन्द्रदेव ! तिमी टाढा वा नजिक जहाँ भए पनि श्रेष्ठ घोडाझैँ वेगवान् स्तुतिले सोमयज्ञमा आऊ भनेर याजकहरू तिमीलाई आह्वान गर्दछन्।





**अभि वो वीरमन्धसो मदेषु गाय गिरा महा विचेतसम्। इन्द्रं नाम श्रुत्यं शाकिनं वचो यथा ॥३॥**

हे उद्गाताहरू हो ! हितकारी, असुरजयी, सोमरसले आनन्द प्राप्त गर्ने, वीर, मेधावी र कीर्तिमान इन्द्रदेवलाई विशेष स्तोत्रले स्तुति गर।

**इन्द्र त्रिधातु शरणं त्रिवरूथं स्वस्तये। छर्दिर्यच्छ मघवद्भ्यश्च मह्यं च यावया दिद्युमेभ्यः ॥४॥**

हे इन्द्रदेव ! ऐश्वर्यसम्पन्न तीन धातुयुक्त तीनै ऋतुमा काम लाग्ने आश्रय हामीलाई प्रदान गर। भ्रम वा मोह हामीदेखि दूर राख। हामी र हाम्रो आवासमा शस्त्रको प्रयोग नगर।

**श्रायन्त इव सूर्यं विश्वेदिन्द्रस्य भक्षत। वसूनि जातो जनिमान्योजसा प्रति भागं न दीधिम ॥५॥**

सूर्यको आश्रयमा किरण रहेझैँ इन्द्रदेव सम्पूर्ण संसारका आश्रयदाता हुन्। पिताबाट पुत्रले पाउने धनको भागजस्तै इन्द्रदेवसित हामी आफ्ना भागको कामना गर्दछौँ। किनभने जन्म लिएका र जन्म लिनेहरूलाई उनैले आआफ्नो भाग प्रदान गर्दछन्।

**न सीमदेव आप तदिषं दीर्घायो मर्त्यः। एतग्वा चिद्य एतशो युयोजत इन्द्रो हरी युयोजते ॥६॥**

हे दीर्घजीवी इन्द्रदेव ! ईश्वरीय निष्ठाविहीन मानिसले उत्तम किसिमको धनऐश्वर्य प्राप्त गर्न सक्दैन। यज्ञमा जानका लागि सेतो रङ्गका दुई अश्व आफ्ना रथमा बाँधेका इन्द्रको स्तुति नगर्नेले इन्द्रदेवतालाई प्राप्त गर्न पनि सक्दैन।

**आ नो विश्वासु हव्यमिन्द्रं समत्सु भूषत। उप ब्रह्माणि सवनानि वृत्रहन्परमज्या ऋचीषम ॥७॥**

सङ्ग्राममा बोलाउन योग्य, वृत्रहन्ता, धनुषको गतिलो प्रत्यञ्चाजस्ता, उत्तम मन्त्रले स्तुत्य हे इन्द्रदेव ! हाम्रा तीनै कालका यज्ञ एवं स्तुतिलाई तिमी सुहाउँदो बनाइदेऊ।

**तवेदिन्द्रावमं वसु त्वं पुष्यसि मध्यमम्। सत्रा विश्वस्य परमस्य राजसि न किष्ट्वा गोषु वृण्वते ॥८॥**

हे इन्द्रदेव ! निम्न कोटि, मध्यम कोटि र उत्तम कोटिका धनका तिमीमात्रै एउटा स्वामी हौ। तिमीले गाई आदि धन दान गर्दा कसैले पनि तिमीलाई रोक्न सक्दैन।

**क्वेयथ क्वेदसि पुरुत्रा चिद्धि ते मनः। अलर्षि युध्म खजकृत् पुरन्दर प्र गायत्रा अगासिषुः ॥९॥**

विभिन्न स्थानमा मन रमाउने युद्ध कौशलमा निपुण, शत्रुका सहर उजाड्ने हे बलवान् इन्द्रदेव ! तिमी कता गयौ ? यस बेला तिमी कता छौ ? हाम्रा कुशल स्तोताले गाएको सामगान सुन्न यज्ञमा आऊ।

**वयमेनमिदा ह्योऽपीपेमेह वज्रिणम्। तस्मा उ अद्य सवने सुतं भरा नूनं भूषत श्रुते ॥१०॥**

हामी याजकले इन्द्रदेवलाई हिजो सोमरसले सन्तुष्ट गराएका थियौँ। उनलाई आजका यज्ञमा पनि सोमरस प्रदान गर्दछौँ। हे याजक हो ! यस बेला स्तोत्र गाएर इन्द्रदेवलाई सुहाउँदिलो बनाओ।

## इति षोडशः खण्डः

सोह्रौँ खण्ड समाप्त भयो

***

## सप्तदशः खण्डः

सत्रौँ खण्ड

**यो राजा चर्षणीनां याता रथेभिरध्रिगुः। विश्वासां तरुता पृतनानां ज्येष्ठं यो वृत्रहा गृणे ॥१॥**

मानवका अधिपति, वेगवान्, शत्रुसेना संहारक, वृत्रहन्ता इन्द्रदेवलाई हामी स्तुति गर्छौं।

**यत इन्द्र भयामहे ततो नो अभयं कृधि। मघवञ्छग्धि तव तन्न ऊतये वि द्विषो वि मृधो जहि ॥२॥**

हे इन्द्रदेव ! हामी डराएका छौँ। हामीलाई भयमुक्त गराऊ। हे धनवान् इन्द्रदेव ! तिमी सर्वशक्तिमान् छौ, त्यसैले आफ्ना सामर्थ्यले हाम्रा शत्रु तथा हिंस्रक वृत्ति हुनेलाई नष्ट गरेर हाम्रो संरक्षण गर।

**वास्तोष्पते ध्रुवा स्थूणांसत्रं सोम्यानाम्। द्रप्सः पुरां भेत्ता शश्वतीनामिन्द्रो मुनीनां सखा ॥३॥**

हे गृहस्वामी ! घरका स्तम्भ बलिया होऊन्, सोमयज्ञ गर्ने याजकलाई शरीर रक्षा गर्ने शक्ति प्राप्त होस्। राक्षसका अनेकौं सहर उजाड्दै सोमपान गर्ने इन्द्रदेव मुनिहरूका सखा होऊन्।

**बण्महाँ असि सूर्य बडादित्य महाँ असि। महस्ते सतो महिमा पनिष्टम मह्ना देव महाँ असि ॥४॥**

प्रेरक, अदितिपुत्र हे इन्द्रदेव ! तिमी महान् तेजस्वी छौ भन्ने कुरो निश्चित छ। हे देव ! तिमी महान् शक्तिशाली पनि छौ। तिम्रो महानताको गुणगान हामी गर्दछौँ।

**अश्वी रथी सुरूप इद्गोमान् यदिन्द्र ते सखा। श्वात्रभाजा वयसा सचते सदा चन्द्रैर्याति सभामुप ॥५॥**

हे इन्द्रदेव ! तिमीलाई आफ्नो मित्र बनाउने मानिस रथयुक्त सौन्दर्यवान्, ऐश्वर्यवान् र धनधान्यले सधैँ पूर्ण रहन्छ। सधैँ श्रेष्ठ आभूषणले सुसज्जित भएर सबैलाई प्रसन्नता दिने सभागृह आदिमा जान्छ।

**यद्द्याव इन्द्र ते शतं शतं भूमीरुत स्युः। न त्वा वज्रिन्त्सहस्रं सूर्या अनु न जातमष्ट रोदसी ॥६॥**

हे इन्द्रदेव ! सयौँ देवलोक, सयौँ भूमि र हजारौँ सूर्य उत्पन्न होऊन् तापनि तिम्रो सामना गर्न सक्दैनन्। द्यावापृथिवीमा तिम्रो बराबरी कसैले गर्न सक्दैन।

**यदिन्द्र प्रागपागुदङ्न्यग्वा हूयसे नृभिः। सिमा पुरू नृषूतो अस्यानवेऽसि प्रशर्ध तुर्वशे ॥७॥**

हे इन्द्रदेव ! स्तोताहरू सहायताका लागि चारैतिरबाट तिमीलाई आह्वान गर्दछन्। शत्रुनाशक हे इन्द्रदेव ! अनु र तुर्वशले तिमीलाई प्रार्थनापूर्वक बोलाउछन्।

**कस्तमिन्द्र त्वा वसवा मर्त्यो दधर्षति। श्रद्धा हि ते मघवन्पार्ये दिवि वाजी वाजं सिषासति ॥८॥**

हे सबैका आश्रयदाता इन्द्रदेव ! तिमीलाई कसले पो अपमानित गर्न सक्ला ? हे ऐश्वर्यवान् इन्द्रदेव ! तिमीप्रति श्रद्धा राख्नेहरू बलशाली हुन्छन्। उनीहरू दुःखबाट पार हुने बेलामा पनि सहयोग प्राप्त गर्दछन्।

**इन्द्राग्नी अपादियं पूर्वागात्पद्वतीभ्यः। हित्वी शिरो जिह्वया रारपच्चरत् त्रिंशत्पदा न्यक्रमीत् ॥९॥**

हे इन्द्र र अग्निदेव ! गोडाविनाकी उषा, गोडा भएका प्रजाभन्दा पहिले नै आउँछिन् र शिर नभए पनि जिब्राले प्रेरणा दिँदै एक दिनमा तीस मुहूर्त वा कदम चल्दछिन्।

**इन्द्र नेदीय एदिहि मितमेधाभिरूतिभिः। आ शंतम शंतमाभिरभिष्टिभिरा स्वापे स्वापिभिः ॥१०॥**

हे इन्द्रदेव ! शान्तिप्रदायक, सुखदायी कामनाका साथ श्रेष्ठ बन्धुसहित तिमी हाम्रा निकट आऊ। तिमी मेधावी र संरक्षणको कामना गर्नेहरूसँग आऊ।

**इति सप्तदशः खण्डः**

सत्रौँ खण्ड समाप्त भयो

***

## अष्टादशः खण्डः

अठारौँ खण्ड

**इत ऊती वो अजरं प्रहेतारमप्रहितम्। आशुं जेतारं होतारं रथीतममतूर्तं तुग्रियावृधम् ॥१॥**

हे साधक हो ! आफ्नो संरक्षणका लागि, शत्रुको संहार गर्ने, सर्वप्रेरक, वेगवान्, यज्ञस्थलमा जाने, उत्तम रथी, अहिंसनीय, जलवर्षा गराउने र अजरअमर इन्द्रदेवलाई आह्वान गर।

**मो षु त्वा वाघतश्च नारे अस्मन्नि रीरमन्। आरात्ताद्वा सधमादं न आ गहीह वा सन्नुप श्रुधि ॥२॥**

हे इन्द्रदेव ! यजमानले तिमीलाई हामीदेखि टाढा पुऱ्याउन नसकून्। तिमी हाम्रा यज्ञमा चाँडै आऊ र हाम्रा नजिकै बसेर हाम्रो स्तुति ध्यानपूर्वक सुन।

**सुनोता सोमपाव्ने सोममिन्द्राय वज्रिणे। पचता पक्तीरवसे कृणुध्वमित्पृणन्नित्पृणते मयः ॥३॥**

हे याजकहरू हो ! वज्रधारी सोमरस पान गर्ने इन्द्रदेवका लागि सोम पेलेर तयार गर। इन्द्रदेवलाई प्रसन्न गर्नका लागि पुरोडाश पकाएर यज्ञ गर। यजमानलाई सुखी बनाउने इन्द्रदेव स्वयं हविष्यान्न ग्रहण गर्दछन्।

**यः सत्राहा विचर्षणिरिन्द्रं तं हूमहे वयम्। सहस्रमन्यो तुविनृम्ण सत्पते भवा समत्सु नो वृधे ॥४॥**

शत्रुनाशक र सर्वद्रष्टा इन्द्रदेवलाई हामी आह्वान गर्दछौँ। जोसले सम्पन्न, धनले सम्पन्न, सज्जनका प्रतिपालक हे इन्द्रदेव ! तिमी रणक्षेत्र र ऐश्वर्य वृद्धिमा सहायक होऊ।

**शचीभिर्नः शचीवसू दिवा नक्तं दिशस्यतम्। मा वां रातिरुपदसत्कदाचनास्मद्रातिः कदाचन ॥५॥**

हे पुरुषार्थयुक्त, वैभवसम्पन्न अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै हाम्रा असल कर्मले प्रसन्न भएर हामीलाई निरन्तर धन प्रदान गर। तिमीहरूबाट दिइएको ऐश्वर्यमा कहिल्यै कमी नहोस्। हाम्रा सार्थक सहयोगमा पनि कहिल्यै कमी नआओस्।

**यदा कदा च मीढुषे स्तोता जरेत मर्त्यः। आदिद्वन्देत वरुणं विपा गिरा धर्त्तारं विव्रतानाम् ॥६॥**

हविदाता यजमानहरूका लागि स्तोताहरूले स्तुति गरेका बेला उनीहरूको विशेष संरक्षण गर्ने कामनाले विभिन्न कर्महरू सम्पन्न गर्ने, पापनिवारक वरुणदेवलाई विशेष स्तुतिले वन्दना गर।

**पाहि गा अन्धसो मद इन्द्राय मेध्यातिथे। यः संमिश्लो हर्योर्यो हिरण्यय इन्द्रो वज्री हिरण्ययः ॥७॥**

हे मेधातिथि ! रथमा दुई वटा अश्व जोत्ने, वज्रधारी, रमणीय, सुवर्ण रथमा विराजमान, इन्द्रदेवलाई सोमपानले आनन्दित गरेर आफ्ना गाईको रक्षा गर।

**उभयं शृणवच्च न इन्द्रो अर्वागिदं वचः। सत्राच्या मघवान्त्सोमपीतये धिया शविष्ठ आ गमत् ॥८॥**

धनवान् र बलवान् हे इन्द्रदेव ! हाम्रा दुवै किसिमका प्रार्थना नजिकै आएर सुन। सामूहिक उपासनाले प्रसन्न भएर तिमीहरू सोमपान गर्न यहाँ उपस्थित होओ।

**महे च न त्वाद्रिवः परा शुल्काय दीयसे। न सहस्राय नायुताय वज्रिवो न शताय शतामघ ॥९॥**

हे वज्रधारी इन्द्रदेव ! अत्यधिक धन पाए पनि तिमीलाई त्याग्न सकिँदैन। हे ऐश्वर्यवान इन्द्रदेव ! सय, हजार, दस हजार जतिसुकै मूल्यमा पनि तिम्रो भक्ति त्याग्न सकिँदैन।

**वस्याँ इन्द्रासि मे पितुरुत भ्रातुरभुञ्जतः। माता च मे छदयथः समा वसो वसुत्वनाय राधसे ॥१०॥**

हे इन्द्रदेव ! तिमी हाम्रा जन्मदाता पिताका तुलनामा अधिक धनवान् छौ। पालन नगर्ने दाजुभाइभन्दा बढी धनवान् छौ। सबैलाई पालन गर्ने इन्द्रदेव ! हाम्रा लागि माताकै स्तरका छौ। हामी धनधान्यले परिपूर्ण महान् जीवनको कामना गर्दछौँ।

## इति अष्यदशः खण्डः

अठारौँ खण्ड समाप्त भयो

***

## एकोनविंशः खण्डः

उन्नाईसौँ खण्ड

**इम इन्द्राय सुन्विरे सोमासो दध्याशिरः। ताँ आ मदाय वज्रहस्त पीतये हरिभ्यां याह्योक आ ॥१॥**

हे वज्रधारी, तेजस्वी इन्द्रदेव ! दही मिसिएको, आनन्ददायक, विशेष रूपले तयार यो सोमरस पान गर्नका लागि तिमी यज्ञस्थलमा आऊ।

**इम इन्द्र मदाय ते सोमाश्चिकित्र उक्थिनः। मधोः पपान उप नो गिरः शृणु रास्व स्तोत्राय गिर्वणः ॥२॥**

हे स्तुत्य इन्द्रदेवता ! याज्ञिकहरूले विशिष्ट विधिले शुद्ध गरेको, आनन्ददायी, मधुर यो सोमरस सेवन गरेर स्तोत्र सुन्दै हामी याजकहरूका लागि श्रेष्ठ सम्पदा प्रदान गर।

**आ त्वाऽद्य सबर्दुघां हुवे गायत्रवेपसम्। इन्द्रं धेनुं सुदुघामन्यामिषमुरुधारामरङ्कृतम् ॥३॥**

इन्द्रदेवको प्रसन्नताका लागि हामी सजिलै दुहिने, सबैलाई दुध दिने गाईजस्तै अन्य खालका अन्न प्रदान गर्ने, अनेकौँ धारायुक्त गायत्री रूपी धेनुलाई आह्वान गर्दछौँ।

**न त्वा बृहन्तो अद्रयो वरन्त इन्द्र वीडवः। यच्छिक्षसि स्तुवते मावते वसु न किष्टदा मिनाति ते ॥४॥**

विशाल पर्वतजस्तै स्थिर, कर्तव्यपथमा अडिग हे इन्द्रदेव ! तिमीले प्रदान गरेको वैभव हामी यजमानलाई निरन्तर प्राप्त भइरहोस्।

**क ईं वेद सुते सचा पिबन्तं कद्वयो दधे। अयं यः पुरो विभिनक्त्योजसा मन्दानः शिप्र्यन्धसः ॥५॥**

सोमयज्ञमा एकै ठाउँमा बसेर सोमपान गर्ने अत्यधिक वैभव सम्पन्न इन्द्रदेवलाई कसले चिन्दैन ? सोमपानले खुसी हुने, राम्रो टोपी लगाएका इन्द्रदेवका शक्तिले विरोधीको सहर विनाश गर्दछ।

**यदिन्द्र शासो अव्रतं च्यावया सदसस्परि। अस्माकमंशु मघवन्पुरुस्पृहं वसव्ये अधि बर्हय ॥६॥**

अपराधीलाई कठोर दण्ड दिइएझैँ, यज्ञस्थलका चारैतिर उपस्थित यज्ञविरोधीहरूलाई

पर हटाइदिने, धनधान्यले सम्पन्न हे इन्द्रदेवता ! हाम्रो श्रेष्ठ सोमरसलाई तिमी वृद्धि गर।

**त्वष्टा नो दैव्यं वचः पर्जन्यो ब्रह्मणस्पतिः। पुत्रैर्भ्रातृभिरदितिर्नु पातु नो दुष्टरं त्रामणं वचः ॥७॥**

देवशिल्पी त्वष्टा, पर्जन्य देवता, बृहस्पति देवता, सम्पूर्ण परिवारसहित देवमाता अदिति आदि देवशक्तिहरूले दुःखबाट मुक्ति प्रदान गर्ने स्तोत्रले हामीलाई रक्षा गरून्।

**कदा चन स्तरीरसि नेन्द्र सश्चसि दाशुषे। उपोपेन्नु मघवन्भूय इन्नु ते दानं देवस्य पृच्यते ॥८॥**

हे इन्द्रदेव ! तिमी कहिल्यै सृष्टि विखण्डित गर्दैनौ। तिमी याजकका सहयोगी देवता हौ। तिम्रो दान बारम्बार आउँछ, त्यो आशाभन्दा बढी नै प्राप्त भएको हुन्छ।

**युङ्क्ष्वा हि वृत्रहन्तम हरी इन्द्र परावतः। अर्वाचीनो मघवन्त्सोमपीतय उग्र ऋष्वेभिरा गहि ॥९॥**

वृत्रासुर विनाश गर्न सक्षम, रथमा आसीन, ऐश्वर्यले सम्पन्न हे इन्द्रदेव ! तिमी शक्तिले सम्पन्न भएर मरुत्हरूसँग सुदूर प्रदेशबाट हाम्रा यज्ञमा आऊ।

**त्वामिदा ह्यो नरोऽपीप्यन्वज्रिन्भूर्णयः। स इन्द्र स्तोमवाहस इह श्रुध्युप स्वसरमा गहि ॥१०॥**

याजकले प्रदान गरेको सोमरस निरन्तर सेवन गर्ने वज्रधारी हे इन्द्रदेव ! तिमी ऋत्विक्हरूले उच्चारण गरेका स्तोत्र सुन्दै यज्ञस्थलमा आऊ।

## इति एकोनविंशः खण्डः

उन्नाईसौँ खण्ड समाप्त भयो

***

## विंशः खण्डः

बीसौँ खण्ड

**प्रत्यु अदर्श्यायत्युच्छन्ती दुहिता दिवः। अपो महि वृणुते चक्षुषा तमो ज्योतिष्कृणोति सूनरी ॥१॥**

द्युलोककी पुत्री, अन्धकार नष्ट गर्ने उषादेवी देखिँदै छिन्। उनी अन्धकार हटाएर सबैले सबै कुरो देखून् भन्दै प्रकाश फिँजाउँछिन्।

**इमा उ वां दिविष्टय उस्रा हवन्ते अश्विना। अयं वामह्वेऽवसे शचीवसू विशं विशं हि गच्छथः ॥२॥**

हे सम्पूर्ण प्राणीका आश्रयदाता अश्विनीकुमार हो ! प्रकाशको कामना गर्ने प्रजाहरू तिमीहरूको आह्वान गर्दछन्। सबै मानिसका नजिक जाने र पराक्रमी धन आर्जन गर्नेहरू आफ्नो संरक्षणका लागि तिमीहरूलाई आह्वान गर्दछन्।

**कुष्ठः को वामश्विना तपानो देवा मर्त्यः। घ्नता वामश्नया क्षपमाणोंऽशुनेत्थमु आद्वन्यथा ॥३॥**

हे आभासम्पन्न अश्विनीकुमारहरू हो ! धर्तीमा तिमीहरू दुईलाई प्रकाशित गर्नमा अर्को कुन प्राणी समर्थ होला ? तिमीहरूका लागि ढुङ्गामा सोमरस पेलेर तयार पारिराख्ने, थाकिसकेका यजमान राजाको जस्तै, आफ्नै रहरले भोग गर्नमा सक्षम हुन्छन्।

**अयं वां मधुमत्तमः सुतः सोम दिविष्टिषु। तमश्विना पिबतं तिरोअह्न्यं धत्तं रत्नानि दाशुषे ॥४॥**

हे यज्ञकर्मलाई विस्तृत गराउने अश्विनीकुमारहरू हो ! तिमीहरू यस यज्ञमा अत्यन्त मधुर तथा अघिल्लो दिन पहिले तयार गरिएको सोमरस पान गर। यज्ञकर्ता यजमानलाई रत्न र ऐश्वर्य प्रदान गर।

**आ त्वा सोमस्य गल्दया सदा याचन्नहं ज्या। भूर्णिं मृगं न सवनेषु चुक्रुधं क ईशानं न याचिषत् ॥५॥**

सिंहजस्तै महान् पराक्रमी, भरणपोषण गर्नमा समर्थ हे इन्द्रदेव ! यज्ञमा सोमरस प्रदान गर्दै विजयदायक स्तुतिद्वारा हामी निरन्तर तिमीसित याचना गर्दछौँ। हामी क्रोधका पात्र कहिल्यै नहोऔँ, किनभने आफ्ना अधिपतिसित याचना नगर्ने व्यक्ति को पो होला र ?

**अध्वर्यो द्रावया त्वं सोममिन्द्रः पिपासति। उपो नूनं युयुजे वृषणा हरी आ च जगाम वृत्रहा ॥६॥**

बलवान् अश्व हुने रथमा आरूढ, वृत्रसंहारक इन्द्रदेवको आगमन भयो। हे अध्वर्युहरू हो ! ती सोमपान गर्न इच्छुक इन्द्रदेवका लागि चाँडै सोमरस तयार गर।

**अभीषतस्तदा भरेन्द्र ज्यायः कनीयसः। पुरूवसुर्हि मघवन्बभूविथ भरेभरे च हव्यः ॥७॥**

हे वैभवसम्पन्न इन्द्रदेव ! हामीजस्ता अकिञ्चनलाई अभीष्ट ऐश्वर्य प्रदान गर्ने कृपा गर। तिमी सङ्ग्राममा सहायता गर्नका लागि आह्वान गर्न योग्य छौ।

**यदिन्द्र यावतस्त्वमेतावदहमीशीय। स्तोतारमिद्दधिषे रदावसो न पापत्वाय रंसिषम् ॥८॥**

हे सम्पत्तिका धनी इन्द्रदेव ! तिमीजस्तै सम्पदाको अधिपति हुने रहर हामी गर्दछौँ। स्तोतालाई धन प्रदान गर्ने हाम्रो इच्छा छ, तर पापीलाई होइन।

**त्वमिन्द्र प्रतूर्तिष्वभि विश्वा असि स्पृधः। अशस्तिहा जनिता वृत्रतूरसि त्वं तूर्य तरुष्यतः ॥९॥**

हे सबैका जन्मदाता इन्द्रदेव ! कीर्तिविहीन दुष्ट र दुराचारी शत्रुलाई तिमी सङ्ग्राममा पराजित गर्दछौ। तिमी असुर नष्ट गर्दछौ।

**प्र यो रिरिक्ष ओजसा दिवः सदोभ्यस्परि। न त्वा विव्याच रज इन्द्र पार्थिवमति विश्वं ववक्षिथ ॥१०॥**

हे इन्द्रदेव ! तिमी आफ्ना ओजले द्युलोकभन्दा पर प्रतिष्ठित छौ। भूमण्डलको तेज पनि तिमीलाई व्याप्त गर्न सक्दैन। हाम्रा लागि स्वधा प्रदान गर्ने तिमी नै सम्पूर्ण विश्वमा व्याप्त बनेर रहेका छौ।

## इति विंशः खण्डः

बीसौँ खण्ड समाप्त भयो

***

## एकविंशः खण्डः

एक्काईसौँ खण्ड

**असावि देवं गोऋजीकमन्धो न्यस्मिन्निन्द्रो जनुषेमुवोच। बोधामसि त्वा हर्यश्व यज्ञैर्बोधा नः स्तोममन्धसो मदेषु ॥१॥**

दिव्य सोमरस पेलेर गाईका दुधमा मिसाएका छौँ। इन्द्रदेव जन्मैदेखि यो रुचाउँछन्। हे हरि नामका अश्व भएका इन्द्रदेव ! हामी यज्ञमा तिमीलाई जागृत गराउँछौँ। सोमले आनन्दित भएर हाम्रा स्तोत्रमा तिमी ध्यान देऊ।

**योनिष्ट इन्द्र सदने अकारि तमा नृभिः पुरुहूत प्र याहि। असो यथा नोऽविता वृधश्चिद्ददो वसूनि ममदश्च सोमैः ॥२॥**

अनेकौँ मानिसबाट स्तुति गरिने हे इन्द्रदेव ! यज्ञवेदिकामा तिमी आफ्ना सहयोगीसँग प्रतिष्ठित हुने कृपा गर। रक्षक, पोषणकर्ता र धनदाता तिमी सोमरस पान गरेर आनन्द अनुभव गर।

**अदर्दरुत्समसृजो वि खानि त्वमर्णवान्बद्बधानाँ अरम्णाः। महान्तमिन्द्र पर्वतं वि यद्वः सृजद्धारा अव यद्दानवान्हन् ॥३॥**

हे इन्द्रदेव ! तिमीले बादल फुटाएर जलका धारा प्रकट गर्न बाधाहरू पन्छायौ। समुद्रलाई अग्ला छाल र धेरै जलले प्रसन्न गरायौ। तिमीले नै राक्षसको संहार गर्‍यौ।

**सुष्वाणास इन्द्र स्तुमसि त्वा सनिष्यन्तश्चित्तुविनृम्ण वाजम्। आ नो भर सुवितं यस्य कोना तना त्मना सह्याम त्वोताः ॥४॥**

हे इन्द्रदेव ! हामी सोम र अन्न आदि हव्य समर्पित गर्दै तिमीलाई प्रार्थना गर्दछौँ। तिम्रा इच्छाको अनुकूल सम्पदा हामीलाई प्रदान गर। तिम्रा कृपाले हामी आफ्ना परिश्रमबाट उत्तम सम्पदाका अधिकारी बनौँ।

**जगृह्मा ते दक्षिणमिन्द्र हस्तं वसूयवो वसुपते वसूनाम्। विद्मा हि त्वा गोपतिं शूर गोनामस्मभ्यं चित्रं वृषणं रयिं दाः ॥५॥**

हे सम्पत्तिवान्, शूरवीर, वृत्रहन्ता इन्द्रदेव ! ऐश्वर्यको कामनाले हामी तिम्रा दाहिने हातको आश्रय लिन्छौँ। तिमी गाईका स्वामी हौ। तिमी हाम्रा नानाभाँतिका कामना पूर्ण गराउने खालको वैभव हामीलाई प्रदान गर।

**इन्द्रं नरो नेमधिता हवन्ते यत्पार्या युनजते धियस्ताः। शूरो नृषाता श्रवसश्च काम आ गोमति व्रजे भजा त्वं नः ॥६॥**

सेनानायकहरू पनि आफ्नो सहायताका लागि इन्द्रदेवलाई आह्वान गर्दछन्। हे इन्द्रदेव ! तिमी पुरुषहरूका धनदाता र बलवर्द्धक हौ। हामीलाई लाभ गराउने गाई गोठसम्म पुऱ्याइदिने कृपा गर।

**वयः सुपर्णा उप सेदुरिन्द्रं प्रियमेधा ऋषयो नाधमानाः। अप ध्वान्तमूर्णुहि पूर्धि चक्षुर्मुमुग्ध्या३स्मान्निधयेव बद्धान् ॥७॥**

सञ्चरणशील सूर्यको किरण बलशाली इन्द्रदेवका नजिकै पुग्दछ। देवताले बन्धनमा परेकालाई मुक्ति दिऊन्, अन्धकार हटाइदिऊन् र हाम्रा आँखालाई दिव्य प्रकाशले युक्त बनाइदिऊन् भनेर प्रियमेध अथवा यज्ञप्रेमी ऋषि याचना गरिरहेका छन्।

**नाके सुपर्णमुप यत्पतन्तं हृदा वेनन्तो अभ्यचक्षत त्वा। हिरण्यपक्षं वरुणस्य दूतं यमस्य योनौ शकुनं भुरण्युम् ॥८॥**

सुनौला पँखेटा भएको पक्षीझैं आकाशमा गतिशील, सर्वत्र पोषण प्रदान गर्ने वरुणका दूत हे वेनदेव ! दुनियाँले तिमीलाई हृदयमा राख्छ। अग्निको उत्पत्तिस्थल अन्तरिक्षमा तिमीलाई चरोझैं विचरण गर्दै हामी देख्छौं।

**ब्रह्म जज्ञानं प्रथमं पुरस्ताद्वि सीमतः सुरुचो वेन आवः। स बुध्न्या उपमा अस्य विष्ठाः सतश्च योनिमसतश्च विवः ॥९॥**

पूर्वमा सबैभन्दा पहिले ब्रह्मतेज उत्पन्न भयो। वेनले उसलाई उपदेश दिँदै उनको योग्यताअनुसारको तेज विशेष रूपले आकाशमा स्थापित गरे। उत्पन्न भएका र उत्पन्न नभएका जेजति कुराहरू छन्, ती सबैको कारण पनि उही ब्रह्मतेज नै हो।

**अपूर्व्या पुरुतमान्यस्मै महे वीराय तवसे तुराय। विरप्शिने वज्रिणे शन्तमानि वचांस्यस्मै स्थविराय तक्षुः ॥१०॥**

शत्रुनाशक, तीव्रगामी, वज्रधारी, स्तुतिका लागि योग्य, महान् इन्द्रदेवका लागि हामीले अपूर्व सुखदायी र विस्तृत स्तोत्र उच्चारण गऱ्यौं।

## इति एकविंशः खण्डः

एक्काईसौं खण्ड समाप्त भयो

***

## द्वाविंशः खण्डः

बाईसौं खण्ड

**अव द्रप्सो अंशुमतीमतिष्ठदियानः कृष्णो दशभिः सहस्रैः। आवत्तमिन्द्रः शच्या धमन्तमप स्नीहितिं नृमणा अधद्राः ॥१॥**

चाँडो गति भएका, दस हजार सैनिक लिएर आक्रमण गर्ने, सम्पूर्ण संसारलाई सताउने, अंशुमती नदीका किनारमा रहेको कृष्णासुरमाथि सबैका प्रिय इन्द्रदेवले प्रत्याक्रमण गरेर शत्रुसेनालाई पराजित गराए।

**वृत्रस्य त्वा श्वसथादीषमाणा विश्वे देवा अजहुर्ये सखायः। मरुद्भिरिन्द्र सख्यं ते अस्त्वथेमा विश्वाः पृतना जयासि ॥२॥**

हे इन्द्रदेव ! वृत्रासुरका डरले तिम्रा सबै सहायक देवता तिमीलाई छोडेर चारतिर भाग्दै थिए। त्यसपछि मरुत्हरूको सहयोग लिएर तिमीले शत्रुसेना परास्त गरायौ।

**विधुं दद्राणं समने बहूनां युवानं सन्तं पलितो जगार। देवस्य पश्य काव्यं महित्वाद्या ममार स ह्यः समान ॥३॥**

युद्धमा शौर्य प्रदर्शित गरेर शत्रुसेना लखेट्ने बल भएका इन्द्रदेवका प्रभावले कपाल फुलेका वृद्ध पनि फुर्तिला हुन्छन्। हे स्तोता ! महान् इन्द्रदेवका पराक्रमको चर्चा गर्ने विचित्र काव्य खोज, ती आज सकिए तापनि पुनः प्रकट हुन सक्लान्।

**त्वं ह त्यत्सप्तभ्यो जायमानोऽशत्रुभ्यो अभवः शत्रुरिन्द्र। गूढे द्यावापृथिवी अन्वविन्दो विभुमद्भ्यो भुवनेभ्यो रणं धाः ॥४॥**

हे अजातशत्रु इन्द्रदेव ! वृत्र आदि सात राक्षस उत्पन्न हुनासाथ तिमी उनीहरूका शत्रु भइहाल्यौ। द्युलोक र पृथ्वीलाई अन्धकारबाट उद्धार गरी प्रकाशित गरायौ। तिमीले नै यी लोकलाई राम्रोसित स्थिर गराएर ऐश्वर्यवान् र सौन्दर्यशाली बनाएका छौ।

**मेडिं न त्वा वज्रिणं भृष्टिमन्तं पुरुधस्मानं वृषभं स्थिरप्स्नुम्। करोष्यर्यस्तरुषीर्दुवस्युरिन्द्र द्युक्षं वृत्रहणं गृणीषे ॥५॥**

सत्कर्मका कारण प्रशंसित, वृत्रका संहारकर्ता, द्युलोकमा प्रतिष्ठित, शत्रुको विनाश गर्ने, शक्तिशाली, सङ्ग्राममा स्थिर रहने, वज्र धारण गर्ने, दुष्टका विनाशक इन्द्रदेवताले हामीलाई सधैँ विजय प्रदान गर्दछन्। त्यसैले हामी उनलाई प्रशंसनीय मानिसले झैँ स्तुति गर्दछौँ।

**प्र वो महे महे वृधे भरध्वं प्रचेतसे प्र सुमतिं कृणुध्वम्। विशः पूर्वीः प्र चरा चर्षणिप्राः ॥६॥**

हे मानिसहरू हो ! महान् कार्य सम्पन्न गर्ने, प्रख्यात इन्द्रदेवका लागि सोम प्रदान गर्दै श्रेष्ठ स्तोत्रले उनको स्तुति गर। हे इन्द्रदेव ! तिमी पनि हविदाता प्रजाको कामना पूरा गराउँदै कल्याण गर।

**शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ। शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानि ॥७॥**

धनधान्यले सम्पन्न, वैभवशाली, युद्धमा उत्साहपूर्वक विजय प्राप्त गर्ने, भयङ्कर शत्रुको सेनालाई विनाश गर्ने, याजकबाट गरिएका स्तुतिगान सुनिदिने हे इन्द्रदेव ! हामी आश्रयको कामना गर्दै तिमीलाई आह्वान गर्दछौँ।

**उदु ब्रह्माण्यैरत श्रवस्येन्द्रं समर्ये महया वसिष्ठ। आ यो विश्वानि श्रवसा ततानोपश्रोता म ईवतो वचांसि ॥८॥**

हे इन्द्रियजित् ऋषि ! आफ्ना शक्तिले सम्पूर्ण भुवनलाई विस्तृत गर्ने, अन्न प्राप्तिका कामनाले यज्ञमा यश बढाउने र उपासकको प्रार्थना सुन्ने इन्द्रदेवको महिमा वर्णन गर्ने खालका स्तोत्र पाठ गर।

**चक्रं यदस्याप्स्वा निषत्तमुतो तदस्मै मध्विच्चच्छद्यात्। पृथिव्यामतिषितं यदूधः पयो गोष्वदधा ओषधीषु ॥९॥**

देदीप्यमान वज्रधारी इन्द्रदेवका वज्रले उपासकका लागि अन्तरिक्षका मधुर जललाई प्रेरित गर्दछ। पृथ्वीमा प्रवाहमान उही जल गाईको दुधका रूपमा र वनस्पतिमा पोषक रसका रूपमा विद्यमान छ।

## इति द्वाविंशः खण्डः

बाईसौँ खण्ड समाप्त भयो

***

## त्रयोविंशः खण्डः

तेईसौँ खण्ड

**त्यमू षु वाजिनं देवजूतं सहोवानं तरुतारं रथानाम्। अरिष्टनेमिं पृतनाजमाशुं स्वस्तये तार्क्ष्यमिहा हुवेम ॥१॥**

हामी आफ्नो कल्याणका लागि देवताबाट सेवित, शक्तिशाली, सङ्ग्रामबाट उद्धार गर्ने कार्यमा सक्षम, शत्रुसेनामथि विजय प्राप्त गर्ने, नरोकिने खालको गति भएका, तीव्र गतिले उड्न सक्ने तार्क्ष्य भनिएका गरुड वा सूर्यलाई आह्वान गर्दछौँ।

**त्रातारमिन्द्रमवितारमिन्द्रं हवेहवे सुहवं शूरमिन्द्रम्। हुवे नु शक्रं पुरुहूतमिन्द्रमिदं हविर्मघवा वेत्विन्द्रः ॥२॥**

हामी कल्याणकारी कामनाका संरक्षक, युद्धमा सहायक, आह्वान योग्य, पराक्रमी, सक्षम र अनेकौँ स्तोताद्वारा स्तुत्य इन्द्रदेवलाई आह्वान गर्दछौँ। ऐश्वर्यवान् इन्द्रदेवताले हाम्रो कल्याण गरून्।

**यजामह इन्द्रं वज्रदक्षिणं हरीणां रथ्यां३ विव्रतानाम्। प्र श्मश्रुभिर्दोधुवदूर्ध्वधा भूवद्वि सेनाभिर्भयमानो वि राधसा ॥३॥**

वज्रपाणि, गतिमान् रथमा आसीन, केश एवं बाहु हल्लाएर शत्रु थर्काउने, सर्वश्रेष्ठ, सेनाका माध्यमबाट शत्रु अत्याउने इन्द्रदेवका लागि हामी आहुति प्रदान गर्दछौँ। तिनै इन्द्रदेवले उपासकलाई धनवैभव प्रदान गर्दछन्।

**सत्राहणं दाधृषिं तुम्रमिन्द्रं महामपारं वृषभं सुवज्रम्। हन्ता यो वृत्रं सनितोत वाजं दाता मघानि मघवा सुराधाः ॥४॥**

शत्रुको समूह संहार गर्ने, उनलाई थर्कमान गराउने, भगाइदिने, अत्यधिक शक्तिले युक्त असल वज्र लिएका, वृत्रलाई समाप्त गर्ने, अन्न प्रदान गर्ने, धनको रक्षा गर्ने इन्द्रदेव आफ्ना उपासकलाई धन प्रदान गर्दछन्।

**यो नो वनुष्यन्नभिदाति मर्त उगणा वा मन्यमानस्तुरो वा। क्षिधी युधा शवसा वा तमिन्द्राभी ष्याम वृषमणस्त्वोताः ॥५॥**

वधको कामना गर्ने, दर्पयुक्त, संहारक अस्त्रले आक्रमण गर्नमा उद्यत, दृढ निश्चयी तिमीबाट संरक्षित भएर हामी यजमानहरू शत्रुहरूलाई पराजित गर्नमा सक्षम होऊन्।

**यं वृत्रेषु क्षितय स्पर्धमाना यं युक्तेषु तुरयन्तो हवन्ते। यं शूरसातौ यमपामुपज्मन्यं विप्रासो वाजयन्ते स इन्द्रः ॥६॥**

युद्ध गर्नमा लागेका प्रजाहरूको सहायताका लागि पुकार्दा, शस्त्र हातमा लिएर सङ्घर्ष गर्ने, जलको वर्षा गर्नका लागि प्रार्थना गरिने, विद्वान्हरूले हवि समर्पित गर्ने एक मात्र देवता केवल इन्द्र नै हुन्।

**इन्द्रापर्वता बृहता रथेन वामीरिष आ वहतं सुवीराः। वीतं हव्यान्यध्वरेषु देवा वर्धेथां गीर्भिरिडया मदन्ता ॥७॥**

हे इन्द्र र पर्वतदेव ! स्तुति गर्न योग्य, असल सन्तानले युक्त यजमानद्वारा समर्पित हविष्यान्नले खुसीको अनुभव गर्ने र यज्ञमा हवि खाने तिमीहरू हामीलाई अन्न प्रदान गर र हाम्रा स्तोत्रबाट यशस्वी होओ।

**इन्द्राय गिरो अनिशितसर्गा अपः प्रेरयत्सगरस्य बुध्नात्। यो अक्षेणेव चक्रियौ शचीभिर्विष्वक्तस्तम्भ पृथिवीमुत द्याम् ॥८॥**

इन्द्रदेवता आफ्ना क्षमताले द्युलोक र पृथिवीलाई धुराले चक्रलाई सम्हालेझैं सम्हाल्दछन्। इन्द्रदेवका लागि उच्च स्वरले उच्चारण गरिने स्तुति अन्तरिक्षबाट जल प्रवाहित गर्नमा पनि सक्षम हुन्छ।

**आ त्वा सखायः सख्या ववृत्युस्तिरः पुरू चिदर्णवां जगम्याः। पितुर्नपातमा दधीत वेधा अस्मिन्क्षये प्रतरां दीद्यानः ॥९॥**

हे इन्द्रदेवता ! अत्यन्त टाढा अन्तरिक्षमा रहेका हुनाले मित्रहरूले उत्तम किसिमका स्तोत्रले तिमीलाई आह्वान गर्दछन्। यस यज्ञमा देदीप्यमान हुँदै तिम्रा प्रभावले हामीलाई पुत्रपौत्रादि प्राप्त होऊन्।

**को अद्य युङ्क्ते धुरि गा ऋतस्य शिमीवतो भामिनो दुर्हृणायून्। आसन्नेषामप्सुवाहो मयोभून्य एषां भृत्यामृणधत्स जीवात् ॥१०॥**

सामर्थ्यवान्, शत्रुहरूमाथि क्रोध गर्ने, हानेका बाणले लक्षमा भेदन गर्ने इन्द्रदेवका रथको धुरा नै सत्ययज्ञमा छ। त्यसमा आज कसले अश्व योजित गर्न सक्ला ? जसले यी अश्वलाई पालनपोषण गर्दछ, उही जीवित रहन सक्ला।

## इति त्रयोविंशः खण्डः
तेईसौँ खण्ड समाप्त भयो

***

## चतुर्विंशः खण्डः
चौबीसौँ खण्ड

**गायन्ति त्वा गायत्रिणोऽर्चन्त्यर्कमर्किणः। ब्रह्माणस्त्वा शतक्रत उद्वंशमिव येमिरे ॥१॥**

हे सय यज्ञ गरेर शतक्रतु नाम पाएका इन्द्रदेव ! उच्च स्वरले गाउने भएर उद्गाता नाम

पाएकाहरूले तिमीलाई आह्वान गरिरहेका छन्। स्तुति गर्ने स्तोताहरूले तिमीलाई पूज्य मानेर मन्त्रोच्चारणद्वारा आदर गर्दछन्। बाँसका चोकेमाथि चढेर चटक देखाउने नट वा नर्तकजस्ता ब्रह्मा नामका ऋत्विक्‌ले श्रेष्ठ स्तुतिगान गर्दै तिमीलाई प्रोत्साहित गर्छन्।

**इन्द्रं विश्वा अवीवृधन्त्समुद्रव्यचसं गिरः। रथीतमं रथीनां वाजानां सत्पतिं पतिम् ॥२॥**

समुद्रजस्तै व्यापक, रथीहरूमा उत्तम, अन्नका स्वामी र सत्प्रवृत्ति भएका इन्द्रलाई सबै स्तुतिले उन्नतिशील गराउँछन्।

**इममिन्द्र सुतं पिब ज्येष्ठममर्त्यं मदम्। शुक्रस्य त्वाभ्यक्षरन्धारा ऋतस्य सादने ॥३॥**

हे इन्द्रदेव ! अविनाशी, श्रेष्ठ, आनन्दवर्धक सोमरस तिमी पान गर। यज्ञस्थलमा शोधन गरिएको सोमरस तिमीतिरै प्रवाहित भइरहेको छ।

**यदिन्द्र चित्र म इह नास्ति त्वादातमद्रिवः। राधस्तन्नो विदद्वस उभयाहस्त्या भर ॥४॥**

अचम्मको वज्र लिने, ऐश्वर्यशाली हे इन्द्रदेव ! हामीसित तिमीलाई चढाउने योग्य धनको खाँचो छ। त्यसैले हामीलाई खुला हातले मनग्गे धन देऊ।

**श्रुधी हवं तिरश्च्या इन्द्र यस्त्वा सपर्यति। सुवीर्यस्य गोमतो रायस्पूर्धि महाँ असि ॥५॥**

हे इन्द्रदेव ! सत्कार गर्ने तिरश्ची ऋषिको स्तोत्र सुन। हे महान् इन्द्रदेव ! तिमी श्रेष्ठ बल र गाई प्रदान गर्दै हामीलाई धनसम्पदाले सम्पन्न गराऊ।

**असावि सोम इन्द्र ते शविष्ठ धृष्णवा गहि। आ त्वा पृणक्त्विन्द्रियं रजः सूर्यो न रश्मिभिः ॥६॥**

हे शत्रु पराजित गर्ने शक्तिशाली इन्द्रदेव ! सूर्यदेवको किरणरूपी शक्ति अन्तरिक्षमा व्याप्त छ। तिमीभित्र पनि सोमपान गरेपछि अपार शक्तिको सञ्चार होस्।

**एन्द्र याहि हरिभिरुप कण्वस्य सुष्टुतिम्। दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥७॥**

हे तेजस्वी इन्द्रदेव ! तिमी अश्वमा आरुढ भएर कण्व ऋषिको श्रेष्ठ स्तुति सुन्न आऊ। द्युलोकमा शासन गर्ने तिमी पुनः त्यतैका लागि प्रस्थान गर।

**आ त्वा गिरो रथीरिवाऽस्थुः सुतेषु गिर्वणः। अभि त्वा समनूषत गावो वत्सं न धेनवः ॥८॥**

हे स्तुत्य इन्द्रदेव ! रथमा आरुढ भएर सुरक्षित पुग्ने योद्धाजस्तै र बाछाका नजिकै चाँडै पुग्न खोज्ने गाईजस्तै सोमयागमा हाम्रो स्तुति तिम्रा निकट पुग्दछन्।



**एतो न्विन्द्रं स्तवाम शुद्धं शुद्धेन साम्ना। शुद्धैरुक्थैर्वावृध्वां सं शुद्धैराशीर्वान्ममत्तु ॥९॥**

हे इन्द्रदेव ! तिमी चाँडै आऊ। शुद्ध रूपले उच्चरित साम र यजुर्वेदका मन्त्रले हामी तिम्रो स्तुति गर्दछौँ। बलवर्द्धक, मन्त्रले शोधन गरेर गाईको दुध मिसाएका सोमरसले तिमीलाई आनन्द प्रदान गरोस्।

**यो रयिं वो रयिन्तमो यो द्युम्नैर्द्युम्नवत्तमः। सोमः सुतः स इन्द्र तेऽस्ति स्वधापते मदः ॥१०॥**

हे शक्तिसम्पन्न इन्द्रदेव ! शोभायमान, अति देदीप्यमान उपासकलाई धन प्रदान गर्ने सोमरसले तिमीलाई आनन्द प्रदान गर्दछ।

**इति चतुर्विंशः खण्डः**

चौबीसौँ खण्ड समाप्त भयो

***

**इति सामवेद संहिता तृतीयोऽध्यायः**

सामवेद संहिताको तेस्रो अध्याय समाप्त भयो।





ॐ

**भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।**

# सामवेद संहिता

## चतुर्थोऽध्यायः

**ऋषि—** भारद्वाज बार्हस्पत्य। वामदेव गौतम अथवा शाकपूत। प्रियमेध आङ्गिरस। प्रगाथ काण्व। श्यावश्व आत्रेय। शंयु बार्हस्पत्य। वामदेवत गौतम। जेता माधुच्छन्दस। मधुच्छन्दा वैश्वामित्र। अत्रि भौम। प्रस्कण्व काण्व। त्रित आप्त्य। रेभ काश्यप। सुवेदा शैलूषि। सव्य आङ्गिरस। विश्वामित्र गाथिन। कृष्ण आङ्गिरस। मेधातिथि काण्व। कुत्स आङ्गिरस। नारद काण्व। गोषूक्ति अश्वसूक्ति काण्वायन। पर्वत काण्व। विश्वमना वैयश्व। नृमेध आङ्गिरस। गोतम राहूगण। प्रगाथ घौर काण्व। इरिम्बिठ काण्व। वसिष्ठ मैत्रावरुणि। सौभरि काण्व। गोतम राहूगण। अवस्यु आत्रेय। वसुश्रुत आत्रेय। विमद ऐन्द्र। सत्यश्रवा आत्रेय अंहोमग्वामदेव्य। ऋण त्रसदस्यू। त्रसदस्यु। संवर्त आङ्गिरस। पृषध्र काण्व। बन्धु सुबन्धु श्रुतबन्धु विप्रबन्धु गौपायन लौपायन। भुवन आप्त्य साधन भौवन। कवष ऐलूष। आत्रेय। गृत्समद शौनक। गौराङ्गिरस परुच्छेप दैवोदासि। एवयामरुत् आत्रेय अनानत पारुच्छेषि। नकुल।

**देवता—** इन्द्र। मरुत्गण। इन्द्र दधिक्रा। उषा। विश्वेदेवता। द्यावापृथिवी। आदित्यगण। अश्विनीकुमार। अग्नि। सामे पवमान सोम। वाजिन। सूर्य सविता।

**छन्द—** अनुष्टुप्। अतिजगती। जगती। महापङ्क्ति। उष्णिक्। विराडुष्णिक्। ककुप्। पङ्क्ति बृहती। द्विपदा। विराट्। गायत्री। त्रिपदा पिपीलिकमध्या अनुष्टुप्। पदपङ्क्ति। पुर उष्णिक्। एकपदा गायत्री। अष्टि। अत्यष्टि। अतिशक्वरी।

### पञ्चविंशः खण्डः

पच्चीसौँ खण्ड

**प्रत्यस्मै पिपीषते विश्वानि विदुषे भर। अरङ्गमाय जग्मयेऽपश्चाद्दध्वने नरः ॥१॥**

हे ऋत्विक्हरू हो ! इन्द्रदेवका लागि सोमरस पठाओ। इन्द्रदेव सर्वत्र गमन गर्ने, सर्वज्ञ र यज्ञका प्रधान हुन्।

**आ नो वयो वयःशयं महान्तं गह्वरेष्ठाम्। महान्तं पूर्विणेष्ठामुग्रं वचो अपावधीः ॥२॥**

हे इन्द्रदेवता ! विशाल पर्वतमा रहेका, सर्वत्र प्राप्त हुने, सोमरूपी अन्नले हामीलाई परिपूर्ण गराऊ। अत्यधिक प्रचलित निन्दित कथनहरूलाई हामीदेखि पर हटाऊ। त्यसो भएर हामीले निन्दनीय हुनु नपरोस्।

**आ त्वा रथं यथोतये सुम्नाय वर्तयामसि। तुविकूर्मिमृतीषहमिन्द्रं शविष्ठ सत्पतिम् ॥३॥**

शत्रुलाई पराजित गर्ने, शौर्ययुक्त, यजमानका पोषक हे शक्तिशाली इन्द्रदेव ! संरक्षण र सुखका लागि गतिशील रथजस्तै तिमीलाई हामी यज्ञस्थलमा लिएर आउँछौं।

**स पूर्व्यो महोनां वेनः क्रतुभिरानजे। यस्य द्वारा मनुः पिता देवेषु धिय आनजे ॥४॥**

इन्द्रद्वारा देवताहरूमा पिताजस्ता मनुले बुद्धि प्राप्त गरे। तेजस्वी इन्द्र यजमानले दिने हविको कामना गर्दै यज्ञमा पुग्छन्।

**यदी वहन्त्याशवो भ्राजमाना रथेष्वा। पिबन्तो मदिरं मधु तत्र श्रवांसि कृण्वते ॥५॥**

हर्षवर्द्धक, मधुर सोमरस पान गर्ने, अन्न उत्पन्न गर्ने, तेजयुक्त शीघ्र गतिशील मरुत्‌गण, इन्द्रदेवतालाई यज्ञका वेदीमा पुऱ्याउँछन्।

**त्यमु वो अप्रहणं गृणीषे शवसस्पतिम्। इन्द्रं विश्वासाहं नरं शचिष्ठं विश्ववेदसम् ॥६॥**

यजमानहरूका हितकारी, कल्याणकारी बल र अन्नका अधिपति, शत्रुलाई पराजित गराउने, यज्ञका नायक, महान् दाता, सर्वज्ञ इन्द्रदेवलाई हामी स्तुति गर्दछौं।

**दधिक्राव्णो अकारिषं जिष्णोरश्वस्य वाजिनः। सुरभि नोमुखा करत्प्र ण आयूंषि तारिषत् ॥७॥**

हामी विजयले सम्पन्न, व्यापक र वेगवान् दधिक्रादेवको प्रार्थना गर्दछौं। उनले हाम्रो मुख आदि इन्द्रिय सुन्दर तथा सबल गराऊन् र हाम्रो आयु वृद्धि गरून्।

**पुरां भिन्दुर्युवा कविरमितौजा अजायत। इन्द्रो विश्वस्य कर्मणो धर्ता वज्री पुरुष्टुतः ॥८॥**

शत्रुको सहर नष्ट गर्ने इन्द्रदेव सधैँका युवा, सबैका ज्ञाता, सबैभन्दा शक्तिशाली, शुभकर्मका आश्रय र कीर्तियुक्त भएर विविध गुणले सम्पन्न छन्।

### इति पञ्चविंशः खण्डः

पच्चीसौँ खण्ड समाप्त भयो

***

## षड्‌विंशः खण्डः

छब्बीसौँ खण्ड

**प्रप्र वस्त्रिष्टुभमिषं वन्दद्वीरायेन्दवे। भिया वो मेधसातये पुरन्ध्या विवासति ॥१॥**

हे याजक हो ! तीन स्तोत्रले तयार गरिएको हविरूपी अन्न श्रेष्ठ वीर इन्द्रदेवका लागि प्रदान गर। यज्ञ सम्पादन गर्नका लागि विवेकपूर्वक गरिएका सत्कर्मको अभीष्ट फल प्रदान गरेर इन्द्रदेव यजमानलाई सम्मानित गर्दछन्।

**कश्यपस्य स्वर्विदो यावाहुः सयुजाविति। ययोर्विश्वमपि व्रतं यज्ञं धीरा निचाय्य ॥२॥**

सर्वज्ञान सम्पन्न इन्द्रदेवताका दुई वटा अश्व सधैँ यज्ञीय कार्यमा लागिरहेका हुन्छन् भन्ने कुराको निश्चय भएपछि ती दुवै अश्वलाई ढुक्कसँग रथमा नियोजित गरिएको हो भन्ने खालको विचार ज्ञानीहरूको रहेको पाइन्छ।

**अर्चत प्रार्चता नरः प्रियमेधासो अर्चत। अर्चन्तु पुत्रका उत पुरमिद् धृष्ण्वर्चत ॥३॥**

अर्चत प्रार्चत हे प्रियमेधका वंशज मानिसहरू हो ! यज्ञप्रिय, सन्तान एवं साधकको कामना पूर्ण गराउने र शत्रु पराजित गर्ने इन्द्रदेवको तिमीहरू सबैले सम्मान गर।

**उक्थमिन्द्राय शंस्यं वर्धनं पुरुनिष्षिधे। शक्रो यथा सुतेषु णो रारणत्सख्येषु च ॥४॥**

हे स्तोताहरू हो ! शत्रुसंहारक, सामर्थ्यवान्, इन्द्रदेवका लागि उनको यश बढाउने, उत्तम स्तोत्र पाठ गर। त्यसो गर्दा उनको कृपा हाम्रा सन्तान र आफन्तहरूमा स्थिर भएर रहनेछ।

**विश्वानरस्य वस्पतिमनानतस्य शवसः। एवैश्च चर्षणीनामूती हुवे रथानाम् ॥५॥**

हे मरुत्‌हरू हो ! तिमीहरूका सैनिकमाथि हुने आक्रमणका समयमा रथको सुरक्षा गर्न हामी शत्रुका सैनिकमाथि आक्रमण गर्ने, अजेय, बलशाली इन्द्रदेवलाई आह्वान गर्दछौँ।

**स घा यस्ते दिवो नरो धिया मर्तस्य शमतः। ऊती स बृहतो दिवो द्विषो अंहो न तरति ॥६॥**

साधकहरूको प्रभावकारी स्तुतिका माध्यमबाट मानिसहरू इन्द्रदेवताका मित्र बनेका हुन्छन्। त्यस्ता खालका व्यक्तिहरू दिव्य संरक्षणमा रहेका हुनाले पाप र शत्रुबाट सुरक्षित रहन्छन्।

**विभोष्ट इन्द्र राधसो विभ्वी रातिः शतक्रतो। अथा नो विश्वचर्षणे द्युम्ना सुदत्र मंहय ॥७॥**

सर्वज्ञ, श्रेष्ठ दानी, सय अश्वमेध सम्पन्न गरेका हे इन्द्रदेव ! तिमी धन प्रदान गरेर महिमाशाली होऊ र हामीलाई पनि ऐश्वर्यले सम्पन्न बनाऊ।

**वयश्चित्ते पतत्रिणो द्विपच्चतुष्पादर्जुनि। उषः प्रारन्नृतूँरनु दिवो अन्तेभ्यस्परि ॥८॥**

हे देदीप्यमान उषादेवी ! तिमी उदाइसकेपछि जमिन तथा अन्तरिक्षका मानव र पशुपक्षीहरू टाढाटाढासम्म स्वेच्छापूर्वक विचरण गरेका देखिन्छन्।

**अमी ये देवाः स्थन मध्य आ रोचने दिवः। कद्व ऋतं कदनृतं का प्रत्ना व आहुतिः ॥९॥**

हे देवता हो ! सूर्योदय भइसकेपछि आकाशमा दीप्तिमान हुने भएकाले तिमीहरूसमक्ष कुनै खालको स्तुति पुगेको छ कि छैन ? अथवा तिमीहरूले कुनै विशिष्ट किसिमको आहुति प्राप्त गरेका छौ कि छैनौ ? तिमीहरूको ऋत वा सत्य रूप के हो ? अनृत वा मायायुक्त रूप कहाँ छ ?

**ऋचं साम यजामहे याभ्यां कर्माणि कृण्वते। वि ते सदसि राजतो यज्ञं देवेषु वक्षतः ॥१०॥**

ऋचा र सामगानका सहायताले यज्ञकर्म सम्पन्न गरिन्छ। यज्ञमण्डपमा उच्चारण गरिएका ऋचा र सामगानरूपी मन्त्रहरूका सहायताले नै यज्ञको हविष्यान्न देवताकहाँ पुग्दछ।

## इति षड्विंशः खण्डः

छब्बीसौँ खण्ड समाप्त भयो

***

## सप्तविंशः खण्डः

सत्ताईसौँ खण्ड

**विश्वाः पृतना अभिभूतरं नरं सजूस्ततक्षुरिन्द्रं जजनुश्च राजसे। क्रत्वे वरे स्थेमन्यामुरिमुतोग्रमोजिष्ठं तरसं तरस्विनम् ॥१॥**

ऋत्विक्हरू यज्ञमा मिलेर सेनानायक, पराक्रमी सङ्गठित सेनाले युक्त शस्त्रास्त्र धारण गर्ने इन्द्रदेवलाई प्रकट गर्दछन्। हामी वृत्रहन्ता, उग्र, महिमाशाली, तीव्र गतिले कार्य गर्ने इन्द्रदेवको स्तुति गर्दछौँ।

**श्रत्ते दधामि प्रथमाय मन्यवेऽहन्यद्दस्युं नर्यं विवेरपः। उभे यत्त्वा रोदसी धावतामनु भ्यसाते शुष्मात्पृथिवी चिदद्रिवः ॥२॥**

हे हातमा वज्र लिएका इन्द्रदेव ! दुष्ट संहार गर्ने, प्राणीका हितकारी, जल प्रवाहित गर्ने, द्युलोक र पृथ्वीलाई आफ्ना इच्छाले गतिशील गराउने, तिम्रा जोसप्रति हामी याजकहरू श्रद्धा व्यक्त गर्दछौँ।

**समेत विश्वा ओजसा पतिं दिवो य एक इद्भूरतिथिर्जनानाम्। स पूर्व्यो नूतनमाजिगीषन् तं वर्तनीरनु वावृत एक इत् ॥३॥**

हे प्रजाहरू हो ! आफ्ना पुरुषार्थले द्युलोकका अधिपति, मानवका लागि एक मात्र पूजनीय, शत्रुमाथि विजयको कामनाले नवनियुक्त सैनिकहरूलाई विजय प्रदान गर्ने उनै इन्द्रदेवतालाई सबैले सामुहिक स्तुति गरौँ।

**इमे त इन्द्र ते वयं पुरुष्टुत ये त्वारभ्य चरामसि प्रभूवसो। नहि त्वदन्यो गिर्वणो गिरः सघत्क्षोणीरिव प्रति तद्धर्य नो वचः ॥४॥**

हे सम्पत्तिवान् र बहुप्रशंसित इन्द्रदेव ! हामी निष्ठापूर्वक तिम्रा संरक्षणमा रहेर कार्य गर्दछौँ। तिमीजस्तो स्तुत्य देवता अन्य कोही छैन। त्यसो हुँदा हामी तिम्रै स्तुति गर्दछौँ। पृथिवीले सबै खालका पदार्थ स्वीकार गरेझैँ हाम्रो स्तोत्र तिमी पनि स्वीकार गर।

**चर्षणीधृतं मघवानमुक्थ्या३मिन्द्रं गिरो बृहतीरभ्यनूषत। वावृधानं पुरुहूतं सुवृक्तिभिरमर्त्यं जरमाणं दिवेदिवे ॥५॥**

सबै मानिसलाई पालनपोषण गर्ने, ऐश्वर्यशाली, ख्यातियुक्त, निरन्तर उन्नति गर्ने, अमर र अनेकौँ स्तोत्रले प्रत्येक दिन प्रशंसा गरिने इन्द्रदेवलाई हामी अनेकौँ स्तुति गर्दछौँ।

**अच्छा व इन्द्रं मतयः स्वर्युवः सध्रीचीर्विश्वा उशतीरनूषत। परि ष्वजन्त जनयो यथा पतिं मर्यं न शुन्ध्युं मघवानमूतये ॥६॥**

पवित्र, आत्मशक्ति वृद्धि गराउने, सँगसँगै रहने र उन्नतिको कामना गर्ने हाम्रो स्तुतिले ऐश्वर्यवान् इन्द्रलाई आश्रय पाउनका लागि स्त्रीले पतिलाई अँगालेझैँ घेर्दछ।

**अभि त्यं मेषं पुरुहूतमृग्मियमिन्द्रं गीर्भिर्मदता वस्वो अर्णवम्। यस्य द्यावो न विचरन्ति मानुषं भुजे मंहिष्ठमभि विप्रमर्चत ॥७॥**

हे याजकहरू हो ! शत्रुलाई पराजित गर्ने, अनेकौँबाट प्रशंसित, वैदिक ऋचाहरूले स्तुति गरिन योग्य, धनका सागर इन्द्रदेवलाई प्रार्थना गर। जसका वरिपरि द्युलोकजस्तै विस्तृत कल्याणकारी कार्यहरू व्याप्त छन्, त्यस्ता ज्ञानवान् इन्द्रदेवलाई सुख प्राप्तिका लागि अर्चना गर।

**त्यं सु मेषं महया स्वर्विदं शतं यस्य सुभुवः साकमीरते। अत्यं न वाजं हवनस्यदं रथमेन्द्रं ववृत्यामवसे सुवृक्तिभिः ॥८॥**

हे अध्वर्यु ! शत्रुसित प्रतिस्पर्धा गर्ने र धन दान गर्न उचित स्थानमा जाने इन्द्रदेवको पूजन विधिवत् गर। हामी आफ्नो रक्षाका लागि अश्वजत्तिकै छिटो यज्ञमा पुग्ने इन्द्रदेवका यशको स्तुति गर्दै उनलाई रथतर्फ उन्मुख गराउँछौँ।

**घृतवती भुवनानामभिश्रियोर्वी पृथ्वी मधुदुघे सुपेशसा। द्यावापृथिवी वरुणस्य धर्मणा विष्कभिते अजरे भूरिरेतसा ॥९॥**

हे द्युलोक र पृथिवीलोक ! जलयुक्त सुन्दर रूप भएका र भुवनलाई आश्रय प्रदान गर्ने, मधुर अन्नरस प्रदान गर्ने, अमर र बलवान् तिमीहरू नै छौ। तिमीहरूलाई वरुणदेवले धारण गर्दछन्।

**उभे यदिन्द्र रोदसी आपप्राथोषा इव। महान्तं त्वा महीनां सम्राजं चर्षणीनां देवी जनित्र्यजीजनद्भद्रा जनित्र्यजीजनत् ॥१०॥**

तेजस्विनी उषाजस्तै द्युलोक र पृथ्वीलोकलाई प्रकाशले पूर्ण गराउने, प्राणीका स्वामी हे महान् इन्द्रदेव ! तिमीलाई कल्याण गर्ने देवमाता अदितिले जन्माएकी हुन्।

**प्र मन्दिने पितुमदर्चता वचो यः कृष्णगर्भा निरहन्नृजिश्वना। अवस्यवो वृषणं वज्रदक्षिणं मरुत्वन्तं सख्याय हुवेमहि ॥११॥**

हे ऋत्विक्गण ! महान् इन्द्रदेवलाई हविष्यान्न दिएर अर्चना गर। ऋजिश्वका सहायताले गर्भिणी स्त्रीहरूसँगै कृष्णासुरको वध गर्ने, दाहिने हातमा वज्र धारण गर्ने मरुत्गणको सेनासँग रहने, शक्तिसम्पन्न इन्द्रदेवलाई आफ्नो संरक्षणको कामना गर्ने हामी यजमान मित्रभावले आह्वान गर्दछौँ।

**इति सप्तविंशः खण्डः**

सत्ताईसौँ खण्ड समाप्त भयो

***

# अष्टाविंशः खण्डः

## अट्ठाईसौं खण्ड

**इन्द्र सुतेषु सोमेषु क्रतुं पुनीष उक्थ्यम्। विदे वृधस्य दक्षस्य महाँ हि षः ॥१॥**

हे इन्द्रदेव ! तयार गरिएको सोमरस पान गरेर तिमी यजमान र स्तोतालाई उन्नतितिर बढाउने शक्ति प्रदान गर्दछौ। तिमी महान् हुनाले दुवैलाई पवित्र गराउँछौ।

**तमु अभि प्र गायत पुरुहूतं पुरुष्टुतम्। इन्द्रं गीर्भिस्तविषमा विवासत ॥२॥**

हे स्तोताहरू हो ! अनेकौँ यजमानले स्तुतिपूर्वक बोलाउने गरेका प्रशंसायोग्य महान् इन्द्रदेवलाई विभिन्न स्तोत्रले स्तुति गर।

**तं ते मदं गृणीमसि वृषणं पृत्सु सासहिम्। उ लोककृत्नुमद्रिवो हरिश्रियम् ॥३॥**

हे हातमा वज्र लिने इन्द्रदेव ! शक्तिशाली, सङ्ग्राममा शत्रु पराजित गर्ने, कल्याणकारी र अश्वद्वारा सेवा गरिने हुनाले तिम्रा उत्साहको हामी प्रशंसा गर्दछौँ।

**यत्सोममिन्द्र विष्णवि यद्वा घ त्रित आप्त्ये। यद्वा मरुत्सु मन्दसे समिन्दुभिः ॥४॥**

हे इन्द्रदेव ! यज्ञमा विष्णु उपस्थित भएपछि तिमीले सोमपान गरेका थियौ। त्रितआप्त्य र मरुत्हरूसँग सोमरस सेवन गरेर आनन्दित हुने तिमी हाम्रा यज्ञमा पनि सोमपान गरेर आनन्दित होऊ।

**एदु मधोर्मदिन्तरं सिञ्चाध्वर्यो अन्धसः। एवा हि वीरस्तवते सदावृधः ॥५॥**

हे ऋत्विक् हो ! मधुर सोमपानले आनन्दित हुने इन्द्रदेवलाई सोमरस समर्पित गर। पराक्रमी र निरन्तर वृद्धि प्राप्त गर्ने इन्द्रदेव नै स्तोताहरूद्वारा सधैँ प्रशंसित हुन्छन्।

**एन्दुमिन्द्राय सिञ्चत पिबाति सोम्यं मधु। प्र राधांसि चोदयते महित्वना ॥६॥**

हे ऋत्विक्हरू हो ! इन्द्रदेवका निम्ति सोमरस समर्पित गर। त्यो मधुर सोमरस पान गरेर उनले आफ्ना प्रभावद्वारा याजकलाई विपुल धन प्रदान गर्दछन्।

**एतो न्विन्द्रं स्तवाम सखायः स्तोम्यं नरम्। कृष्टीर्योविश्वा अभ्यस्त्येक इत् ॥७॥**

हे मित्र हो ! चाँडो आओ। सबै शत्रु परास्त गर्न सक्षम, स्तुत्य नायक इन्द्रदेवको हामी प्रार्थना गरौँ।

**इन्द्राय साम गायत विप्राय बृहते बृहत्। ब्रह्मकृते विपश्चिते पनस्यवे ॥८॥**

हे उद्गाता हो ! विवेकसम्पन्न, महान्, स्तुत्य, ज्ञानवान् इन्द्रदेवका लागि बृहत् साम गायन गर।

**य एक इद्विदयते वसु मर्ताय दाशुषे। ईशानो अप्रतिष्कुत इन्द्रो अङ्ग ॥९॥**

हे प्रिय याजकहरू हो ! दानशील इन्द्रदेव मानिसलाई धन दिन्छन्। उनलाई कसैले रोक्न सक्दैन। ती इन्द्रदेव मात्रै सबै प्राणीका अधिपति हुन्।

**सखाय आ शिषामहे ब्रह्मेन्द्राय वज्रिणे। स्तुष ऊ षु वो नृतमाय धृष्णवे ॥१०॥**

हे मित्रहरू हो ! हामी आफ्ना स्तोत्रले वज्र धारण गर्ने इन्द्रदेवको स्तुति गर्दै आशीर्वाद माग्दछौँ। श्रेष्ठ वीर र शत्रु पराजित गर्ने इन्द्रदेवलाई तिमीहरू सबैको कल्याणका लागि हामी स्तुति गर्दछौँ।

## इति अष्टविंशः खण्डः

अठ्ठाईसौँ खण्ड समाप्त भयो

***

## एकोनत्रिंशः खण्डः

उनन्तीसौँ खण्ड

**गृणे तदिन्द्र ते शव उपमं देवतातये। यद्धंसि वृत्रमोजसा शचीपते ॥१॥**

हे शचीपति इन्द्रदेव ! हामी चाँडै सम्पन्न हुने यज्ञमा तिम्रा सामर्थ्यको स्तुति गर्दछौँ। त्यसै कारणले तिमी वृत्र वध गर्न सक्षम हुन्छौ। तिम्रा ऐश्वर्यले हित गर्दछ।

**यस्य त्यच्छम्बरं मदे दिवोदासाय रन्धयन्। अयं स सोम इन्द्र ते सुतः पिब ॥२॥**

हे इन्द्रदेव ! सोमरस पिएर मदोन्मत्त भएका तिमीले दिवोदासको कल्याणका लागि शम्बासुरको वध गरेका थियौ। उही शोधित सोमरस तिमी पुनः पान गर।

**एन्द्र नो गधि प्रियः सत्राजिदगोह्यः। गिरिर्न विश्वतः पृथुः पतिर्दिवः ॥३॥**

सबैका प्रिय, शत्रु जित्ने, अपराजेय हे इन्द्रदेव ! तिमी पर्वतजस्तै विशाल, द्युलोकका अधिपति हौ, हामीसित आऊ।

**य इन्द्र सोमपातमो मदः शविष्ठ चेतति। येना हंसि न्याऽत्रिणं तमीमहे ॥४॥**

सोमपान गर्नेमा सर्वश्रेष्ठ बलशाली हे इन्द्रदेव ! तिमी कार्यप्रति उल्लसित र जागरुक छौ। तिमीसँग भएको घातक असुर नष्ट गराउने बल हामी माग्दछौँ।

**तुचे तुनाय तत्सु नो द्राघीय आयुर्जीवसे। आदित्यासः समहसः कृणोतन ॥५॥**

हे महान् आदित्य हो ! हाम्रा पुत्रपौत्रहरूलाई लामो आयु प्रदान गर्ने कृपा गर।

**वेत्था हि निर्ऋतीनां वज्रहस्त परिवृजम्। अहरहः शुन्ध्युः परिपदामिव ॥६॥**

जसरी शोधनकर्ताले सबै तिरका गतिशीलहरूलाई जानेका छन्, उसै गरी हे वज्रधारी ! तिमी निर्ऋतिहरूलाई नियन्त्रित गर्न जान्दछौ।

**अपामीवामप स्रिधमप सेधत दुर्मतिम्। आदित्यासो युयोतना नो अंहसः ॥७॥**

हे आदित्यहरू हो ! रोग, शत्रु, पाप र दुर्बुद्धिका दुष्प्रभाव हामीदेखि पर राख।

**पिबा सोममिन्द्र मन्दतु त्वा यं ते सुषाव हर्यश्वाद्रिः। सोतुर्बाहुभ्यां सुयतो नार्वा ॥८॥**

हे अश्वयुक्त इन्द्रदेव ! आनन्ददायक सोमरस पान गर। सञ्चालककका हातले उचित रूपमा नियन्त्रित घोडाजस्तै ढङ्गाले सुरक्षा साथ तिम्रा लागि सोमरस निकालिन्छ।

## इति एकोनत्रिंशः खण्डः

उनन्तीसौँ खण्ड समाप्त भयो

***

## त्रिंशः खण्डः

तीसौँ खण्ड

**अभ्रातृव्यो अना त्वमनापिरिन्द्र जनुषा सनादसि। युधेदापित्वमिच्छसे ॥१॥**

हे इन्द्रदेव ! तिमी जन्मदेखि नै दाजुभाइको झमेलाबाट मुक्त छौ। तिमीमाथि शासन गर्ने कोही छैन र न त सहायता गर्ने कुनै बन्धु नै छन्। तिमी युद्धद्वारा आफ्ना सहयोगी र भक्तलाई पाउने कामन गर्दछौ।

**यो न इदमिदं पुरा प्र वस्य आनिनाय तमु व स्तुषे। सखाय इन्द्रमूतये ॥२॥**

हे मित्रहरू हो ! उहिलेदेखि धनवैभव प्रदान गर्ने इन्द्रदेवलाई तिम्रो र हाम्रो कल्याणका लागि स्तुति गरौँ।

**आ गन्ता मा रिषण्यत प्रस्थावानो माप स्थाता समन्यवः। दृढा चिद्यमयिष्णवः ॥३॥**

गतिशील मरुत्‌हरू हानी नपुर्‍याईकन हाम्रा नजिक आऊन्। हे रिसाहा वीर हो ! तिमीहरू स्थिर र बलशाली शत्रुलाई झुकाउँछौ, हामीदेखि कहिल्यै पर नहोओ।

**आ याह्ययमिन्दवेऽश्वपते गोपत उर्वरापते। सोमं सोमपते पिब ॥४॥**

अश्व र गाईका स्वामी, भूमिका अधिपति, सोमरस पान गर्ने हे देवेन्द्र ! पेलेको सोमरस ग्रहण गर्नका लागि हामी तिमीलाई आह्वान गर्दछौँ।

**त्वया ह स्विद्युजा वयं प्रति श्वसन्तं वृषभ ब्रुवीमहि। संस्थे जनस्य गोमतः ॥५॥**

साँढेजस्तै बलिया हे इन्द्रदेव ! गाई आदि उपकारी पशुका पालकप्रति क्रोध व्यक्त गर्नेलाई तिम्रा सहायताले उचित प्रत्युत्तर दिएर हामी भगाउन सकौँ।

**गावश्चिद्घा समन्यवः सजात्येन मरुतः सबन्धवः। रिहते ककुभो मिथः ॥६॥**

समान उत्साहले युक्त मरुत्‌हरू हो ! सबै गाईको जात एउटै हुनाले भिन्नभिन्न ठाउँमा चरेर विचरण गरे पनि आपसमा चाटाचाट गरिरहन्छन्।

**त्वं न इन्द्रा भर ओजो नृम्णं शतक्रतो विचर्षणे। आ वीरं पृतनासहम् ॥७॥**

अनेकौँ कार्य गर्ने, ज्ञानी हे इन्द्रदेव ! हामीलाई शक्ति एवं ऐश्वर्यले परिपूर्ण गराऊ र शत्रु जित्ने पुत्र पनि प्रदान गर।

**अधा हीन्द्र गिर्वण उप त्वा काम ईमहे ससृग्महे। उदेव ग्मन्त उदभिः ॥८॥**

स्तोत्रले पूजित हे इन्द्रदेव ! हामी निकै ठूलो कामना लिएर पानी पानीकै धारासित बगेर गएझैँ तिमीकहाँ आउँछौँ।

**सीदन्तस्ते वयो यथा गोश्रीते मधौ मदिरे विवक्षणे। अभि त्वामिन्द्र नोनुमः ॥९॥**

हे इन्द्रदेव ! पेलेर तयार गरेपछि गाईको दुध मिसाएको स्फुर्तिदायक र वाणीमा शक्ति दिने सोमरसका नजिकै हामी पक्षीजस्तै एकत्रित हुन्छौँ र तिमीलाई नमस्कार गर्दछौँ।

**वयमु त्वामपूर्व्य स्थूरं न कच्चिद्भरन्तोऽवस्यवः। वज्रिं चित्रं हवामहे ॥१०॥**

हे वज्रधारी, अनुपम इन्द्रदेव ! व्यावहारिक गुणसम्पन्न व्यक्तिलाई मानिसले बोलाएझैँ रक्षाको कामनाले विशिष्ट सोमले तृप्त गराउन हामी स्तुति गर्दछौँ।

## इति त्रिंशः खण्डः

तीसौँ खण्ड समाप्त भयो

***

## एकत्रिंशः खण्डः

एकतीसौँ खण्ड

**स्वादोरित्था विषूवतो मधोः पिबन्ति गौर्यः। या इन्द्रेण सयावरीर्वृष्णा मदन्ति शोभथा वस्वीरनु स्वराज्यम् ॥१॥**

भक्तहरूमाथि कृपा बर्साउने इन्द्रदेवसित राम्रा गाईहरू आनन्दपूर्वक रहन्छन्। भूमिमा स्वराज्यको मर्यादाअनुरूप उम्रिएको स्वादिलो मधुर रस तिनले पान गर्दछन्।

**इत्था हि सोम इन्मदो ब्रह्मा चकार वर्धनम्। शविष्ठ वज्रिन्नोजसा पृथिव्या निः शशा अहिमर्चन्ननु स्वराज्यम् ॥२॥**

हे वज्र धारण गर्ने शक्तिशाली इन्द्रदेव ! ब्रह्मनिष्ठहरूद्वारा प्रदान गरिएका दिव्य गुणले सम्पन्न सोमरस पान गरेर तिमीले आफ्नो उत्साह बढायौ। आफ्नो सामर्थ्यले देव समुदायको हानी गर्ने दुराचारीलाई मारेर पृथ्वीबाट हटाइदियौ।

**इन्द्रो मदाय वावृधे शवसे वृत्रहा नृभिः। तमिन्महत्स्वाजिषूतिमर्भे हवामहे स वाजेषु प्र नोऽविषत् ॥३॥**

हर्ष र उत्साहवर्धन गर्ने कामनाले स्तोताहरूबाट इन्द्रदेवको यश विस्तार हुन्छ। त्यसै यशका कारण सानाठूला सबै युद्धमा हामी रक्षकका रूपमा इन्द्रदेवलाई आह्वान गर्दछौँ। ती इन्द्रदेवले युद्धमा हाम्रो रक्षा गरून्।

**इन्द्र तुभ्यमिदद्रिवोऽनुत्तं वज्रिन्वीर्यम्। यद्ध त्यं मायिनं मृगं तव त्यन्माययावधीरर्चन्ननु स्वराज्यम् ॥४॥**

हे पर्वतवासी, स्वराज्यको अर्चना गर्नेहरूका सहायक, वज्रधारी इन्द्रदेव ! तिम्रो शक्ति शत्रुहरूबाट अपराजेय छ। मृगको रूप धारण गर्ने छली छद्मवेशी वृत्रको हनन गर्नका लागि तिमी कूटनीतिको पनि सहारा लिन्छौ।

**प्रेह्यभीहि धृष्णुहि न ते वज्रो नि यंसते। इन्द्र नृम्णं हि ते शवो हनो वृत्रं जया अपोऽर्चन्ननु स्वराज्यम् ॥५॥**

हे इन्द्रदेव ! तिमी शत्रुमाथि चारै तिरबाट आक्रमण गरेर तिनलाई नष्ट गर। तिम्रो वज्र आफूजस्तै शक्तिशाली शत्रुलाई पनि तिरस्कार गर्न सक्दछ। आफूसुहाउँदो साम्राज्यको कामना गर्दै तिमी वृत्रलाई वध गर र विजय प्राप्त गरेर जलका अवरोधहरू हटाउँदै प्रवाहित गराऊ।

**यदुदीरत आजयो धृष्णवे धीयते धनं। युङ्क्ष्वा मदच्युता हरी कं हनः कं वसौ दधोऽस्माँ इन्द्र वसौ दधः ॥६॥**

युद्ध भएपछि शत्रुविजयीले नै धन प्राप्त गर्दछ। हे इन्द्रदेव ! युद्धपछि उमङ्गको मद बगाउने अश्वलाई तिमी रथमा जोत। तिमी कसको वध गर्छौ र कसलाई धन दिन्छौ भन्ने सबै तिमीमा निर्भर छ। त्यसैले हे इन्द्रदेव ! हामीलाई ऐश्वर्यले सम्पन्न गराऊ।

**अक्षन्नमीमदन्त ह्यव प्रिया अधूषत। अस्तोषत स्वभानवो विप्रा नविष्ठया मती योजा न्विन्द्र ते हरी ॥७॥**

हे इन्द्रदेव ! तिम्रो अन्नले तृप्त भएका ब्राह्मणहरूले आफ्नो आनन्द व्यक्त गर्दै शिर हल्लाए। त्यसपछि उनीहरूले अरू नयाँ स्तोत्र पाठ गरे। अब तिमी यज्ञमा प्रस्थान गर्नका लागि रथमा अश्व नियोजित गर।

**उपो षु शृणुही गिरो मघवन्मातथा इव। कदा नः सुनृतावतः कर इदर्थयास इद्योजान्विन्द्र ते हरी ॥८॥**

हे धनवान् इन्द्रदेव ! हाम्रो स्तोत्र नजिकैबाट राम्ररी सुन। हामीलाई सत्यवादी बनाऊ। हाम्रा स्तुतिहरू ग्रहण गर्नका लगि तिमी आउने अश्व तयार गर।

**चन्द्रमा अप्स्वाऽन्तरा सुपर्णो धावते दिवि। न वो हरिण्यनेमयः पदं विन्दन्ति विद्युतो वित्तं मे अस्य रोदसी ॥९॥**

अन्तरिक्षमा चन्द्रमा आफ्नो किरणलाई साथमा लिएर द्युलोकमा दगुर्दै छ। हे विद्युत्‌रूपी सूर्यका किरण ! तिमीहरूका चरणका रूपमा रहेका किरणहरूलाई हाम्रा इन्द्रियहरूले पक्रन सक्दैनन् र ती सबै लोकको स्तर तथा सुनौलो धार हुने विद्युत्‌का

विषयमा जान्न योग्य हामी छैनौं। हे द्युलोक र भूलोक ! हाम्रो भावना बुझ। सूर्यको किरण रातमा आकाशमा सञ्चरित हुन्छ तर हाम्रा इन्द्रियहरूले त्यसलाई अनुभव गर्न सक्दैनन् अनि हामीलाई चन्द्रमाका माध्यमबाट त्यो प्रकाश प्राप्त हुन्छ।

**प्रति प्रियतमं रथं वृषणं वसुवाहनम्। स्तोता वामश्विनावृषिः स्तोमेभिर्भूषति प्रति माध्वी मम श्रुतं हवम् ॥१०॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरूको अत्यन्त प्रिय, बलयुक्त, धनवाहक रथलाई स्तोता ऋषिहरू आफ्ना स्तोत्रले विभूषित गर्दछन्। हे मधुविद्याका ज्ञाताहरू हो ! तिमीहरू हाम्रो आह्वान सुन।

## इति एकत्रिंशः खण्डः

एकतीसौँ खण्ड समाप्त भयो

***

## द्वात्रिंशः खण्डः

बत्तीसौँ खण्ड

**आ ते अग्न इधीमहि द्युमन्तं देवाजरम्। यद्ध स्या ते पनीयसी समिद्दीदयति द्यवीषं स्तोतृभ्य आ भर ॥१॥**

हे अग्निदेव ! प्रकाशयुक्त र बुढ्यौलीले नछोएका तिमीलाई हामी प्रज्वलित गर्दछौँ। तिम्रो श्रेष्ठ ज्योति द्युलोकमा प्रकाशित हुन्छ। तिमी स्तोतालाई अन्नले परिपूर्ण गर।

**आग्निं न स्ववृक्तिभिर्होतारं त्वा वृणीमहे। शीरं पावकशोचिषं वि वो मदे यज्ञेषु स्तीर्णबर्हिषं विवक्षसे ॥२॥**

हामी आफैँले रचना गरेका मन्त्रले देवताहरूका आह्वान कर्ता, पावन, ज्योतिर्मय र सर्वत्र विद्यमान अग्निदेवलाई वरण गर्दछौँ। कुशका आसनले सुशोभित यज्ञमा आनन्द प्राप्तिका लागि हामी उनलाई धारण गर्दछौँ। उनले आफ्ना प्रदीप्त ज्वाला विमद ऋषिका लागि प्रेरित गरून्।

**महे नो अद्य बोधयोषो राये दिवित्मती। यथा चिन्नो अबोधयः सत्यश्रवसि वाय्ये सुजाते अश्वसूनृते ॥३॥**

हे उषादेवी ! ऐश्वर्य प्राप्त गर्नका लागि प्रकाशित भएर तिमीले हामीलाई पहिलेपहिले जगाएझैँ आज पनि जगाऊ। हे सत्य विधिले उत्पन्न, सत्यप्रिय उषादेवी ! तिमी वयका पुत्र सत्यश्रवामाथि कृपा गर।

**भद्रं नो अपि वातय मनो दक्षमुत क्रतुम्। अथा ते सख्ये अन्धसो वि वो मदे रणा गावो न यवसे विवक्षसे ॥४॥**

हे सोमदेवता ! तिमी सोमरसले उल्लसित भएका हाम्रा मनलाई बल, कार्यशीलता, कल्याणकारी शक्ति, श्रेष्ठता र मित्रता प्राप्त गर्नका लागि प्रेरित गर। गाईको मित्रता घाँससँग भएझैँ हामीलाई तिम्रो मित्रता प्राप्त होस्।

**ऋत्वा महाँ अनुष्वधं भीम आ वावृधे शवः। श्रिय ऋष्व उपाकयोर्नि शिप्री हरिवान्दधे हस्तयोर्वज्रमायसम् ॥५॥**

भीषण शक्तिले सम्पन्न इन्द्रदेव सोमरस पान गरेर आफ्नो बल वृद्धि गर्दछन्। त्यसपछि सौन्दर्यशाली र श्रेष्ठ शिरस्त्राण धारण गर्ने इन्द्रदेव अश्वसहितका रथमा बसेर दाहिने हातको गहनाजस्तो फलामे वज्र उचाल्दछन्।

**स घा तं वृषणं रथमधि तिष्ठाति गोविदम्। यः पात्रं हारियोजनं पूर्णमिन्द्र चिकेतति योजा न्विन्द्र ते हरी ॥६॥**

हे इन्द्रदेव ! तिमी अन्न सोम आदि सहित गाई पनि दिन सक्छौ। तिमीले चढ्ने गरेको रथ समर्थ र बलियो छ भन्ने हामी राम्ररी जान्दछौँ। त्यसैले हे इन्द्रदेव ! तिमी आफ्ना घोडा रथमा नार।

**अग्निं तं मन्ये यो वसुरस्तं यं यन्ति धेनवः। अस्तमर्वन्त आशवोऽस्तं नित्यासो वाजिन इषं स्तोतृभ्य आ भर ॥७॥**

सबैका आश्रयस्वरूप अग्निदेवसित हामी परिचित छौँ। अग्निदेव प्रदीप्त भएको देखेपछि साँझपख गाई आआफ्ना थलामा फर्कन्छन् र तीव्रगामी अश्व नित्य प्रदीप्त अग्नि देखेर तबेलामा फर्कन्छन्। हे अग्निदेव तिमी यस्तै भएर याजकहरूलाई मनग्गे धनधान्य प्रदान गर।

**न तमंहो न दुरितं देवासो अष्ट मर्त्यम्। सजोषसो यमर्यमा मित्रो नयति वरुणो अति द्विषः ॥८॥**

हे देवता हो ! अर्यमा, मित्र र वरुणदेवको रिस गर्नेबाट बचाएर तिमीहरूले अघि बढाएका मानिस पापरहित भएर सधैँ दुर्गतिबाट पर रहन्छन्।

## इति द्वात्रिंशः खण्डः

बत्तीसौँ खण्ड समाप्त भयो

***

## त्रयस्त्रिंशः खण्डः

### तेत्तीसौँ खण्ड

**परि प्र धन्वेन्द्राय सोम स्वादुर्मित्राय पुष्णे भगाय ॥१॥**

हे स्वादिष्ट सोमदेव ! तिमी इन्द्र, मित्र, पूषा र भगदेवका लागि प्रवाहित होऊ।

**पर्यू षु प्र धन्व वाजसातये परि वृत्राणि सक्षणिः। द्विषस्तरध्या ऋणया न ईरसे ॥२॥**

हे सोमदेव ! अन्न प्राप्तिका लागि उत्तम विधिले कलशमा अवस्थित होऊ। हामीलाई ऋणबाट मुक्त गर्ने तिमी शत्रु परास्त गर्न आक्रमण गर।

**पवस्व सोम महान्त्समुद्रः पिता देवानां विश्वाभि धाम ॥३॥**

हे सोमदेव ! विस्तृत समुद्रजस्तै पोषण गर्ने तिमी देवताका सबै आवासस्थलरूपी पात्रमा विद्यमान रहन्छौ।

**पवस्व सोम महे दक्षायाश्वो न निक्तो वाजी धनाय ॥४॥**

हे सोमदेव ! स्वच्छ, शक्तिवर्द्धक भएर सधिएको अश्वझैँ बल र ऐश्वर्य प्रदान गर्नका लागि पात्रमा स्थिर होऊ।

**इन्दुः पविष्ट चारुर्मदायापामुपस्थे कविर्भगाय ॥५॥**

श्रेष्ठ ज्ञानसम्पन्न यो सोम सम्पत्तियुक्त हर्ष प्राप्तिका लागि जलसित मिसाइन्छ।

**अनु हि त्वा सुतं सोम मदामसि महे समर्यराज्ये। वाजाँ अभि पवमान प्र गाहसे ॥६॥**

हे सोमदेव ! रस पेलिसकेपछि तिमीलाई हामी विधिपूर्वक अर्चना गर्दछौँ। हे शोधित सोम ! श्रेष्ठ राजाको संरक्षणका लागि शक्तिशाली भएर तिमी विरोधी सेनामाथि आक्रमण गर्नका लागि गमन गर्दछौ।

**क ईं व्यक्ता नरः सनीडा रुद्रस्य मर्या अथा स्वश्वाः ॥७॥**

एकै घरमा बस्ने, कान्तियुक्त, उत्तम घोडायुक्त, सबैका हितैषि रुद्रदेवसँग मरुत्‌गणको सम्बन्ध कस्ता किसिमको रहेको छ ?

**अग्ने तमद्याश्वं न स्तोमैः क्रतुं न भद्रं हृदिस्पृशम्। ऋध्यामा त ओहैः ॥८॥**

हे अग्निदेव ! हामी याजकहरू आज यज्ञ र अश्वजस्तै गतिशील तिम्रो यश बढाउनका लागि ओह अथवा ऊह नामका हृदयस्पर्शी स्तोत्र प्रयोग गर्दछौँ।

**आविर्मर्या आ वाजं वाजिनो अग्मन् देवस्य सवितुः सवम्। स्वर्गां अर्वन्तो जयत ॥९॥**

मानिसको कल्याण गर्ने, तेजस्वी र शक्तिशाली सवितादेवताले तयार गरिएको सोमरस रूपी पोषणयुक्त अन्न प्राप्त गरेका छन्। त्यसो हुनाले हे याजकहरू हो ! उनीसित विजय प्राप्त गर्नका लागि अश्व र स्वर्ग तिमीहरूले प्राप्त गर।

**पवस्व सोम द्युम्नी सुधारो महाँ अवीनामनुपूर्व्यः ॥१०॥**

हे सोमदेव ! प्रकाशयुक्त, सोझा धाराले राम्ररी पात्रमा खस्ने तिमी पहिलेको जत्तिकै श्रेष्ठ छौ। पात्रमा तिमी स्वयं प्रवाहित होऊ।

## इति त्रयत्रिंः खण्डः

तेत्तीसौँ खण्ड समाप्त भयो

***

## चतुस्त्रिंशः खण्डः

चौँतीसौँ खण्ड

**विश्वतोदावन्विश्वतो न आ भर यं त्वा शविष्ठमीमहे ॥१॥**

निमिट्यान्न पारेर शत्रु विनाश गर्ने हे इन्द्रदेवता ! हामीलाई तिमी सबै खालका अभीष्ट सम्पत्ति प्रदान गर। त्यस्तो सम्पत्ति प्राप्त गरेर हामी शक्तिशालीको स्तुति गर्न सकौँ।

**एष ब्रह्मा य ऋत्विय इन्द्रो नाम श्रुतो गृणे ॥२॥**

सबै ऋतुहरूमा सुहाउँदो काम गर्ने, ज्ञानले सम्पन्न इन्द्रदेवता नामले नै प्रसिद्ध छन्। हामी उनैको प्रार्थना गर्दछौँ।

**ब्रह्माण इन्द्रं महयन्तो अर्कैरवर्धयन्नहये हन्तवा उ ॥३॥**

अहि नामका असुरलाई संहार गर्नका लागि विवेकयुक्त मन्त्रले अर्चना गरिने इन्द्रदेवताका यज्ञको हामी विस्तार गर्दछौँ।

**अनवस्ते रथमश्वाय तक्षन्त्वष्टा वज्रं पुरुहूत द्युमन्तम् ॥४॥**

धेरै तिरबाट बोलाइने गरेका हे इन्द्रदेव ! ऋभुहरूले तिम्रा रथ अश्व योजित गर्न मिल्ने बनाए। त्वष्टादेवले तिम्रा लागि तिखो वज्र बनाए। मन्त्रयुक्त स्तोत्रले यजन गर्नेहरूले तिमीलाई वृत्रवधका निम्ति स्तोत्रले हौस्याए।

**शं पदं मघं रयीषिणो न काममव्रतो हिनोति न स्पृशद्रयिम् ॥५॥**

सम्पत्ति प्रदान गर्ने याजकहरू सुख, श्रेष्ठ आवास र ऐश्वर्य प्राप्त गर्दछन्। यज्ञ नगर्ने अयाज्ञिकहरूलाई कुनै खालको वस्तु पनि प्राप्त हुँदैन र उनीहरू खोजेको कुरो छुन पनि नपाउने खालका हुन्छन्।

**सदा गावः शुचयो विश्वधायशः सदा देवा अरेपसः ॥६॥**

हे याजकहरू हो ! गाई सधैँ पवित्र, सबै प्राणीलाई पोषण प्रदान गर्ने, श्रेष्ठ तथा पापबाट रहित हुन्छ।

**आ याहि वनसा सह गावः सचन्त वर्तनिं यदूधभिः ॥७॥**

हे उषादेवी ! मन पर्ने प्रकाशसँग तिमी पृथ्वीमा आऊ। दुधले भरिएका थुन भएका गाई बाटमा हुनेछन्।

**उग्र प्रक्षे मधुमति क्षियन्तः पुष्येम रयिं धीमहे त इन्द्र ॥८॥**

हे इन्द्रदेवता ! मधुर रसले पूर्ण यज्ञका चम्चाहरूले युक्त धनधान्य प्राप्त गर्न सकौँ र तिमीसँगै रहने गरेका हामीहरू तिम्रो ध्यान गर्नमा समर्थ होऔँ।

**अर्चन्त्यर्कं मरुतः स्वर्का आ स्तोभति श्रुतो युवा स इन्द्रः ॥९॥**

हे उच्चतम प्रकाशले युक्त मरुत्गण ! हामी स्तुति गर्न योग्य इन्द्रदेवताको अर्चना गर्दछौँ। यौवनयुक्त, प्रख्यात उनै इन्द्रदेवताले सबै शत्रुलाई वध गर्ने गर्दछन्।

**प्र व इन्द्राय वृत्रहन्तमाय विप्राय गाथं गायत यं जुजोषते ॥१०॥**

हे विवेकसम्पन्न मानिसहरू हो ! वृत्रको वध गर्नमा कुशल ज्ञानले युक्त भएका इन्द्रदेवतालाई लक्ष्य बनाएर स्तोत्रहरू गाउने गर। उनले ती स्तोत्रहरू आनन्दित भएर सुन्नेछन्।

**इति चतुस्त्रिंशः खण्डः**

चौँतीसौँ खण्ड समाप्त भयो

***

## पञ्चस्त्रिंशः खण्डः

पैँतीसौँ खण्ड

**अचेत्यग्निश्चिकितिर्हव्यवाड् न सुमद्रथः ॥१॥**

हामीले समर्पण गरेको हव्य पदार्थ देवताकहाँ लैजाने, रथजस्तै, ज्ञानसम्पन्न, श्रेष्ठ हविले परिपूर्ण, अग्निदेव प्रकट भएका छन्। उनी आफ्ना उज्ज्वल आलोकले सर्वज्ञ बनेका छन्।

**अग्ने त्वं नो अन्तम उत त्राता शिवो भुवो वरूथ्यः ॥२॥**

हे अग्निदेव ! तिमी हाम्रा अति नजिकै असल संरक्षक र मङ्गलकारी भएर रहन्छौ।

**भगो न चित्रो अग्निर्महोनां दधाति रत्नम् ॥३॥**

विशाल पदार्थमा सूर्यजस्तै स्तुत्य अग्निदेवता स्तोताहरूलाई ऐश्वर्यले सम्पन्न बनाउँछन्।

**विश्वस्य प्र स्तोभ पुरो वा सन्यदिवेह नूनम् ॥४॥**

सम्पूर्ण शत्रुका संहारक हुनाले उनै अग्निदेवता यज्ञस्थलमा निश्चिय नै पूर्ण मनोयोगले उपस्थित हुनेछन्।

**उषा अप स्वसुस्तमः सं वर्तयति वर्तनिं सुजातता ॥५॥**

उषादेवी दिदीबहिनीजस्ती रात्रिको अन्धकार आफ्नै रश्मिले हटाउँदै उत्तम प्रकाशले आफ्नो मार्ग प्रकाशित गराउँछिन्।

**इमा नु कं भुवना सीषधेमेन्द्रश्च विश्वे च देवाः ॥६॥**

हामी चाँडै सबैलोक प्राप्त गरौँ। इन्द्रदेव र अरू सबै देवता हाम्रा लागि सुखशान्ति प्राप्त गर्नमा सहायक होऊन्।

**वि स्रुतयो यथा पथा इन्द्र त्वद्यन्तु रातयः ॥७॥**

हे इन्द्रदेवता ! सानासाना बाटागल्लीहरू राजमार्गमा मिसिएझैँ तिमीबाट प्रदान हुने दान सबैलाई प्राप्त हुन्छ।

**अया वाजं देवहितं सनेम मदेम शतहिमाः सुवीराः ॥८॥**

हे इन्द्रदेव ! हामी स्तोताहरूलाई अन्न आदिले युक्त गराऊ। हामी वीर पुत्रपौत्रले युक्त भएर सय वर्षको आयु र सुखमय जीवन निर्वाह गरौँ।

**ऊर्जा मित्रो वरुणः पिन्वतेडाः पीवरीमिषं कृणुहि न इन्द्रः ॥९॥**

हे इन्द्रदेवता ! मित्रावरुण देवताले हामीलाई बलवर्द्धक अन्न प्रदान गर्दछन्। हाम्रा अन्नलाई तिमी अझै धेरै र पौष्टिक गराऊ।

**इन्द्रो विश्वस्य राजति ॥१०॥**

इन्द्रदेवता सम्पूर्ण विश्वब्रह्माण्डका शासक हुन्।

**इति पञ्चत्रिंशः खण्डः**

पैँतीसौँ खण्ड समाप्त भयो

***

## षट्स्त्रिंशः खण्डः

छत्तीसौँ खण्ड

**त्रिकद्रुकेषु महिषो यवाशिरं तुविशुष्मस्तृम्पत्सोममपिबद्विष्णुना सुतं यथावशम्। स ईं ममाद महि कर्म कर्तवे महामुरुं सैनं सश्चद्देवो देवं सत्य इन्दुः सत्यमिन्द्रम् ॥१॥**

औधि बलियाा र पूजनीय इन्द्रदेवले तीनै लोकमा व्याप्त, सन्तुष्टिदायक, दिव्य सोमलाई जौका पिठोसित मिसाएर विष्णुदेवसँगै मन लाग्दो पान गरे। त्यसले महान् इन्द्रदेवलाई असल कार्य गर्नका लागि प्रेरित गरायो। उत्तम गुणले सम्पन्न त्यस दिव्य सोमरसले इन्द्रदेव प्रसन्न भए।

**अयं सहस्रमानवो दृशः कवीनां मतिर्ज्योतिर्विधर्म। ब्रध्नः समीचीरुषसः समैरयदरेपसः सचेतसः स्वसरे मन्युमन्तश्चिता गोः ॥२॥**

हजारौँ मानिसका हितकारी, दर्शनीय, मेधावी, प्रजाको धारणपोषण गर्ने, तेजस्वी हुनाले यी सूर्य निर्मल र अन्धकाररहित तेजस्वी उषालाई प्रेरित गर्दछन्। सूर्यका यस्ता किरणहरूका सम्मुख चम्कने चन्द्र आदि नक्षत्रहरू दिउँसो प्रभावहीन हुने गर्दछन्।

**एन्द्र याह्युप नः परावतो नायमच्छा विदथानीव सत्पतिरस्ता राजेव सत्पतिः। हवामहे त्वा वयं प्रयस्वन्तः सुतेष्वा पुत्रासो न पितरं वाजसातये मंहिष्ठं वाजसातये ॥३॥**

हे सज्जनका पालक इन्द्रदेव ! अग्निजस्तै टाढा भए पनि तिमी यज्ञमा पुग। राजाझैँ यज्ञस्थलको सुरक्षा गर्न आऊ। पुत्रले पितालाई बोलाएझैँ हामी हव्ययुक्त याजक अन्न प्राप्तिका लागि सोमयज्ञमा तिमीलाई आह्वान गर्दछौँ।

**तमिन्द्रं जोहवीमि मघवानमुग्रं सत्रा दधानमप्रतिष्कुतं श्रवांसि भूरि मंहिष्ठो गीर्भिरा च यज्ञियो ववर्त राये नो विश्वा सुपथा कृणोतु वज्री ॥४॥**

धनवान्, वीर, महाबलशाली, अपराजेय इन्द्रदेवलाई हामी सहायताका लागि आह्वान गर्दछौँ। सबैभन्दा महान्, यज्ञमा पूज्य इन्द्रदेवलाई स्तोत्रले प्रार्थना गर्दछौँ। वज्रधारी इन्द्रदेवले ऐश्वर्य प्राप्तिका लागि हाम्रा सबै मार्ग सुलभ बनाऊन्।

**अस्तु श्रौषट् पुरो अग्निं धिया दध आ नु तच्छर्धो दिव्यं वृणीमह इन्द्रवायू वृणीमहे। यद्ध क्राणा विवस्वते नाभा सन्दाय नव्यसे। अध प्र नूनमुप यन्ति धीतयो देवाँ अच्छा न धीतयः ॥५॥**

हामीले अग्निदेवलाई बुद्धिपूर्वक उत्तरवेदीमा धारण गरेका छौँ। त्यस दिव्य प्रदीप्त

ज्योतिको हामी आराधना गर्दछौँ। नवीन याज्ञिक यज्ञवेदीमा आउँदा मनोरथ पूरा गराउने इन्द्रदेव र वायुदेवलाई हामी प्रार्थना गर्दछौँ। हाम्रो स्तुति निश्चित नै देवताहरूसमक्ष पुगोस्। हाम्रो प्रार्थना पक्कै तिमीहरूसँग पुगोस्।

**प्र वो महे मतयो यन्तु विष्णवे मरुत्वते गिरिजा एवयामरुत्। प्र शर्धाय प्र यज्यवे सुखादये तवसे भन्ददिष्टये धुनिव्रताय शवसे ॥६॥**

एवया मरुत् नामका ऋषिले स्तुति गर्दा महान् इन्द्रदेवसँग मरुत्हरू र विष्णुदेव प्राप्त होऊन्। उत्तम आभूषणले अलङ्कृत, हितकारी र उन्नतिशील मरुत्हरूको बल याज्ञिकले पाऊन्।

**अया रुचा हरिण्या पुनानो विश्वा द्वेषांसि तरति स्वयुग्वभिः सूरो न सयुग्वभिः। धारा पृष्ठस्य रोचते पुनानो अरुषो हरिः। विश्वा यद्रूपा परियास्यृक्वभिः सप्तास्येभिर्ऋक्वभिः ॥७॥**

हरियो आभा भएको शोधित सोमरसका तेजले शत्रु नाश गर्दछ। अन्धकार हटाउने सूर्यको रश्मिजस्तै सोमरसको उत्तम धारा चम्कन्छ। शोधित हरियो आभासम्पन्न सोमरस चम्कन्छ। अनि प्रकाशका सात रङ्ग तेज र स्तोत्रले अनेक रूप धारण गर्दछ।

**अभि त्यं देवं सवितारमोण्योः कविक्रतुमर्चामि सत्यसवं रत्नधाममभि प्रियं मतिम्। ऊर्ध्वा यस्यामतिर्भा अदिद्युतत्सवीमनि हिरण्यपाणिरमिमीत सुक्रतुः कृपा स्वः ॥८॥**

विवेकपूर्वक कार्य गर्ने, सत्यप्रेरक, धन प्रदान गर्ने, अत्यन्त प्रिय र मेधावी उनै सविता देवताको आराधना हामी गर्दछौँ। उनको प्रकाश पृथ्वीबाट अन्तरिक्षसम्म तीव्र गतिले फैलेको छ। उत्तम कर्म गर्ने, सुवर्णझैँ चम्कने सविता देवताले कृपापूर्वक आफ्नो प्रकाश फिँजाउँछन्।

**अग्निं होतारं मन्ये दास्वन्तं वसोः सूनुं सहसो जातवेदसं विप्रं न जातवेदसम्। य ऊर्ध्वया स्वध्वरो देवो देवाच्या कृपा। घृतस्य विभ्राष्टिमनु शुक्रशोचिष आजुह्वानस्य सर्पिषः ॥९॥**

दैवी गुणसम्पन्न, श्रेष्ठ कर्मका सम्पादक, देवताका नजिक जाने, ऊर्ध्वगामी ज्वालाले सन्दीप्त र विस्तारयुक्त भएर अग्निदेव निरन्तर घृतपानको अभिलाषा गर्दछन्। देवताका आह्वानकर्ता, दानकर्ता, सबैका आश्रयस्वरूप अग्नि अरणि मन्थनबाट उत्पन हुनाले शक्तिका पुत्र हुन्। सर्वज्ञानसम्पन्न, शास्त्रज्ञ र ब्रह्मनिष्ठ ज्ञानीजस्ता अग्निदेवलाई हामी स्वीकार गर्दछौँ।

**तव त्यन्नर्यं नृतोऽप इन्द्र प्रथमं पूर्व्यं दिवि प्रवाच्यं कृतम्। यो देवस्य शवसा प्रारिणा असुं रिणन्नपः। भुवो विश्वमभ्यादेवमोजसा विदादूर्जं शतक्रतुर्विदेदिषम् ॥१०॥**

सबैलाई अनुशासनमा राख्ने हे इन्द्रदेव ! सम्पूर्ण मानवका हितकारी, सबैभन्दा पहिले गरिएका तिम्रा सबैभन्दा उत्कृष्ट कर्महरू स्वर्गलोकमा प्रशंसित छन्। आफ्ना शक्तिले तिमीले राक्षसको संहार गर्‍यौ, असुरलाई पराजित गर्‍यौ र जल प्रवाहित गरायौ। सयौं सत्कर्म गर्ने इन्द्रदेवले अन्न एवं बल प्राप्त गरे।

## इति षड्त्रिंशः खण्डः

छत्तीसौँ खण्ड समाप्त भयो

***

**इति सामवेद संहिता चतुर्थोऽध्यायः**

सामवेद संहिताको चौथो अध्याय समाप्त भयो।

ॐ

**भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।**

# सामवेद संहिता

## अथ पञ्चमोऽध्यायः

## पावमानं पर्व

**ऋषि—** अमहीयु आङ्गिरस। मधुच्छन्दा वैश्वामित्र। भृगुवारुणि जमदग्नि भार्गव। त्रित आप्त्य। कश्यप मारीच। जमदग्नि भार्गव। दृढच्युत आगस्त्य। असित काश्यप देवल। श्यावश्व आत्रेय। निध्रुवि काश्यप। बृहन्मति आङ्गिरस। प्रभूवसु आङ्गिरस। मेध्यातिथि काण्व। उचथ्य आङ्गिरस। अवत्सार काश्यप। कवि भार्गव। अयास्य आङ्गिरस। सप्तर्षिगण। उशना काण्व। वृषगण वसिष्ठ। पराशर शाक्त्य। वसिष्ठ मैत्रावरुणि। प्रतर्दनो दैवोदासि। प्रस्कण्व काण्व। इन्द्रप्रमति वासिष्ठ। कर्णश्रुत वासिष्ठ। नोधा गौतम। कण्व घौर। मन्यु वासिष्ठ। कुत्स आङ्गिरस। अन्धीगु श्यावाश्वि। नहुष मानव। यायति नाहुष। मनु सांवरण। अम्बरीष वार्षागिर ऋजिष्वा भारद्वाज। रेभसूनू काश्यप। प्रजापति वैश्वामित्र वाच्य। सिकता निवावरी। रेणु वैश्वामित्र। वन भार्गव। वसु भारद्वाज। वत्सप्रि भालन्दन। गृत्समद शौनक। पवित्र आङ्गिरस। अग्नि चाक्षुष। चक्षु मानव। पर्वत नारद काण्व। मनु आप्सव। द्वित आप्त्य। गौरवीति शाक्त्य। ऊर्ध्वसद्मा आङ्गिरस। ऋजिश्वा भारद्वाज। कृतयशा आङ्गिरस। ऋणञ्चय राजर्षि। शक्ति वासिष्ठ। ऊरु आङ्गिरस।

**देवता—** पवमान सोम।

**छन्द—** गायत्री। बृहती। त्रिष्टुप्। अनुष्टुप्। जगती। उष्णिक्। ककुप्। यवमध्या गायत्री।

### प्रथमः खण्डः

पहिलो खण्ड

**उच्चा ते जातमन्धसो दिवि सद्भूम्या ददे। उग्रं शर्म महि श्रवः ॥१॥**

हे सोमदेव ! तिम्रा पोषक रसको जन्म द्युलोकमा भयो। त्यहाँ प्राप्त हुने हितकारी सुख र महान् अन्न हामी पृथ्वीमा प्राप्त गर्दछौँ।

**स्वादिष्ठया मदिष्ठया पवस्व सोम धारया। इन्द्राय पातवे सुतः ॥२॥**

हे सोमदेव ! इन्द्रदेवले पान गर्नका लागि तिमीलाई निकालिएका हुनाले अत्यन्त स्वादिष्ट, हर्षप्रदायक धाराका रूपमा प्रवाहित होऊ।

**वृषा पवस्व धारया मरुत्वते च मत्सरः। विश्वा दधान ओजसा ॥३॥**

हे सोमदेव ! तिमी उद्गाताका लागि वेगवान् धाराले कलशमा प्रवेश गर र मरुत्हरूले सेवा गरिएका इन्द्रदेवका लागि सामर्थ्य र हर्ष बढाउने सिद्ध होऊ।

**यस्ते मदो वरेण्यस्तेना पवस्वान्धसा। देवावीरघशंसहा ॥४॥**

हे सोमदेव ! देवता आकृष्ट गर्ने र दुष्ट नाश गर्ने तिम्रो दिव्य रस अत्यन्त हर्षप्रद छ। त्यस पोषक रससहित तिमी कलशमा प्रतिष्ठित होऊ।

**तिस्रो वाच उदीरते गावो मिमन्ति धेनवः। हरिरेति कनिक्रदत् ॥५॥**

तीन किसिमका मन्त्र बोलेपछि धारक वाणीले स्वर प्रकट गर्दछ र त्यसै बेला मनोहर हरियो आभाले सम्पन्न सोमरस पनि शब्द गर्दै तल झर्दछ।

**इन्द्रायेन्दो मरुत्वते पवस्व मधुमत्तमः । अर्कस्य योनिमासदम् ॥६॥**
अत्यन्त मधुर हे सोमदेव ! मरुत्हरूले सहायता गरेका इन्द्रदेवका लागि यज्ञस्थलमा सुशोभित कलशमा प्रतिष्ठित होऊ।

**असाव्यं शुर्मदायाप्सु दक्षो गिरिष्ठाः । श्येनो न योनिमासदत् ॥७॥**
पर्वतमा उत्पन्न सोम आनन्द वृद्धिका लागि पेलिएर जलका संयोगले व्यापक भयो। त्यही सोम बाजपक्षीभैँ आफ्ना ठाउँमा स्थित छ।

**पवस्व दक्षसाधनो देवेभ्यः पीतये हरे। मरुद्भ्यो वायवे मदः ॥८॥**
हे हरियो आभाले सम्पन्न सोमदेव ! तिमी हर्ष र शक्तिका साधनजस्ता छौ। देवता र मरुत्हरूले पिउनका लागि कलशमा स्थित होऊ।

**परि स्वानो गिरिष्ठाः पवित्रे सोमो अक्षरत्। मदेषु सर्वधा असि ॥९॥**
पवित्र कलशमा सोमरस निकालिएको छ। हे सोमदेव ! तिमी पर्वतमा उत्पन्न हुन्छौ, रस निकालेपछि आनन्द दिन्छौ र सर्वश्रेष्ठ छौ।

**परि प्रिया दिवः कविर्वयांसि नप्त्योर्हितः । स्वानैर्याति कविक्रतुः ॥१०॥**
बुद्धिवर्द्धक सोमरस निकालेर दुईतर्फ रहेका ब्रह्मनिष्ठले सचेत प्राणीसम्म पुऱ्याउँछन्।

**इति प्रथमः खण्डः**

पहिलो खण्ड समाप्त भयो

 ***

## द्वितीयः खण्डः

दोस्रो खण्ड

**प्र सोमासो मदच्युतः श्रवसे नो मघोनाम्। सुता विदथे अक्रमुः ॥१॥**
आनन्ददायक सोम पेलेर तयार भएपछि हाम्रो यज्ञमा अन्न र यशप्रदाता बनेर रहन्छ।

**प्र सोमासो विपश्चितोऽपो नयन्त ऊर्मयः । वनानि महिषा इव ॥२॥**
बुद्धिवर्द्धक सोम पानीको छाल वा स्वाभाविक रूपमा वनमा जाने पशुभैँ प्रवाहित छ।

**पवस्वेन्दो वृषा सुतः कृधी नो यशसो जने। विश्वा अप द्विषो जहि ॥३॥**
हे पेलेर तयार भएका सोमदेव ! तिमी असल बल बढाउँछौ। मानिसमध्ये हामीलाई यशस्वी बनाऊ र हाम्रा सबै शत्रु नाश गर।

**वृषा ह्यसि भानुना द्युमन्तं त्वा हवामहे। पवमान स्वर्दृशम् ॥४॥**
हे पवित्र हुने बलवर्द्धक सोमदेव ! तिमी सबैलाई समान दृष्टिले हेर्ने भईकन तेजस्वी छौ। यस यज्ञमा हामी तिमीलाई बोलउँछौँ।

**इन्दुः पविष्ट चेतनः प्रियः कवीनां मतिः । सृजदश्वं रथीरिव ॥५॥**
रथीले अश्व प्रेरित गरेभैँ चेतनासम्पन्न सोम सूक्ष्मदर्शीहरूका बुद्धिले प्रेरित हुन्छ।

**असृक्षत प्र वाजिनो गव्या सोमासो अश्वया। शुक्रासो वीरयाशवः ॥६॥**
बल र स्फुर्ति बढाउने सोमरस तेजस्वी छ। गाई, अश्व र वीर पुत्रको कामना गर्नेहरूले पेलेर तयार पार्ने गर्दछन्।

**पवस्व देव आयुषगिन्द्रं गच्छतु ते मदः। वायुमा रोह धर्मणा ॥७॥**
दिव्य गुणले युक्त सोमदेव ! तिमी छानिनका लागि भाँडामा जाऊ। तिम्रो ानन्ददायी रस इन्द्रदेवलाई प्राप्त होस्। तिमी दिव्य रूपले वायुसित मिसिन पुग।

**पवमानो अजीजनद्दिवश्चित्रं न तन्यतुम्। ज्योतिर्वैश्वानरं बृहत् ॥८॥**
वेत्र भएपछि सोमरसले दिव्यलोकमा विद्यमान, सबैलाई प्रकाशित गर्न समर्थ, महान् श्वानर ज्योतिलाई बिजुलीझैं प्रकट गरायो।

**परि स्वानास इन्दवो मदाय बर्हणा गिरा। मधो अर्षन्ति धारया ॥७॥**
लेर तयार भएको अमृतरूपी, ज्ञानवर्द्धक, मधुर सोमरस साधकले स्तुति गर्दै छाने।

**परि प्रासिष्यदत्कविः सिन्धोरूर्मावधि श्रितः। कारुं बिभ्रत्पुरुस्पृहम् ॥१०॥**
द्धिवर्द्धक, प्रशंसनीय, याजकलाई पोषण गर्ने, नदीका लहरमा मिसिने सोमरस पात्रमा ्थर भएको छ।

## इति द्वितीयः खण्डः

दोस्रो खण्ड समाप्त भयो

***

## तृतीयः खण्डः

तेस्रो खण्ड

**उपो षु जातमप्तुरं गोभिर्भङ्गं परिष्कृतम्। इन्दुं देवा अयासिषुः ॥१॥**
ात्रुसंहार गर्ने, राम्ररी तयार, जल र गाईका दुधमा मिसिएको यो सोमरस देवतालाई न्तुष्ट गर्न सफल होस्।

**पुनानो अक्रमीदभि विश्वा मृधो विचर्षणिः। शुम्भन्ति विप्रं धीतिभिः ॥२॥**
वित्र भइसकेपछि बुद्धिवर्द्धक एवं ज्ञानवर्द्धक सोमरसले सबै शत्रुलाई शमन गर्दछ। ज्ञानीहरू यस सोमलाई दिव्य स्तोत्रले स्तुति गर्दछन्।

**आविशन्कलशं सुतो विश्वा अर्षन्नभि श्रियः। इन्दुरिन्द्राय धीयते ॥३॥**
परिष्कृत सोमरस कलशमा भरिएका बेला सुशोभित हुन्छ। गाईको सुरक्षा वीरले गरेझैं यस सोमले यज्ञको सुरक्षा गर्दछ।

**असर्जि रथ्यो यथा पवित्रे चम्वोः सुतः। कार्ष्मन्वाजी न्यक्रमीत् ॥४॥**
ढङ्गामा हिँडेका रथका अश्वझैं सावधानीपूर्वक पेलेको सोमरस पात्रमा भर्ने गरिन्छ। बलशाली सोम पनि देवताझैं आफूतर्फ आकर्षित गर्नका लागि समर्थ छ।

**प्र यद्गावो न भूर्णयस्त्वेषा अयासो अक्रमुः। घ्नन्तः कृष्णामप त्वचम् ॥५॥**
गाईरूपी किरणले कालो आवरण हटाउँदै सोम तीव्र गतिका साथ अघि बढेको छ।

**अपघ्नन्पवसे मृधः क्रतुवित्सोम मत्सरः। नुदस्वादेवयुं जनम् ॥६॥**
हे आनन्द प्रदायक, सत्ययज्ञका ज्ञाता सोमदेव ! विकृति विनाश गर्दै देवत्व विरोधीलाई तिमी विनाश गर।

**अया पवस्व धारया यया सूर्यमरोचयः। हिन्वानो मानुषीरपः ॥७॥**

हे सोमदेव ! जसका कारणले तिमी मानिसका लागि जलरूपी रस बढाउँछौ, जसबाट सूर्यदेवलाई प्रकाशित गर्दछौ उसै असल धारासँगै तिमी प्रवाहित होऊ।

**स पवस्व य आविथेन्द्रं वृत्राय हन्तवे। वव्रिवांसं महीरपः ॥८॥**

हे सोमदेव ! तिमी जलको प्रवाह रोक्ने वृत्रलाई मार्नका लागि इन्द्रदेवलाई प्रोत्साहित गर र तीव्र धारासँगै कलशमा छानिँदै जाऊ।

**अया वीती परि स्रव यस्त इन्दो मदेष्वा। अवाहन्नवतीर्नव ॥९॥**

हे सोमदेव ! इन्द्रदेवले सेवनार्थ तिमी कलशमा स्थित होऊ। तिम्रो रस युद्धमा शत्रुका सबै सहर नष्ट गर्नका लागि इन्द्रदेवलाई सामर्थ्य प्रदान गर्दछ।

**परि द्युक्षं सनद्रयिं भरद्वाजं नो अन्धसा। सुवानो अर्ष पवित्र आ ॥१०॥**

धन प्रदान गर्ने तेजस्वी सोमले हामीलाई बल एवं अन्नले पूरा गराओस्। हे सोमदेव! तिमी शोधक यन्त्रले शोधित हुँदै आऊ।

## इति तृतीयः खण्डः

तेस्रो खण्ड समाप्त भयो

***

## चतुर्थः खण्डः

चौथो खण्ड

**अचिक्रदद्वृषा हरिर्महान्मित्रो न दर्शतः। सं सूर्येण दिद्युते ॥१॥**

प्रिय मित्रजस्तो, शक्तिसम्पन्न, हरियो आभा भएको सोमरस पेल्दाखेरि शब्द गर्दै सूर्य उदाएझैँ प्रकाशित हुन्छ।

**आ ते दक्षं मयोभुवं वह्निमद्या वृणीमहे। पान्तमा पुरुस्पृहम् ॥२॥**

हे सोमदेव ! हर्ष प्रदान गर्ने, सम्पत्ति प्रदान गर्ने, शत्रुबाट रक्षा गर्ने तिम्रा बलको अनेकौं मानिसले कामना गर्दछन्। त्यस बललाई हामी धारण गर्दछौँ।

**अध्वर्यो अद्रिभिः सुतं सोमं पवित्र आ नय। पुनाहीन्द्राय पातवे ॥३॥**

हे अध्वर्यु हो ! इन्द्रले पिउने गरी ढुङ्गाले पेलेको सोम पवित्र गरेर भाँडानजिकै ल्याओ।

**तरत्स मन्दी धावति धारा सुतस्यान्धसः। तरत्स मन्दी धावति ॥४॥**

निकालिएका सोमरसको पुष्टिकारक धारा आनन्द प्रदान गर्दछ र त्यसले निकृष्ट संस्कार नहुने र उपासकलाई उँभो लगाउन सक्छ।

**आ पवस्व सहस्रिणं रयिं सोम सुवीर्यम्। अस्मे श्रवांसि धारय ॥५॥**

हे सोमदेव ! हामीलाई हजारौँ किसिमका बलले युक्त असल धन र अन्न प्रदान गर।

**अनु प्रत्नास आयवः पदं नवीयो अक्रमुः। रुचे जनन्त सूर्यम् ॥६॥**

अत्यन्त पुराना र निरन्तर प्रवाहमान नौला पद प्राप्त गर्नेहरूले सूर्यलाई प्रकाशका लागि उत्पन्न गर्दछन्।

**अर्षा सोम द्युमत्तमोऽभि द्रोणानि रोरुवत्। सीदन्योनौ वनेष्वा ॥७॥**

हे तेजस्वी सोमदेव ! तिमी शब्द गर्दै पात्रमा शुद्ध भएर स्थित होऊ। तिमी तपोवनमा रहेको यस यज्ञमण्डपमा आऊ।

**वृषा सोम द्युमाँ असि वृषा देव वृषव्रतः। वृषा धर्माणि दध्रिषे ॥८॥**

हे पराक्रमी र तेजस्वी सोमदेव ! तिमी सधैँ बल बढाउने क्षमतायुक्त गुण भएका छौ।

**इषे पवस्व धारया मृज्यमानो मनीषिभिः। इन्दो रुचाभि गा इहि ॥९॥**

हे सोमदेव ! तिमी ज्ञानी ऋत्विक्‌बाट परिष्कृत हुँदै पोषक रसका लागि धाराका रूपमा शुद्ध होऊ र गाईको दुधसँग मिसिएर प्रकाशित होऊ।

**मन्द्रया सोम धारया वृषा पवस्व देवयुः। अव्यो वारेभिरस्मयुः ॥१०॥**

बल बढाउने, देवताले रुचाउने हे सोमदेव ! हामीलाई तिमी संरक्षण प्रदान गर र आनन्ददायक धाराका रूपमा चालनीबाट प्रशोधित होऊ।

**अया सोमः सुकृत्यया महन्त्सन्नभ्यवर्धथाः। मन्दान इद् वृषायसे ॥११॥**

हे सोम ! असल कार्यमा लागेर महान् बनेपछि आनन्द प्रदान गर्दै शक्ति बढाउँछौ।

**अयं विचर्षणिर्हितः पवमानः स चेतति। हिन्वान आप्यं बृहत् ॥१२॥**

विशिष्ट बुद्धिवर्द्धक, पात्रमा स्थित, शुद्ध गरिएको सोमरस पानीमा मिसिएर प्रचुर अन्न प्रदान गर्दै यशस्वी हुन्छ।

**प्र न इन्दो महे तु न ऊर्मिं न बिभ्रदर्षसि। अभि देवाँ अयास्यः ॥१३॥**

हे सोमदेव ! प्रचुर सम्पदा प्राप्तिका लागि तिमी कलशमा छानिन्छौ। तिम्रो तेज धारण गर्ने अयास्य ऋषि देवतातिर जान लागेका छन्।

**अपघ्नन्पवते मृधोऽप सोमो अराव्णः। गच्छन्निन्द्रस्य निष्कृतम् ॥१४॥**

यस सोमले शत्रु र दान नदिनेलाई मारिदिन्छ। इन्द्रदेवकहाँ जाँदा छचल्किन्छ।

## इति चतुर्थः खण्डः

चौथो खण्ड समाप्त भयो

***

## पञ्चमः खण्डः

पाँचौँ खण्ड

**पुनानः सोम धारयापो वसानो अर्षसि। आ रत्नधा योनिमृतस्य सीदस्युत्सो देवो हिरण्ययः ॥१॥**

ऐश्वर्यदाता, स्वर्णभैँ चम्किलो, स्वच्छ हे सोमदेव ! शोधनका क्रममा जलले संयुक्त भएर अविरल धाराका रूपमा प्रवाहित हुँदै तिमी यज्ञ पात्रमा प्रतिष्ठित हुन्छौ।

**परीतो षिञ्चता सुतं सोमो य उत्तमं हविः। दधन्वाँ यो नर्यो अप्स्वाऽन्तरा सुषाव सोममद्रिभिः ॥२॥**

हे ऋत्विक् हो ! मानिसको हितैषि, ढुङ्गामा पेलिएको, जल मिसिएको सोम देवताको उत्तम हवि हो।

**आ सोम स्वानो अद्रिभिस्तिरो वाराण्यव्यया। जनो न पुरि चम्वोर्विशद्धरिः सदो वनेषु दध्रिषे ॥३॥**

ढुङ्गाले पेलेर तयार गरेको यो सोमरस शोधनयन्त्रबाट तलको बर्तनमा छानिन्छ। हरियो आभासम्पन्न सोमरस काठको बर्तनमा पुगेर सहर पसेको मानिसझैँ त्यहीँ अडिन्छ।

**प्र सोम देववीतये सिन्धुर्न पिप्ये अर्णसा। अंशोः पयसा मदिरो न जागृविरच्छा कोशं मधुश्चुतम् ॥४॥**

देवताले पान गर्ने सोम पानीमा मिसाइन्छ। हर्षप्रदायक हुनुका साथै सोम स्फुर्तिदायक छ। यो सोमरस जलसित मिसिएर मधुररस चुहाउने भाँडामा अडिन्छ।

**सोम उ ष्वाणः सोतृभिरधि ष्णुभिरवीनाम्। अश्वयेव हरिता याति धारया मन्द्रया याति धारया ॥५॥**

याजकले पेलेर तयार पारेको सोम पवित्र भएर तलका भाँडामा प्रवाहित हुन्छ। यो सोम वेगपूर्वक हरियो रङ्गको आनन्ददायक धाराबाट पात्रमा जान्छ।

**तवाहं सोम रारण सख्य इन्दो दिवेदिवे। पुरूणि बभ्रो नि चरन्ति मामव परिधीँ रति ताँ इहि ॥६॥**

हे सोमदेव ! हामीलाई तिम्रो मित्रताको लाभ प्राप्त होस्। हामीलाई दुःख दिने अनेकौँ खालका सबै व्यक्तिलाई तिमी नष्ट गर।

**मृज्यमानः सुहस्त्या समुद्रे वाचमिन्वसि। रयिं पिशङ्गं बहुलं पुरस्पृहं पवमानाभ्यर्षसि ॥७॥**

उत्तम हातले निकाल्ने पवित्र सोमदेव ! तिमी शुद्ध गरिने कलशमा शब्द गर्दै प्रवाहित हुन्छौ र स्तोताका लागि प्रिय स्वर्ण आदि धन प्रदान गर्दछौ।

**अभि सोमास आयवः पवन्ते मद्यं मदम्। समुद्रस्याधि विष्टपे मनीषिणो मत्सरासो मदच्युतः ॥८॥**

मानिसको हितैपि, ज्ञानदाता, आनन्दप्रदायक, शोधनयन्त्रबाट तलतिर बग्ने, आनन्ददायी सोम जलले भरिएका पात्रमा स्वतः शुद्ध हुँदै जम्मा हुन्छ।

**पुनानः सोम जागृविरव्या वारैः परि प्रियः। त्वं विप्रो अभवोऽङ्गिरस्तम मध्वा यज्ञं मिमिक्ष णः ॥९॥**

चैतन्य, प्रिय र पवित्र सोम शोधनयन्त्रबाट शुद्ध भएर तल खस्दछ। अङ्गिरस ऋषिको परम्परामा श्रेष्ठ हे सोमदेव ! बुद्धिवर्द्धक भएर हाम्रो यज्ञ मधुर रसले पवित्र गराऊ।

**इन्द्राय पवते मदः सोमो मरुत्वते सुतः। सहस्रधारो अत्यव्यमर्षति तमी मृजन्त्यायवः ॥१७॥**

हर्षप्रदायक, पेलेर तयार पारेको सोम मरुत्वान् इन्द्रदेवका लागि पवित्र हुन्छ। यो सोम पहिले सहस्र धाराका रूपमा शोधनयन्त्रबाट शुद्ध हुन्छ, त्यसपछि फेरि स्तोताहरू मन्त्रले यसको शोधन गर्दछन्।

**पवस्व वाजसातयेऽभि विश्वानि वार्या। त्वं समुद्रं प्रथमे विधर्मन् देवेभ्यः सोम मत्सरः ॥११॥**

स्तोत्रले पवित्र भएका, विशिष्ट अन्नले पोषकतायुक्त, देवतालाई आनन्द दिने हे सोमदेव ! उदारता आदि विशिष्ट गुणले युक्त भएर यस श्रेष्ठ यज्ञमा पवित्र होऊ।

**पवमाना असृक्षत पवित्रमति धारया। मरुत्वन्तो मत्सरा इन्द्रिया हया मेधामभि प्रयांसि च ॥१२॥**

मरुत्हरूका मित्र, हर्ष प्रदाता, इन्द्रका प्रिय, बुद्धि र अन्नले युक्त यज्ञमा प्रयुक्त हुने र शुद्ध रहने सोमरस शोधनयन्त्रबाट तल खस्दछ।

## इति पञ्चमः खण्डः

पाँचौं खण्ड समाप्त भयो

***

## षष्ठः खण्डः

छैटौं खण्ड

**प्र तु द्रव परि कोशं नि षीद नृभिः पुनानो अभि वाजमर्ष। अश्वं न त्वा वाजिनं मर्जयन्तोऽच्छा बर्ही रशनाभिर्नयन्ति ॥१॥**

हे सोमदेव ! याजकले पवित्र गरेपछि तिमी चाँडै पात्रमा स्थित होऊ र यजमानलाई पोषक तत्त्व प्रदान गर। शक्तिमान् घोडाजस्तो शुद्ध पारेर याजकले तिमीलाई यज्ञमण्डपमा ल्याउँछन्।

**प्र काव्यमुशनेव ब्रुवाणो देवो देवानां जनिमा विवक्ति। महिव्रतः शुचिबन्धुः पावकः पदा वराहो अभ्येति रेभन् ॥२॥**

उशना ऋषिझैँ स्तोत्र पाठ गर्ने ऋत्विक्हरू देवताका जन्मको वृतान्त बयान गर्दछन्। महान् व्रती, तेजस्वी र पवित्र गराउने श्रेष्ठ सोमरस शब्द गर्दै पात्रमा प्रवाहित हुन्छ।

**तिस्रो वाच ईरयति प्र वह्निर्ऋतस्य धीतिं ब्रह्मणो मनीषाम्। गावो यन्ति गोपतिं पृच्छमानाः सोमं यन्ति मतयो वावशानाः ॥३॥**

याजकहरू सत्य धारण गर्ने तीन वेदका मन्त्रले दिव्य, श्रेष्ठ सोमको स्तुति गर्दछन्। साँढेका नजिकै जाने गाईझैँ उत्तम सुखको खोजी गर्ने स्तोता सोमका नजिकै पुग्छन्।

**अस्य प्रेषा हेमना पूयमानो देवो देवेभिः समपृक्त रसम्। सुतः पवित्रं पर्येति रेभन् मितेव सद्म पशुमन्ति होता ॥४॥**

गोठमा पशु गएझैँ प्रेरक देवताजस्तो सोम पेलेर तयार गरिएपछि शोधक यन्त्ररूपी चाल्नीमा प्रवाहित हुन्छ। सुनले शोधित हुँदै यसले देवतालाई रसले सन्तुष्ट गर्दछ।

**सोमः पवते जनिता मतीनां जनिता दिवो जनिता पृथिव्याः। जनिताग्नेर्जनिता सूर्यस्य जनितेन्द्रस्य जनितोत विष्णोः ॥५॥**

द्युलोक, पृथिवी, अग्नि, सूर्य, इन्द्र, विष्णु र असल बुद्धिका लागि उत्पादनशील सोम शुद्ध गरिँदै छ।

**अभि त्रिपृष्ठं वृषणं वयोधामाङ्गोषिणमवावशन्त वाणीः। वना वसानो वरुणो न सिन्धुर्वि रत्नधा दयते वार्याणिः ॥६॥**

ऋत्विक्का वाणीले तीनै स्थानमा निवास गर्ने, खोजेको कुरो पूरा गराउने अन्नदाता सोमलाई ठूलो र तेजस्वी स्वरले स्तुति गर्दछ। जलमा रहने वरुणदेवजस्तै पानीमा मिसिएका सोमदेवले स्तोतालाई रत्न र धन प्रदान गर्दछन्।

**अक्रांत्समुद्रः प्रथमे विधर्मं जनयन् प्रजा भुवनस्य गोपाः। वृषा पवित्रे अधि सानो अव्ये बृहत्सोमो वावृधे स्वानो अद्रिः ॥७॥**

जलयुक्त, समस्त भुवनको राजा, बलवर्द्धक, पेलेर निकालेको सोम सर्वप्रथम प्रजाको उत्साह बढाएर उनीहरूको उन्नति गर्दै सबैभन्दा महान् बन्यो।

**कनिक्रन्ति हरिरा सृज्यमानः सीदन्वनस्य जठरे पुनानः। नृभिर्यतः कृणुते निर्णिजं गामतो मतिं जनयत स्वधाभिः ॥८॥**

मानिसले पेलेर रस निकाल्ने, हरियो आभा भएको सोम पवित्र छ। गाईको दुध मिसेको काठका भाँडाको सोमरस शब्द गर्दै तल खस्दा याजकहरू यसको स्तुति गर्दछन्।

**एष स्य ते मधुमाँ इन्द्र सोमो वृषा वृष्णः परि पवित्रे अक्षाः। सहस्रदाः शतदा भूरिदावा शश्वत्तमं बर्हिरा वाज्यस्थात् ॥४॥**

हे इन्द्रदेव ! बलवर्द्धक तिम्रो सोम मधुर र वीर्यवान् बनेर शोधक यन्त्रबाट निस्कन्छ। हजारौँ वा सयौँ किसिमका प्रचुर धन प्रदान गर्ने शक्तिसम्पन्न सोम निरन्तर सम्पन्न हुने यज्ञमा गएर स्थित हुन्छ।

**पवस्व सोम मधुमाँ ऋतावापो वसानो अधि सानो अव्ये। अव द्रोणानि घृतवन्ति रोह मदिन्तमो मत्सर इन्द्रपानः ॥१०॥**

हे मधुर सोमरस ! तिमी जलमा मिसिएर, उच्च स्थानमा रहेर र चाल्नीले छानिएर पवित्र हुन्छौ। त्यसपछि इन्द्रदेवले पिउन योग्य यो हर्षप्रदायक सोम जलयुक्त पात्रमा पुगेर स्थित हुन्छ।

## इति षष्ठः खण्डः

छैटौँ खण्ड समाप्त भयो

***

## सप्तमः खण्डः

सातौँ खण्ड

**प्र सेनानीः शूरो अग्ने रथानां गव्यन्नेति हर्षते अस्य सेना। भद्रान् कृण्वन्निन्द्रहवांत्सखिभ्य आ सोमो वस्त्रा रभसानि दत्ते ॥१॥**

शूरवीर सेनानायकले शत्रुका गाई प्राप्त गर्ने विचार गर्दै रथ अगाडि लिएर जान्छ। यस कार्यले यिनको सेना खुसी हुन्छ। याजकका लागि सोमले मित्र इन्द्रदेवको प्रार्थना मङ्गलमय बनाउँदै तेजस्विता धारण गर्दछन्।

**प्र ते धारा मधुमतीरसृग्रन्वारं यत्पूतो अत्येष्यव्यम्। पवमान पवसे धाम गोनां जनयंत्सूर्यमपिन्वो अर्कैः ॥२॥**

हे सोमदेव ! अविनाशी चाल्नीबाट छिरेपछि तिम्रो मधुर धारा प्रकट हुन्छ। गाईको धाममा प्रकट र शुद्ध भएर तिमी सूर्यलाई तेजले पूर्ण गराउँछौ।

**प्र गायताभ्यर्चाम देवान्त्सोमं हिनोत महते धनाय। स्वादुः पवतामति वारमव्यमा सीदतु कलशं देव इन्दुः ॥३॥**

मधुर र तेजस्वी सोमरस चाल्नीले छानेर पवित्रता धारण गर्दै पात्रमा स्थिर होस्। वैभव प्राप्तिका आशाले हामी स्तुत्य सोमरसलाई प्रेरित गर्दै देवताको अर्चना गरौं।

**प्र हिन्वानो जनिता रोदस्यो रथो न वाजं सनिष्यन्नयासीत्। इन्द्रं गच्छन्नायुधा संशिशानो विश्वा वसु हस्तयोरादधानः ॥४॥**

द्युलोक र पृथिवी उत्पन्न गर्ने, शस्त्रको प्रखरता बढाउने देवताका पोषक सोमदेव वेगपूर्वक इन्द्रदेवका नजिकै पुगे। मानौं विश्वको अपार वैभव हामी याजकलाई प्रदान गर्नका लागि उनी आएका हुन्।

**तक्षद्यदी मनसो वेनतो वाग् ज्येष्ठस्य वा धर्मं द्युक्षोरनीके। आदीमायन्वरमा वावशाना जुष्टं पतिं कलशे गाव इन्दुम् ॥५॥**

बोल्ने तेजस्वी पुरुषका अन्तःकरणबाट वाणी निस्कँदा मुखबाट शब्द उच्चरित हुन्छ। त्यस बेला ज्येष्ठ तेजस्वी सोम ल्याइन्छ र त्यसै बेला कलशमा रहेको, उत्तम, सेवनीय पालनकर्ता सोमको इच्छा गर्नेलाई गाईको दुधरूपी मधुर एवं पोषक अन्न प्राप्त हुन्छ।

**साकमुक्षो मर्जयन्त स्वसारो दश धीरस्य धीतयो धनुत्रीः। हरिः पर्यद्रवज्जाः सूर्यस्य द्रोणं ननक्षे अत्यो न वाजी ॥६॥**

कर्म गर्ने औँलाले सोमलाई पवित्र गर्दछन्। दस औँलाले वीर्यवान् सोम हल्लाउँछन्। हरियो आभासम्पन्न सोमरस सबै तिरबाट तेज गतिले कुदै अश्वझैं कलशमा पस्छ।

**अधि यदस्मिन्वाजिनीव शुभः स्पर्धन्ते धियः सूरे न विशः। अपो वृणानः पवते कवीयान्व्रजं न पशुवर्धनाय मन्म ॥७॥**

सोमलाई अश्वझैं शुभ संस्कारले सुसज्जित बनाउनका निम्ति सूर्यलाई किरणले सजाएझैं संस्कारित बुद्धिले स्पर्धा गर्दा पशुको वृद्धि गर्ने चरनजस्तो हुँदै यो क्रान्तदर्शी सोम कलशमा सञ्चरण गर्दछ।

**इन्दुर्वाजी पवते गोन्योघा इन्द्रे सोमः सह इन्वन्मदाय। हन्ति रक्षो बाधते पर्यरातिं वरिवस्कृण्वन्वृजनस्य राजा ॥८॥**

इन्द्रदेवको शक्ति बढाउने, होतालाई धन दिने, शक्तिको स्वामी सोमलाई खुसी बनाउन भाँडामा छानिन्छ। सोमरसले राक्षस नष्ट गर्दछ र दुष्टलाई पनि पिटेर लखेट्छ।

**अया पवा पवस्वैना वसूनि मांश्चत्व इन्दो सरसि प्र धन्व। ब्रध्नश्चिद्यस्य वातो न जूतिं पुरुमेधश्चित्तकवे नरं धात् ॥९॥**

हे सोमदेव ! पवित्र धाराले हामीलाई ऐश्वर्य प्रदान गर। प्रकृतिको मूल आधार सूर्यदेवले वायुदेवलाई प्रवाहित गरेझैँ तिमी वसतीवरी नामका कलशमा प्रवाहित भएर बुद्धिशाली इन्द्रदेवलाई प्राप्त होऊ र हामीलाई सुसन्तान प्रदान गर।

**महत्तत्सोमो महिषश्चकारापां यद्गर्भोऽवृणीत देवान्। अदधादिन्द्रे पवमान ओजोऽजनयत्सूर्ये ज्योतिरिन्दुः ॥१०॥**

महान् शक्तिशाली दिव्य सोमबाट महान् कार्य सम्पन्न हुन्छ। गर्भमा जल धारण गरेर देवतालाई पोषण प्रदान गर्ने उही हो। शुद्ध भएर उसैले इन्द्रदेवलाई सामर्थ्य प्रदान गर्दछ र उसैले सूर्यमा तेज स्थापित गर्दछ।

**असर्जि वक्वा रथ्ये यथाजौ धिया मनोता प्रथमा मनीषा। दश स्वसारो अधि सानो अव्ये मृजन्ति वह्निं सदनेष्वच्छ ॥११॥**

अश्वलाई युद्धमा प्रेरित गरेझैँ सबैलाई प्रिय लाग्ने, सर्वप्रथम स्तुत्य सोम शब्द गर्दै यज्ञकर्ममा प्रेरित गरिन्छ। दस दिदीबहिनी सोमलाई अविनाशी शोधनयन्त्रबाट निस्केर आफ्ना स्थानमा जानका लागि प्रेरित गर्दछन्।

**अपामिवे दूर्म यस्तर्तुराणाः प्र मनीषा ईरते सोममच्छ। नमस्यन्तीरुप च यन्ति सं चाच विशन्त्युशतीरुशन्तम् ॥१२॥**

पानीको द्रुतगामी तरङ्गझैँ बोल्न हतारिने स्तोता चाँडै सोमका नजिक स्तुति पुऱ्याउँछन्। उन्नतिको कामना गर्ने विनम्र भावको स्तुति उसलाई रुचाउने सोमका नजिकै जान्छ र उसैमा समाहित हुन्छ।

## इति सप्तमः खण्डः

सातौँ खण्ड समाप्त भयो

***

## अष्टमः खण्डः

आठौँ खण्ड

**पुरोजिती वो अन्धसः सुताय मादयित्नवे। अप श्वानं श्नथिष्टन सखायो दीर्घजिह्व्यम् ॥१॥**

हे मित्र हो ! अगाडि राखेको आनन्द प्रदान गर्ने सोमतिर लामो जिब्रो निकाल्दै जान लागेको कुकुर धपाओ।

**अयं पूषा रयिर्भगः सोमः पुनानो अर्षति। पतिर्विश्वस्य भूमनो व्यख्यद्रोदसी उभे ॥२॥**

परिपोषक, सेवनीय, सुन्दर यो दिव्य सोम छानिँदै तलका भाँडामा प्रवाहित हुन्छ। सबै प्राणीको पालक यो सोमरस आफ्ना दिव्य तेजले दुवै लोक प्रकाशित गर्दछ।

**सुतासो मधुमत्तमाः सोमा इन्द्राय मन्दिनः। पवित्रवन्तो अक्षरन् देवान् गच्छन्तु वो मदाः ॥३॥**

मधुर हर्षप्रदायक सोमरस पवित्र भएर इन्द्रदेवका लागि तयार छ। हे सोमदेव ! तिम्रो आनन्ददायक रस देवतासित पुगोस्।

**सोमाः पवन्त इन्दवोऽस्मभ्यं गातुवित्तमाः। मित्राः स्वाना अरेपसः स्वाध्यः स्वर्विदः ॥४॥**

उचित मार्गको जानकारी भएको, मित्रजस्तै, पापरहित मनलाई राम्री एकाग्र गराउने, आत्मविद् यो पेलेर तयार पारेको सोमरस हाम्रा लागि शुद्ध गरिन्छ।

**अभि नो वाजसातमं रयिमर्ष शतस्पृहम्। इन्दो सहस्रभर्णसं तुविद्युम्नं विभासहम् ॥५॥**

सयौँ मानिसबाट प्रशंसित, हजारौँको पोषक, विशेष ओजस्वी, बलवर्द्धक सोमरसले हामीलाई धन प्रदान गरोस्।

**अभी नवन्ते अद्रुहः प्रियमिन्द्रस्य काम्यम्। वत्सं न पूर्व आयुनि जातं रिहन्ति मातरः ॥६॥**

द्रोहविनाको र इन्द्रदेवलाई प्रिय लाग्ने सोम जलले रुचिपूर्वक प्राप्त गरेर माउले बाछो सह्यारेझैँ सह्यार्दछ।

**आ हर्यताय धृष्णवे धनुस्तन्वन्ति पौंस्यम्। शुक्रा वयन्त्यसुराय निर्णिजे विपामग्रे महीयुवः ॥७॥**

योद्धाले धनुषमा प्रत्यञ्चा चढाएझैँ महान् उद्देश्य भएका ऋत्विक्‌ले विद्वान्‌का सामु प्राणशक्ति वृद्धि गर्नका लागि वाणीले तेजस्वी सोम विस्तार गर्दछन्।

**परि त्यं हर्यतं हरिं बभ्रुं पुनन्ति वारेण। यो देवान्विश्वाँ इत्परि मदेन सह गच्छति ॥८॥**

हरियो र खैरो रङ्गका सुन्दर सोमलाई जलले पवित्र बनाउँछ। यो सोम इन्द्र आदि देवताका नजिक आफ्नो हर्षप्रदायक गुणसँगै जान्छ।

**प्र सुन्वानायान्धसो मर्तो न वष्ट तद्वचः। अप श्वानमराधसं हता मखं न भृगवः ॥९॥**

शोधित हुँदाखेरि सोमको विघ्नकारी शब्द सन्तोषी मानिसले नसुनून्। भृगुले मख नामका दानवलाई लखेटेझैँ यज्ञस्थलबाट कुकुर लखेट।

**इति अष्टमः खण्डः**

आठौँ खण्ड समाप्त भयो

***

## नवमः खण्डः

नवौँ खण्ड

**अभि प्रियाणि पवते चनोहितो नामानि यह्वो अधि येषु वर्धते। आ सूर्यस्य बृहतो बृहन्नधि रथं विष्वञ्चमरुहद्विचक्षणः ॥१॥**

दिव्य सोम सर्वत्रगामी सूर्यदेवका रथमा आरूढ भएर संसारको द्रष्टा बन्दछ। प्रिय जलसँगै अन्नका लागि हितकारी बनेर विस्तृत हुँदै प्रवाहित हुन्छ।

**अचोदसो नो धन्वन्त्विन्दवः प्र स्वानासो बृहद्देवेषु हरयः। वि चिदश्नाना इषयो अरातयोऽर्यो नः सन्तु सनिषन्तु नो धियः ॥२॥**

उत्तेजित नहुने सोमरसले हामीलाई प्रेरणा र वर्षाको हरियो रस प्रदान गरोस्। हाम्रा अन्नका शत्रु नाश होऊन्। हाम्रो भावना देवताकहाँ पुगोस् र हामी सफल होऔँ।

**एष प्र कोशे मधुमाँ अचिक्रददिन्द्रस्य वज्रो वपुषो वपुष्टमः। अभ्यृ३तस्य सुदुघा घृतश्चुतो वाश्रा अर्षन्ति पयसा च धेनवः ॥३॥**

दुधालु गाईको घिउसहितको दुधजस्तै ध्वनि गर्दै, इन्द्रदेवको वज्रजस्तै शक्तिशाली, सुन्दरतम बीज अङ्कुरित गराउने सोम, शब्द गर्दै कलशमा प्रवेश गर्दछ।

**प्रो अयासीदिन्दुरिन्द्रस्य निष्कृतं सखा सख्युर्न प्र मिनाति सङ्गिरम्। मर्य इव युवतिभिः समर्षति सोमः कलशे शतयामना पथा ॥४॥**

मित्रजस्तै हुनाले सोमरस इन्द्रदेवका पेटमा पुगेपछि उनलाई दुःख दिँदैन। तरुनीका माझमा तन्नेरी मिलेर रहेझैँ पानीसित सोम मिसिएर शोधक यन्त्रका सयौँ प्वालबाट निस्केर कलशमा प्रवेश गर्दछ।

**धर्ता दिवः पवते कृत्व्यो रसो दक्षो देवानामनुमाद्यो नृभिः। हरिः सृजानो अत्यो न सत्वभिर्वृथा पाजांसि कृणुते नदीष्वा ॥५॥**

धारक शक्तिसम्पन्न, कर्मनिष्ठ, देवशक्ति संवर्द्धक, स्तोताबाट प्रशंसित, हरित सोम शोधित हुन्छ। यस्तो सोमरस बलवान् अश्वजस्तै सहजतासाथ आफैँ नदीमा मिसिन्छ।

**वृषा मतीनां पवते विचक्षणः सोमो अह्नां प्रतरीतोषसां दिवः। प्राणा सिन्धूनां कलशाँ अचिक्रददिन्द्रस्य हार्द्याविशन्मनीषिभिः ॥६॥**

स्तोताको कामना पूरा गराउने, संसारका द्रष्टा तथा दिन, उषा र आदित्यको शक्ति संवर्द्धक सोम छानिन्छ। नदीको प्राणस्वरूप पानीमा मिसाएर मनीषी उद्गाताहरूले निकालेको यो सोम इन्द्रदेवका पेटमा प्रवेश गर्ने रहरले पात्रमा स्थित हुन्छ।

**त्रिरस्मै सप्त धेनवो दुदुह्रिरे सत्यामाशिरं परमे व्योमनि। चत्वार्यन्या भुवनानि निर्णिजे चारूणि चक्रे यदृतैरवर्धत ॥७॥**

परम व्योमलाई एक्काईस गाईरूपी दिव्य धाराले दुधरूपी पोषण प्रदान गर्दछन्, त्यस बेला यज्ञसित सम्बन्धित यस सोमले अन्य चार सुन्दर भुवन निर्माण गर्दछ।

**इन्द्राय सोम सुषुतः परि स्रवापामीवा भवतु रक्षसा सह। मा ते रसस्य मत्सत द्वयाविनो द्रविणस्वन्त इह सन्त्विन्दवः ॥८॥**

हे सोमदेव ! तिमी गतिलो ढङ्गले पेलेर तयार भएपछि इन्द्रदेवलाई पिउनका लागि

प्रवाहित भई रोगरूपी राक्षसबाट मुक्त होऊ। दोहोरो खालको व्यवहार गर्ने दुष्टलाई सोमरस प्राप्त नहोस्। यस यज्ञमा सोमरस ऐश्वर्ययुक्त बनोस्।

**असावि सोमो अरुषो वृषा हरी राजेव दस्मो अभि गा अचिक्रदत्। पुनानो वारमत्येष्यव्ययं श्येनो न योनिं घृतवन्तमासदम् ॥९॥**

ओजस्वी, शक्तिवर्द्धक, हरियो वर्णको, सम्राट्‌झैँ सौन्दर्ययुक्त सोमरस निस्कँदै छ। गाईको दुध मिसाएपछि सोम ध्वनि गर्दै पवित्र भएर चाल्नीबाट छानेर तयार हुन्छ। त्यसपछि श्येनपक्षीझैँ पानीका भाँडामा स्थित हुन्छ।

**प्र देवमच्छा मधुमन्त इन्दवोऽसिष्यन्त गाव आ न धेनवः। बर्हिषदो वचनावन्त ऊधभिः परिस्रुतमुस्रिया निर्णिजं धिरे ॥१०॥**

दुधालु गाईले बाछाका लागि दुध बगाएझैँ मिठो सोमरस देवतातिर प्रवाहित हुन्छ। यज्ञमण्डपमा एकत्र भएका वाणीरूपी गाई शब्द गर्दै आफ्नो सारतत्त्व प्रकट गर्दै श्रवण गराउने कामका रूपमा दोहनकार्यमा लागेका छन्।

**अञ्जते व्यञ्जते समञ्जते क्रतुं रिहन्ति मध्वाभ्यञ्जते। सिन्धोरुच्छ्वासे पतयन्तमुक्षणं हिरण्यपावाः पशुमप्सु गृभ्णते ॥११॥**

स्तोता सोमरस गाईका दुधमा विशेष किसिमले मिसाउँछन्। त्यसको स्वाद देवताले लिन्छन्। त्यस सोममा गाईको घिउ र मह मिसाउँछन्। त्यसपछि नदीका पानीमा रहेका सोमलाई स्वर्णले शुद्ध गरेर तेजस्वी रूप प्रदान गर्दछन्।

**पवित्रं ते विततं ब्रह्मणस्पते प्रभुर्गात्राणि पर्येषि विश्वतः। अतप्ततनूर्न तदामो अश्नुते शृतास इद्वहन्तः सं तदाशत ॥१२॥**

हे मन्त्रका अधिपति सोमदेव ! तिम्रा पवित्र अङ्ग सर्वत्र विद्यमान छन्। शक्तिशाली भएका कारण पान गर्नेका शरीरमा तिमी स्फुर्ति बढाइदिन्छौ। तपस्याले शरीर खिइएका आलाकाँचाले त्यो फल प्राप्त गर्न सक्दैनन्। परिपक्व भएपछि मात्रै पाउन सक्दछन्।

## इति नवमः खण्डः

नवौँ खण्ड समाप्त भयो

***

## दशमः खण्डः

दसौँ खण्ड

**इन्द्रमच्छ सुता इमे वृषणं यन्तु हरयः। श्रुष्टी जातास इन्दवः स्वर्विदः ॥१॥**

भर्खर बनेको, आत्मज्ञान वृद्धि गर्ने हरियो आभासम्पन्न सोम पराक्रमी इन्द्रदेवलाई चाँडै प्राप्त होस्।

**प्र धन्वा सोम जागृविरिन्द्रायेन्दो परि स्रव। द्युमन्तं शुष्ममा भरा स्वर्विदम् ॥२॥**

हे सोमदेव ! स्फूर्तिले सम्पन्न भएर तिमी इन्द्रदेवका निम्ति कलशमा प्रवाहित होऊ। हामीलाई तेजवर्द्धक र ज्ञानवर्द्धक शक्तिले पूर्ण गराऊ।

**सखाय आ नि षीदत पुनानाय प्र गायत। शिशुं न यज्ञैः परि भूषत श्रिये ॥३॥**

हे ऋत्विक् मित्र हो ! यहाँ आएर बस र सोम शोधित गर्दाखेरि स्तुति गर। शिशुलाई गहनाले सजाएझैँ यज्ञीय साधनले सोमरसलाई सजाओ।

**तं वः सखायो मदाय पुनानमभि गायत। शिशुं न हव्यैः स्वदयन्त गूर्तिभिः ॥४॥**

हे मित्र हो ! आनन्ददायी सोमरस पेलेर तयार गर्दा प्रार्थना गर। शिशुलाई गहनाले सिँगारेझैँ यज्ञ र स्तुतिले यसलाई सुहाउँदिलो बनाओ।

**प्राणा शिशुर्महीनां हिन्वन्नृतस्य दीधितिम्। विश्वा परि प्रिया भुवदध द्विता ॥५॥**

यज्ञकर्ता र जलको महान् पुत्र सोम हो। यज्ञ प्रकाशित गर्न आफ्ना रसलाई यसले प्रेरित गर्दछ। यो सबै हविष्यान्नमा व्याप्त हुँदै द्युलोक र पृथ्वीलोकमा व्याप्त रहन्छ।

**पवस्व देववीतय इन्दो धाराभिरोजसा। आ कलशं मधुमान्त्सोम नः सदः ॥६॥**

हे सोमदेव ! देवताले सेवन गर्नका लागि वेगपूर्वक धारासँगै कलशमा प्रवाहित होऊ। आनन्ददायक हे सोमदेव ! हाम्रा यस कलशमा आएर तिमी स्थित होऊ।

**सोमः पुनान ऊर्मिणाव्यं वारं वि धावति। अग्रे वाचः पवमानः कनिक्रदत् ॥७॥**

स्तुतिपछि पवित्र हुँदै, ध्वनि गर्दै, शोधित भएको सोमरस प्रवाहका साथ अविनाशी चाल्नीले छानिँदै जान्छ।

**प्र पुनानाय वेधसे सोमाय वच उच्यते। भृतिं न भरा मतिभिर्जुजोषते ॥८॥**

हे स्तोता हो ! पोषण प्राप्त गराउनेहरूले पोषितका लागि प्रयत्न गरेझैँ तिमी यी पवित्र हुँदै गरेका स्तुतिले हर्षित हुने, ज्ञानी सोमका लागि प्रेरक मन्त्रको गायन गर।

**गोमन्न इन्दो अश्ववत्सुतः सुदक्ष धनिव। शुचिं च वर्णमधि गोषु धारय ॥९॥**

रस निकालिसकेपछि हे बलशाली सोमदेव ! हामीलाई गाई, घोडाले युक्त धन प्रदान गर। त्यसपछि तिमी गाईका दुधमा मिसिएर पवित्र सेतो वर्णको बन।

**अस्मभ्यं त्वा वसुविदमभि वाणीरनूषत। गोभिष्टे वर्णमभि वासयामसि ॥१०॥**

हे सोमदेव ! तिमी धन प्रदान गर्दछौ। तिम्रो धन हामीलाई प्राप्त होस् भनेर हाम्रो वाणी तिमीलाई प्रार्थना गर्दछ। हामी तिम्रो रस गाईका दुधमा मिसाउँछौं।

**पवते हर्यतो हरिरति ह्वरांसि रंह्या। अभ्यर्ष स्तोतृभ्यो वीरवद्यशः ॥११॥**

प्रशंसनीय हरियो आभाको सोम वेगयुक्त प्रवाहले आफ्नो अशुद्ध भाग शुद्ध गर्दै तलतिर रहेको कलशमा चुहुन्छ। हे सोमदेव ! तिमी ऋत्विक्हरूलाई पुत्र वा अन्नसम्बन्धी कीर्ति प्रदान गर।

**परि कोशं मधुश्चुतं सोमः पुनानो अर्षति। अभि वाणीर्ऋषीणां सप्ता नूषत ॥१२॥**

पवित्र भएको सोमले आफ्नो मधुर रस पात्रमा पुऱ्याउँछ। ऋषिका सात पदयुक्त वाणीले यी सोमदेवको प्रार्थना गर्दछ।

**इति दशमः खण्डः**

दसौँ खण्ड समाप्त भयो

***

## एकादशः खण्डः

एघारौँ खण्ड

**पवस्व मधुमत्तम इन्द्राय सोम क्रतुवित्तमो मदः। महि द्युक्षतमो मदः ॥१॥**

हे सोमदेव ! अत्यन्त मधुर हविका विषयमा सबै कुरो जान्ने, श्रेष्ठ, तेजस्वी, आनन्द बढाउने भएकाले तिमी इन्द्रदेवलाई आनन्दित गर्नका लागि पवित्र होऊ।

**अभि द्युम्नं बृहद्यश इषस्पते दिदीहि देव देवयुम्। वि कोशं मध्यमं युव ॥२॥**

हे अन्नका अधिपति र देदीप्यमान् सोमदेव ! तिमी देवतालाई प्राप्त हुन्छौ। हामीलाई तेजोमय एवं महान् कीर्ति प्रदान गर र कलशपात्रमा गएर त्यसलाई भरिदेऊ।

**आ सोता परि षिञ्चताश्वं न स्तोममप्तुरं रजस्तुरम्। वनप्रक्षमुदप्रुतम् ॥३॥**

हे याजक हो ! अश्वजस्तै गतिशील, प्रार्थनायोग्य, पानीजस्तै प्रवाहमान, किरणझैँ शीघ्र गमन गर्ने, जलयुक्त सोमरस पेलेर तयार गर र त्यसमा दुध मिसाओ।

**एतमु त्यं मदच्युतं सहस्रधारं वृषभं दिवोदुहम्। विश्वा वसूनि बिभ्रतम् ॥४॥**

आनन्ददायी, हजारौँ धाराले कलशमा चुहुने, शक्तिवर्द्धक, सबै धनका स्वामी, तेजस्वी यो सोमको रस ऋत्विक्हरूले पेल्दछन्।

**स सुन्वे यो वसूनां यो रायामानेता य इडानाम्। सोमो यः सुक्षितीनाम् ॥५॥**

ऋत्विक्हरूले सम्पत्ति, दुध आदि पदार्थ, भूमि र श्रेष्ठ सन्तानप्रदायक सोमको रस निकालेका छन्।

**त्वं ह्याऽङ्ग दैव्यं पवमान जनिमानि द्युमत्तमः। अमृतत्वाय घोषयन् ॥६॥**

पवित्र सोम तेजस्वी, दिव्य जन्मका विषयमा जान्ने र अमृत तत्त्व प्रकट गर्ने हो।

**एष स्य धारया सुतोऽव्यो वारेभिः पवते मदिन्तमः। क्रीडन्नूर्मिरपामिव ॥७॥**

अति हर्षप्रदायक, पानीका तरङ्गझैँ क्रीडा गर्ने सोम रौँले बनेको चाल्नीमा छानिन्छ।

**य उस्रिया अपि या अन्तरश्मनि निर्गा अकृन्तदोजसा। अभि व्रजं तत्निषे गव्यमश्व्यं वर्मीव धृष्णवा रुज ॐ वर्मीव धृष्णवा रुज ॥८॥**

सोमले आकाशमा बढ्दो बादलभित्रको जल आफ्ना शक्तिले छिन्नभिन्न गर्दछ र गाई एवं अश्वलाई सबै तिरबाट घेर्दछ। हे सोम ! कवचले युक्त वीरले झैँ शत्रु विनाश गर।

## इति एकादशः खण्डः

एघारौँ खण्ड समाप्त भयो

***

## इति सामवेद संहिता पञ्चमोऽध्यायः

सामवेद संहिताको पाँचौँ अध्याय समाप्त भयो।

ॐ

**भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।**

# सामवेद संहिता

## अथ षष्ठोऽध्यायः

## आरण्यं पर्व

**ऋषि—** शंयु बार्हस्पत्य भारद्वाज। वसिष्ठ मैत्रावरुणि। वामदेव गौतम। शुनःशेप आजीगर्ति कृत्रिम देवरात वैश्वामित्र। कुत्स आङ्गिरस। अमहीयु आङ्गिरस। आत्मा। श्रुतकक्ष आङ्गिरस। पवित्र आङ्गिरस। मधुच्छदा वैश्वामित्र। प्रथ वासिष्ठ। गृत्समद शौनक। नृमेध पुरुमेध आङ्गिरस। गोतम राहूगण। भरद्वाज बार्हस्पत्य। ऋजिश्वा भारद्वाज। हिरण्यस्तूप आङ्गिरस। विश्वामित्र गाथिन। नारायण। शतं वैखानस। विभ्राड् सौर्य। कुत्स आङ्गिरस। सार्पराज्ञी। प्रस्कण्व काण्व। प्रजापति।

**देवता—** इन्द्र। वरुण। पवमान सोम। विश्वेदेवा। अन्न। वायु। प्रजापति। सोम। अग्नि। अपांनपात्। रात्रि। लिङ्गोक्त। आत्मा। अग्नि। पुरुष। द्यावापृथिवी। गौ। अग्नि पवमान। सूर्य। आत्मा। इन्द्र त्रैलोक्यात्मा।

**छन्द—** बृहती। त्रिष्टुप्। गायत्री। एकपाद जगती। जगती। अनुष्टुप्। पहापङ्क्ति। पङ्क्ति शक्वरी सोपवर्गा।

### प्रथमः खण्डः

पहिलो खण्ड

**इन्द्र ज्येष्ठं न आ भरँ ओजिष्ठं पपुरि श्रवः। यद्दिधृक्षेम वज्रहस्त रोदसी उभे सुशिप्र पप्राः ॥१॥**

हे हातमा वज्र लिने इन्द्रदेव ! हामीलाई ओज, बल र अन्न प्रदान गर। पोषक अन्नले द्युलोक र पृथिवी दुवै ठाउँमा पोषण प्रदान गर्दछ। त्यो अन्न हामीसित राख्न पाऔँ।

**इन्द्रो राजा जगतश्चर्षणीनामधि क्षमा विश्वरूपं यदस्य। ततो ददाति दाशुषे वसूनि चोदद्राध उपस्तुतं चिदर्वाक् ॥२॥**

इन्द्रदेव सर्वै प्राणीका स्वामी र पदार्थरूपी धनका राजा हुन्। उनी दान गर्ने बानी हुनेलाई जीवनउपयोगी वस्तु प्रदान गर्दछन्। ती असल सम्पदा हामीतिर पठाऊन्।

**यस्येदमा रजोयुजस्तुजे जने वनं स्वः। इन्द्रस्य रन्त्यं बृहत् ॥३॥**

इन्द्रदेवताको तेजस्वितायुक्त दान स्वर्गलोकमा स्तुत्य छ र दानीहरूले पनि त्यसको उत्तिकै स्तुति गरेका छन्। त्यस्ता खालको उनको दान उत्कृष्ट र सन्तुष्टिप्रदायक रहेको छ।

**उदुत्तमं वरुण पाशमस्मदवाधमं वि मध्यमं श्रथाय। अथादित्य व्रते वयं तवानागसो अदितये स्याम ॥४॥**

हे वरुणदेव ! हामीलाई तीनै किसिमका तापरूपी बन्धनहरूबाट मुक्त गर। यी आधिदैविक, आधिभौतिक र आध्यात्मिक नामका तीन किसिमका पाशहरू हामीदेखि टाढा होऊन्। हाम्रा मध्य एवं अधोभागका बन्धनहरूबाट छुटाइदेऊ। हे सूर्यपुत्र ! पापबाट मुक्त भएर हामी तिम्रै कर्मफलका सिद्धान्तमा अनुशासित होऔँ। हाम्रो स्थिति दयनीय नहोस्।

**त्वया वयं पवमानेन सोम भरे कृतं वि चिनुयाम शश्वत्। तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥५॥**

हे संसार शुद्ध र पवित्र गराउने सोमदेव ! तिम्रा सहायताले हामी जीवन सङ्ग्राममा निरन्तर उत्तम कर्म चयन गरौँ। यसका लागि अदिति, मित्र, वरुण, पृथ्वी, सिन्धु र द्युलोकले हामीलाई यशस्वी बनाऊन्।

**इमं वृषणं कृणुतैकमिन्माम् ॥६॥**

हे देवताहरू हो ! तिमी यी एक्ला विश्वेदेवतालाई बलिष्ठ बनाऊ र हामीलाई पनि देवताको जस्तै कार्यमा सफलता प्रदान गर।

**स न इन्द्राय यज्यवे वरुणाय मरुद्भ्यः। वरिवोवित्परिस्रव ॥७॥**

हामीलाई ऐश्वर्यशाली बनाउने हे सोमदेव ! हामी इन्द्र, मरुत्गण र वरुणदेवका लागि यज्ञ गर्दछौँ, उनैका निम्ति तिमी राम्ररी झरिदेऊ।

**एना विश्वान्यर्य आ द्युम्नानि मानुषाणाम्। सिषासन्तो वनामहे ॥८॥**

मानिसलाई आवश्यक पर्ने सबै खालका अन्न आदि हामीलाई सोमका सहायताले प्राप्त होस्। हामी तिनको राम्रो उपयोग गर्न चाहन्छौँ।

**अहमस्मि प्रथमजा ऋतस्य पूर्वं देवेभ्यो अमृतस्य नाम। यो मा ददाति स इदेवमावदहमन्नमन्नमदन्तमद्मि ॥९॥**

अन्नदेवताका रूपमा म सनातन यज्ञद्वारा देवताहरूभन्दा पनि पहिले उत्पन्न भएको हुँ। मलाई सत्पात्रलाई जसले प्रदान गर्दछन्, उनीहरूले निश्चय पनि सबैको भलो गर्दछन्। केवल स्वयं नै मेरो उपभोग गर्ने कन्जुस हो, त्यस्तालाई त म स्वयं नै खाइदिन्छु।

### इति प्रथमः खण्डः

पहिलो खण्ड समाप्त भयो

***

## द्वितीयः खण्डः

दोस्रो खण्ड

**त्वमेतदधारयः कृष्णासु रोहिणीषु च। परुष्णीषु रुशत्पयः ॥१॥**

हे इन्द्रदेव ! काला, राता आदि अनेकौँ रङ्का गाईमा देदीप्यमान सेतो दुध तिमीले स्थापित गराएका छौ। यो तिम्रो अद्भुत सामर्थ्य नै हो।

**अरूरुचदुषसः पृश्निरग्रिय उक्षा मिमेति भुवनेषु वाजयुः। मायाविनो ममिरे अस्य मायया नृचक्षसः पितरो गर्भमादधुः ॥२॥**

सूर्यका रूपमा सोम नै स्वयं प्रकाशित एवं प्रमुख हुन्। वर्षा गराएर पोषक जलका धाराले सबै प्राणीलाई पोषण प्रदान गर्ने उनै हुन्। सोमका क्षमताले संसारको निर्माण हुन्छ। उनका आज्ञाले देवता र मानिसले औषधिमा गर्भको स्थापना गरेका हुन्।

**इन्द्र इद्धर्योः सचा सम्मिश्ल आ वचोयुजा। इन्द्रो वज्री हिरण्ययः ॥३॥**

इन्द्र रथमा घोडा आफूखुसी नार्न सक्छन् र उनले हातमा वज्र लिएका छन्। सुनका

वस्त्र र गहनाले सजिएका इन्द्रदेवले घोडा पालेका छन्, ती घोडाहरू इन्द्रले भन्नासाथ भेला भएर आफैं रथमा नारिने खालका छन्।

**इन्द्र वाजेषु नोऽव सहस्रप्रधनेषु च। उग्र उग्राभिरूतिभिः ॥४॥**

हे वीर इन्द्रदेव ! हजारौं प्रकारका धन लाभ गराउने हुनाले सानाठूला सबै लडाइँमा तिमी वीरतापूर्वक हाम्रो रक्षा गर।

**प्रथश्च यस्य सप्रथश्च नामानुष्टुभस्य हविषो हविर्यत्। धातुर्द्युतानात्सवितुश्च विष्णो रथन्तरमा जभारा वसिष्ठः ॥५॥**

विस्तृत र सुविख्यातको अर्थ लाग्ने खालको प्रथ र सप्रथ नाम भएका वसिष्ठले अनुष्टुप् छन्दले हविष्यान्न अर्पण गरे। उनले धारणकर्ता, तेजस्वी सविता र विष्णुबाट रथान्तर साम प्राप्त गरे।

**नियुत्वान्वायवा गह्ययं शुक्रो अयामि ते। गन्तासि सुन्वतो गृहम् ॥६॥**

रथमा जोतिएका घोडामा सवार भएर याज्ञिककहाँ पुग्ने हे वायुदेव ! तिम्रा लागि यो गतिलो सोमरस तयार गरिएको छ। यसै निम्ति हामी तिमीलाई आह्वान गर्दछौं।

**यज्जायथा अपूर्व्य मघवन्वृत्रहत्याय। तत्पृथिवीमप्रथयस्तदस्तभ्ना उतो दिवम् ॥७॥**

हे अद्‌भुत वैभवशाली इन्द्रदेव ! वृत्र संहारका लागि तिमी प्रकट भएर पृथ्वी विस्तृत गर्नुका साथसाथै द्युलोकलाई पनि स्थिर गरायौ।

## इति द्वितीयः खण्डः

दोस्रो खण्ड समाप्त भयो

***

## तृतीयः खण्डः

तेस्रो खण्ड

**मयि वर्चो अथो यशोऽथो यज्ञस्य यत्पयः। परमेष्ठी प्रजापतिर्दिवि द्यामिव दृंहतु ॥१॥**

द्युलोकवासी, प्रजापालक परमेश्वरले हामीमा तेज, यश र पोषक तत्त्वको वृद्धि गराऊन्। दिव्य प्रकाशकले युक्त अन्तरिक्षजस्तै पारेर हाम्रो जीवनलाई उजिल्याइदिऊन्।

**सं ते पयांसि समु यन्तु वाजाः सं वृष्ण्यान्यभिमातिषाहः। आप्यायमानो अमृताय सोम दिवि श्रवांस्युत्तमानि धिष्व ॥२॥**

हे शत्रुसंहारक सोमदेव ! दुध र अन्नबाट बल धारण गर। आफ्नो अमरत्व प्राप्तिका लागि द्युलोकमा श्रेष्ठ अन्नहरू प्राप्त गर।

**त्वमिमा ओषधीः सोम विश्वास्त्वमपो अजनयस्त्वं गाः। त्वमातनोरुर्वा३न्तरिक्षं त्वं ज्योतिष वि तमो ववर्थ ॥३॥**

आफ्ना तेजले अन्धकार नाश गर्ने र अन्तरिक्षलाई विस्तृत गराउने हे दिव्य सोमदेव ! तिमीले नै पृथ्वीमा सबै औषधीहरू, गाईहरू र जल उत्पन्न गरायौ।

**अग्निमीडे पुरोहितं यज्ञस्य देवमृत्विजम्। होतारं रत्नधातमम् ॥६०५॥**

हामी विश्वामित्र आदि ऋषिहरू अग्निको स्तुति गर्दछौँ। यज्ञ भनेको पुरोहितहरूले गर्ने कल्याणकारी कार्य हो। हाम्रा यज्ञमा अग्निदेव आऊन्। यज्ञमा सहयोग गर्नका लागि देवताहरूलाई अग्निले बोलाऊन्। ऋत्विक्हरू समयअनुसार यज्ञ गर्न लागेका छन्। होताहरू यज्ञमा आहुति चढाउँछन्। ऋत्विक्हरू अग्निलाई बोलाउँछन्। देवताहरूका लागि गर्न लागिएको यज्ञलाई अग्निले रत्नरूपी फलले सजाउँछन्।

**ते मन्वत प्रथमं नाम गोनां त्रिः सप्त परमं नाम जानन्। ता जानतीरभ्यनूषत क्षा आविर्भुवन्नरुणीर्यशसा गावः ॥५॥**

वाणीको शब्द प्रशंसनीय हुन्छ भन्ने कुरो सबैभन्दा पहिले बुझेर अङ्गिरा आदि ऋषिले एक्काईस छन्दका स्तोत्र जाने। त्यसपछि उसै वाणीले उषाको स्तुति गरे। त्यसपछि तेजबाट रातो किरण प्रकट भयो।

**समन्या यन्त्युपयन्त्यन्याः समानमूर्वं नद्यस्पृणन्ति। तमू शुचिं शुचयो दीदिवांसमपान्नपातमुप यन्त्यापः ॥६॥**

जलको कुनै प्रवाह नजिक आउँछ र कुनै पर जान्छ। नदी एकोहोरो भएर सागरमा पुग्दछ। त्यहाँ त्यस जलले अपानंपात देवतालाई चारै तिरबाट घेर्दछ।

**आ प्रागाद्भद्रा युवतिरह्नः केतून्त्समीर्त्सति। अभूद्भद्रा निवेशनी विश्वस्य जगतो रात्री ॥७॥**

कल्याणकारी स्त्रीका रूपमा रात्रिको आगमनले दिउँसोको प्रकाशमय स्वरूपलाई प्रतिबन्ध लगाउन लाग्यो। सम्पूर्ण संसारलाई नै विश्रामको अवस्थामा पुऱ्याउने रात्रि सबैका लागि हितकारक छ।

**प्रक्षस्य वृष्णो अरुषस्य नू महः प्र नो वचो विदथा जातवेदसे। वैश्वानराय मतिर्नव्यसे शुचिं सोम इव पवते चारुरग्नये ॥८॥**

दीप्तिमान्, तेजस्वी, सर्वव्यापी अग्निदेवलाई हामी स्तुति गर्दछौँ। यज्ञ कार्यमा अग्निका लागि उच्चारण गरिने पवित्र र सुन्दर स्तोत्र सबै होताका लागि हितकारी छन्। त्यस्तै स्तोत्र यज्ञनजिक सोम पुगेझैँ अग्निदेवका समीपमा पुग्दछन्।

**विश्वे देवा मम शृण्वन्तु यज्ञमुभे रोदसी अपां नपाच्च मन्म। मा वो वचांसि परिचक्ष्याणि वोचं सुम्नेष्विद्वो अन्तमा मदेम ॥९॥**

पृथ्वी, अन्तरिक्ष र अग्निसहित समस्त देवशक्तिहरू हामीले प्रस्तुत गरेका श्रेष्ठ स्तोत्र सुनून्। हामी कहिल्यै पनि देवतालाई अप्रिय लाग्ने वचन नबोलौँ र देवताले दिएका अनुदानबाट खुसी होऔँ।

**यशो मा द्यावापृथिवी यशो मेन्द्रबृहस्पती। यशो भगस्य विन्दतु यशो मा प्रतिमुच्यताम्। यशस्व्याऽस्याः संसदोऽहं प्रवदिता स्याम् ॥१०॥**

हामी स्तोताहरूलाई समस्त लोकबाट र इन्द्र, बृहस्पति आदि देवताहरूबाट यश प्राप्त होस्। हामी कहिल्यै पनि यशबाट दूर नहोऔँ। हामी सबैलाई समूहमा विचार व्यक्त गर्ने क्षमता पनि प्राप्त होस्।

**इन्द्रस्य नु वीर्याणि प्र वोचं यानि चकार प्रथमानि वज्री। अहन्नहिमन्वपस्ततर्द प्र वक्षणा अभिनत्पर्वतानाम् ॥११॥**

मेघ फुटाएर पानी बर्साउने, पर्वतबाट बग्ने नदीका किनारा बनाउने, वज्र हातमा लिने र पराक्रमी इन्द्रदेवका कार्यहरू वर्णनीय छन्। उनले गरेका वीरतापूर्ण कार्य यिनै हुन्।

**अग्निरस्मि जन्मना जातवेदा घृतं मे चक्षुरमृतं म आसन्। त्रिधातुरर्को रजसो विमानोऽजस्रं ज्योतिर्हविरस्मि सर्वम् ॥१२॥**

म जन्मजात रूपले सबै कुराको जानकारी भएको अग्नि हुँ। घिउ मेरो आँखाको शक्ति हो। मेरा मुखमा अमृत छ। म प्राणरूपमा तीनै वटालाई धारण गरेर अन्तरिक्ष मापन गर्दछु। निरन्तर तेजोमय सूर्य, हवि एवं हविवाहक पनि म नै हुँ।

**पात्यग्निर्विपो अग्रं पदं वेः पाति यह्वश्चरणं सूर्यस्य। पाति नाभा सप्तशीर्षाणमग्निः पाति देवानामुपमादमृष्वः ॥१३॥**

अत्यन्त सुन्दर अग्निदेव विशाल पृथ्वीका हितकारी र असल स्थानलाई रक्षा गर्दछनन्। महान् सूर्यदेवको परिभ्रमण स्थानलाई उनी रक्षा गर्छन्। अन्तरिक्षमा मरुत्‌हरूको रक्षा पनि उनै गर्दछन् र देवताहरूलाई आनन्दित गराउने यज्ञको रक्षा पनि उनैले गर्दछन्।

**इति तृतीयः खण्डः**

तेस्रो खण्ड समाप्त भयो

***

## चतुर्थः खण्डः

चौथो खण्ड

**भ्राजन्त्यग्ने समिधान दीदिवो जिह्वा चरत्यन्तरासनि। स त्वं नो अग्ने पयसा वसुविद्रयिं वर्चो दृशेऽदाः ॥१॥**

हे जाज्वल्यमान अग्निदेव ! तिम्रो तेजस्वी मुखमा जिब्रोजस्तो ज्वालाले हवि ग्रहण गर्दछ। हे समिद्धले सम्पन्न अग्निदेवता ! हामीलाई तिमी उपयोगी धनधान्य र प्रखर दर्शनीय तेज प्रदान गर।

**वसन्त इन्नु रन्त्यो ग्रीष्म इन्नु रन्त्यः। वर्षाण्यनु शरदो हेमन्तः शिशिर इन्नु रन्त्यः ॥२॥**

वसन्त ऋतु अवश्य आनन्दप्रद छ, ग्रीष्म, वर्षा, शरद, हेमन्त र शिशिर आदि ऋतुहरू पनि पक्कै आनन्ददायी हुन्छन्।

**सहस्रशीर्षा पुरुषः सहस्राक्षः सहस्रपात्। स भूमिं सर्वतो वृत्वात्यतिष्ठद्दशाङ्गुलम् ॥३॥**

हजारौँ शिर, हजारौँ नेत्र, हजारौँ चरण भएका विराट् पुरुषले सारा ब्रह्माण्ड जितेर त्यसलाई दस औँलाले निर्माण गर्दै ओगटेका छन्।

**त्रिपादूर्ध्व उदैत्पुरुषः पादोऽस्येहाभवत्पुनः। तथा विष्वङ् व्यक्रामदशनानशने अभि ॥४॥**

उपल्लो लोकमा तीन चरण हुने विराट् पुरुषको एक भाग यहाँ फेरि प्रकट भयो। अन्न खाने प्राणी र अन्न नखाने वनस्पति आदिमा उनै विराट् पुरुष व्याप्त रहेका छन्।

**पुरुष एवेदं सर्वं यद्भूतं यच्च भव्यम्। पादोऽस्य विश्वा भूतानि त्रिपादस्यामृतं दिवि ॥५॥**

निर्माण भइसकेको र निर्माण हुनुपर्ने सृष्टिको रूप उनै विराट् पुरुष हुन्। ती विराट् पुरुषका एक चरणमा सबै प्राणी अटेका छन् र तीन वटा चरणमा अनन्त दिव्यलोक छ।

**तावानस्य महिमातो ज्यायाँश्च पूरुषः। उतामृतत्वस्येशानो यदन्नेनातिरोहति ॥६॥**

यस संसारको विशालताभन्दा ठूला उनै विराट् पुरुष छन्। अमर आत्मा र अविनाशी जगत्का स्वामी पनि उनै विराट् पुरुष हुन्। अन्न खाएर बढ्नेहरूका स्वामी उनै हुन्।

**ततो विराडजायत विराजो अधिपूरुषः। स जातो अत्यरिच्यतपश्चाद्भूमिमथो पुरः ॥७॥**

सृष्टिको रचना गर्ने परम पुरुष परमात्माबाट ती विराट् पुरुषको उत्पत्ति सृष्टिको मूल आधारतत्त्वका रूपमा भयो। त्यही विराट् मूल तत्त्व प्रकट भएपछि त्यसको विभाजन सुरु भयो। त्यसैबाट भूमि आदिको पिण्ड र प्राणीको उत्पत्ति भएको छ।

**मन्ये वां द्यावापृथिवी सुभोजसौ ये अप्रथेथाममितमभि योजनम्। द्यावापृथिवी भवतं स्योने ते नो मुञ्चतमं हसः ॥८॥**

हे द्युलोक र पृथ्वीलोक ! हामी तिमीहरूलाई पालनकर्ताका रूपमा चिनेका छौँ। हामीलाई तिमीहरू असीमित धन प्रदान गर। हे द्युलोक र पृथ्वीलोक ! हाम्रा लागि तिमीहरू सुखदायी बनेर हामीलाई पापबाट मुक्त गराओ।

**हरी त इन्द्र श्मश्रूण्यूतो ते हरितौ हरी। तं त्वा स्तुवन्ति कवयः परुषासो वनर्गवः ॥९॥**

हे इन्द्रदेव ! तिम्रा जुँगाहरू हरियो आभाले सम्पन्न भएका देखिन्छन् र दुवै घोडा हरियो आभाले सम्पन्न छन्। हे उत्तम गाईका पालक ! विवेकीजनले तिम्रो स्तुति गर्दछन्।

**यद्वर्चो हिरण्यस्य यद्वा वर्चो गवामुत। सत्यस्य ब्रह्मणो वर्चस्तेन मा सं सृजामसि ॥१०॥**

सुनमा भएको आभा, गाईमा र सत्य स्वरूप ब्रह्ममा पनि छ। हामी त्यसै तेजले सम्पन्न हुन चाहन्छौँ।

**सहस्तन्न इन्द्र दद्ध्योज ईशे ह्यस्य महतो विरप्शिन्। क्रतुं न नृम्णं स्थविरं च वाजं वृत्रेषु शत्रून्त्सहना कृधी नः ॥११॥**

हे महान् बलका स्वामी, ऐश्वर्यवान् इन्द्रदेवता ! हाम्रो श्रेष्ठ यज्ञको अनुरूप ऐश्वर्य, बल र सामर्थ्य हामीलाई प्रदान गर। युद्धमा शत्रुलाई पराजित गर्ने शक्ति हामीलाई प्रदान गर।

**सहर्षभाः सहवत्सा उदेत विश्वा रूपाणि बिभ्रतीर्द्व्यूध्नीः। उरुः पृथुरयं वो अस्तु लोक इमा आपः सुप्रपाणा इह स्त ॥१२॥**

बहर र बाछाहरूसहित, ठूलठूला थुन भएका, अनेकौं रूपरङ्गका हे गाईहरू हो ! हाम्रा नजिक आओ। यो महान् लोक तिमीहरूले रहनयोग्य छ र यो जल सन्तुष्टिदायक रूपमा तिमीहरूलाई प्राप्त भएको छ।

## इति चतुर्थः खण्डः

चौथो खण्ड समाप्त भयो

***

## पञ्चमः खण्डः

पाँचौं खण्ड

**अग्न आयूंषि पवस आ सुवोर्जमिषं च नः। आरे बाधस्व दुच्छुनाम् ॥१॥**

हे अग्निदेव ! हामीलाई लामो आयु प्रदान गर, अन्न र बलले पूर्ण गर। चाकरी गर्ने श्वानवृत्ति भएका शत्रुलाई हामीबाट टाढा लैजाऊ।

**विभ्राड् बृहत्पिबतु सोम्यं मध्वायुर्दधद्यज्ञपतावविह्रुतम्। वातजूतो यो अभिरक्षति त्मना प्रजाः पिपर्ति बहुधा वि राजति ॥२॥**

अत्यन्त तेजस्वी सूर्यदेव प्रचुर मात्रामा सोमपान गरून्। याजकलाई बाधारहित लामो आयु प्रदान गरून्। सूर्यदेव वायुबाट प्रेरित रश्मिका माध्यमबाट सम्पूर्ण जगत्को पोषण गर्दछन् र उनलाई आभा आदिले पुष्ट गरेर विविध रूपमा प्रकाशित गर्दछन्।

**चित्रं देवानामुदगादनीकं चक्षुर्मित्रस्य वरुणस्याग्नेः। आप्रा द्यावापृथिवी अन्तरिक्षं सूर्य आत्मा जगतस्तस्थुषश्च ॥३॥**

चराचर जगत्का आत्मारूपी सूर्यदेव दैवी शक्तिको अद्भुत तेजका रूपमा उदाए। मित्र, वरुण आदिका आँखाजस्ता सूर्यदेव उदाउनासाथ द्युलोक, पृथ्वीलोक र अन्तरिक्ष प्रकाशले झलमल्ल भए।

**आयं गौः पृश्निरक्रमीदसदन्मातरं पुरः। पितरं च प्रयन्त्स्वः ॥४॥**

गतिमान सूर्यदेव प्रकट भए। सबैभन्दा पहिले उनी माता पृथ्वी, पिता स्वर्ग र अन्तरिक्ष प्राप्त गर्दछन्।

**अन्तश्चरति रोचनास्य प्राणादपानती। व्यख्यन्महिषो दिवम् ॥५॥**

यिनको प्रकाश आकाशमा सञ्चरित छ। रश्मिले प्राणबाट अपान प्रक्रिया सम्पन्न गराउँछ। यी महान् सूर्यदेव द्युलोकलाई विशेष रूपले प्रकाशित गर्दछन्।

**त्रिंशद्धाम वि राजति वाक्पतङ्गाय धीयते। प्रति वस्तोरह द्युभिः ॥६॥**

सबैका प्रेरक सूर्यदेव दिनका तीस घडीसम्म आफ्ना रश्मिले प्रकाशित हुन्छन्। यी प्रकाशित सूर्यदेवको प्रार्थना गरिन्छ।

**अप त्ये तायवो यथा नक्षत्रा यन्त्यक्तुभिः। सूराय विश्वचक्षसे ॥७॥**

सबैलाई प्रकाश दिने सूर्यदेव उदाउनासाथ रात्रि र ताराको समूह चोर लुकेझैँ लुक्छन्।

**अदृश्रमस्य केतवो वि रश्मयो जनाँ अनु। भ्राजन्तो अग्नयो यथा ॥८॥**

प्रज्वलित अग्निको किरणझैँ, सूर्यदेवका प्रकाशले सम्पूर्ण प्राणीजगत्‌लाई प्रकट गर्दछ।

**तरणिर्विश्वदर्शतो ज्योतिष्कृदसि सूर्य। विश्वमाभासि रोचनम् ॥९॥**

हे सूर्यदेव ! तिमी साधकहरूको उद्धार गर्ने, समस्त संसारका एक मात्र दर्शनीय प्रकाशक हौ। तिमीले नै विस्तृत अन्तरिक्षलाई चारै तिरबाट प्रकाशित गरेका छौ।

**प्रत्यङ् देवानां विशः प्रत्यङ्ङुदेषि मानुषान्। प्रत्यङ् विश्वं स्वर्दृशे ॥१०॥**

हे सूर्यदेव ! तीनै लोकका निवासीले तिम्रो दर्शन गर्न सकून् भनी मरुत्‌गण, देवगण, मनुष्य र स्वर्गलोकका बासिन्दाहरूका अगाडि तिमी नियमित रूपले उदाउँछौ।

**येना पावक चक्षसा भुरण्यन्तं जनाँ अनु। त्वं वरुण पश्यसि ॥११॥**

जुन दृष्टि वा प्रकाशले तिमी प्राणीहरूलाई धारणपोषण गर्ने यस संसारलाई प्रकाशित गर्दछौ, हामी तिम्रा त्यसै प्रकाशलाई स्तुति गर्दछौँ।

**उद्द्यामेषि रजः पृथ्वहा मिमानो अक्तुभिः। पश्यञ्जन्मानि सूर्य ॥१२॥**

हे सूर्यदेव ! तिमी दिन र रातका रूपमा सयमलाई विभाजन गर्दै अन्तरिक्ष तथा द्युलोकमा विचरण गर्दछौ। त्यसो हुनाले सबै प्राणीलाई तिमीबाट लाभ प्राप्त हुन्छ।

**अयुक्त सप्त शुन्ध्युवः सूरो रथस्य नप्त्यः। ताभिर्याति स्वयुक्तिभिः ॥१३॥**

पवित्रता प्रदान गर्ने, ज्ञानसम्पन्न, ऊर्ध्वगामी सूर्यदेव सप्तरङ्गी किरणरूपी अश्वहरूले सजिएका रथमा विराजमान हुन्छन्।

**सप्त त्वा हरितो रथे वहन्ति देव सूर्य। शोचिष्केशं विचक्षण ॥१४॥**

हे सर्वद्रष्टा सूर्यदेव ! तेजस्वी ज्वालाहरूले युक्त दिव्यता तिमीले धारण गरेका हुनाले तिम्रा सप्तरङ्गी किरणरूपी अश्वहरूको रथ पनि सुशोभित भएको छ।

**इति पञ्चमः खण्डः**

पाँचौँ खण्ड समाप्त भयो

***

**इति सामवेद संहिता षष्ठोऽध्यायः**

सामवेद संहिताको छैटौँ अध्याय समाप्त भयो।

ॐ

**भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।**

# सामवेद संहिता

## अथ महानाम्न्यार्चिकः

**विदा मघवन् विदा गातुमनुशंसिषो दिशः। शिक्षा शचीनां पते पूर्वीणां पुरूवसो ॥१॥**

हे वैभवशाली परमात्मा इन्द्रदेवता ! सबै कुरो तिमी नै जान्दछौ, त्यसैले लक्ष्यसम्म पुग्नका लागि मार्गदर्शन गराऊ। हे शक्तिका अधिपति ! हे ऐश्वर्यवान् प्रभु ! हामीलाई सत्प्रेरणा देऊ।

**आभिष्ट्वमभिष्टिभिः स्वाऽ३न्नांशुः। प्रचेतन प्रचेतयेन्द्र द्युम्नाय न इषे ॥२॥**

हे त्रिलोकका अधिपति स्वामी इन्द्रदेवता ! तिमी सूर्यदेवजस्तै तेजस्वी तेजले युक्त छौ। हामीलाई पोषक अन्न प्राप्त गर्ने दिशा निर्देश गर्दै संरक्षण प्रदान गर।

**एवा हि शक्रो राये वाजाय वज्रिवः। शविष्ठ वज्रिन्नृञ्जसे मंहिष्ठ वज्रिन्नृञ्जस आ याहि पिब मत्स्व ॥३॥**

हे महान् वज्र धारण गर्ने इन्द्रदेवता ! तिमी शक्तिमान् छौ। त्यसो हुँदा हामीलाई तिमी धन र बल प्राप्त गर्नका लागि सक्षम बनाऊ। हामीलाई तिमी सामर्थ्यवान् बनाऊ। तिमी हाम्रा नजिकै आएर सोमरस पान गरेर आनन्दित होऊ।

**विदा राये सुवीर्यं भवो वाजानां पतिर्वशाँ अनु। मंहिष्ठ वज्रिन्नृञ्जसे यः शविष्ठः शूराणाम् ॥४॥**

हे इन्द्रदेवता ! उत्तम सामर्थ्यले धन प्राप्त गर्ने मार्ग तिमी जान्दछौ। पुरुषहरूमा बलवान् र शूरताले सम्पन्न हे इन्द्रदेवता ! सबै शक्तिका स्वामी तिमी नै हौ। तिम्रा अनुयायी साधकहरू तिम्रै अनुकूल हुनाले सामर्थ्यवान् हुन्छन्।

**यो मंहिष्ठो मघोनाम शुर्न्न शोचिः। चिकित्वो अभि नो नयेंद्रो विदे तमु स्तुहि ॥५॥**

जो समर्थ, ऐश्वर्यशालीहरूमा सबैभन्दा ठूला छन्, उनै आफ्ना किरणले व्यापक सूर्यदेवजस्तै कान्तिमान् छन्। त्यस्तै कान्तिले युक्त हे इन्द्रदेवता ! हामीलाई ज्ञानसम्पन्न बनाउनका लागि तिमी उपयुक्त मार्ग प्रदर्शन गर। हे साधकहरू हो ! ज्ञान मार्गका पथिकको नै स्तुति गर।

**ईशे हि शक्रस्तमूतये हवामहे जेतारमपराजितम्। स नः स्वर्षदति द्विषः क्रतुश्छन्द ऋतं बृहत् ॥६॥**

सर्वशक्तिमान् इन्द्रदेवता नै सबैका संरक्षक हुन्, त्यसो हुनाले नै अपराजेय र विजयी इन्द्रदेवतालाई आफ्नो संरक्षणका लागि हामी बोलाउँछौं। शत्रुलाई कुटेर खेद्ने, सत्कर्मको संरक्षण गर्ने, ज्ञानका स्वरूप र महान् पनि उनै हुन्।

**इन्द्रं धनस्य सातये हवामहे जेतारमपराजितम्। स नः स्वर्षदति द्विषः स नः स्वर्षदति द्विषः ॥७॥**

धन प्राप्त गर्ने कामनाले अपराजेय, विजयी इन्द्रदेवलाई हामी सहायताका निम्ति बोलाउँछौँ। उनै इन्द्रदेवताले हाम्रा शत्रुहरूलाई हामीदेखि पर पुऱ्याइदिन्छन्।

**पूर्वस्य यत्ते अद्रिवोंऽशुर्मदाय। सुम्न आ धेहि नो वसो पूर्तिः शविष्ठ शस्यते। वशी हि शक्रो नूनं तन्नव्यं संन्यसे ॥८॥**

हे वज्रधारी इन्द्रदेवता ! तिम्रो आदि स्वरूप नै आनन्दवर्द्धक छ। हे सबैका पालनकर्ता इन्द्रदेवता ! त्यो स्वरूप हाम्रो सुखका लागि हामीलाई प्रदान गर। हे बलशाली इन्द्रदेव ! तिम्रा पोषणकारी स्वरूपको नै सर्वत्र प्रशंसा हुन्छ। तिमी निश्चित रूपले शक्तिमान् र सबैलाई आफ्नो वशमा गराउने किसिमको छ, त्यसैले आफ्नो नवीन स्तुतिका लागि योग्य मानेर तिमीलाई हाम्रा पूजास्थलमा स्थापित गर्दछौँ।

**प्रभो जनस्य वृत्रहन्त्समर्येषु ब्रवावहै। शूरो यो गोषु गच्छति सखा सुशेवो अद्वयुः ॥९॥**

हे वृत्रहन्ता इन्द्रदेवता ! हामी श्रेष्ठ मनुष्यमा तिम्रै प्रशंसा गर्दछौँ। हाम्रा लागि तिमी गाई वा आत्माको रूप हौ। तिमी उत्तम किसिमले सेवा गर्न योग्य छौ तथा अद्वितीय र महान् छौ।

**एवाह्योऽ३ऽ३ऽ३ व। एवा ह्यग्ने। एवाहीन्द्र। एवा हि पूषन। एवा हि देवाः ॐ एवा हि देवाः ॥१०॥**

हे इन्द्रदेवता ! तिमी शत्रुलाई संहार गर्दछौ। हे अग्निदेव ! तिमी ज्योतिका स्वरूप हौ। हे पूषादेवताहरू हो ! तिमीहरू पोषणकर्ता हौ। हे समस्त देवताहरू हो ! तिमीहरू सबै दिव्य गुणले सम्पन्न छौ। तिमीहरू सबै यस्तै आआफ्ना गुणले नै सम्पन्न छौ।

**इति महानम्निकः**

महानाम्निक समाप्त भयो

***

ॐ

**भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।**

# सामवेद संहिता

## सामवेद संहिता

### उत्तरार्चिकः

### अथ प्रथमोऽध्यायः

**ऋषि—** असित काश्यप देवल। कश्यप मारीच। शतं वैखानस। भरद्वाज बार्हस्पत्य। विश्वामित्र गाथिन। विश्वामित्र गाथिन जमदग्नि। इरिम्बिठि काण्व। अमहीयु आङ्गिरस। सप्तर्षिगण। उशना काव्य। वसिष्ठ मैत्रावरुणि। वामदेव गौतम। नोधा गौतम। कलि प्रागाथ। मधुच्छन्दा वैश्वामित्र। गौरवीति शाक्त्य। अग्नि चाक्षुष। अन्धीगु श्यावाश्वि। कवि भार्गव। शंयु बार्हस्पत्य। सोभरि काण्व। नृमेध आङ्गिरस।

**देवता—** पवमान सोम। अग्नि। मित्रावरुण। इन्द्र। इन्द्राग्नि।

**छन्द—** गायत्री। बार्हत प्रगाथ। बृहती। सतो बृहती। काकुभ प्रगाथ। ककुप् सतोबृहती। उष्णिक्। अनुष्टुप्। जगती। ककुप्। पुर उष्णिक्।

### प्रथमः खण्डः

पहिलो खण्ड

**उपास्मै गायता नरः पवमानायेन्दवे। अभि देवाँ इयक्षते ॥१॥**

हे याजक हो ! देवशक्तिलाई यज्ञमा काम लाग्ने, विशुद्ध सोमको स्तुति गर।

**अभि ते मधुना पयोऽथर्वाणो अशिश्रयुः। देवं देवाय देवयु ॥२॥**

यो दिव्य रस देवताले दिव्यपुरुषका लागि बनाएका हुन्। अथर्वा ऋषिले तिमीलाई गाईको मिठो दुध दिएका छन्।

**स नः पवस्व शं गवे शं जनाय शमर्वते। शं राजन्नोषधीभ्यः ॥३॥**

हे सोमदेव ! तिमी स्वयं शुद्ध भएर पशुधन, प्रजाधन र अश्व आदि सैन्यबलको हित गर र औषधि पवित्र बनाऊ।

**दविद्युतत्या रुचा परिष्टोभन्त्या कृपा। सोमाः शुक्रा गवाशिरः ॥४॥**

कान्तिमान्, तेजस्वी, शब्दयुक्त धाराले शुद्ध भएका सोमलाई गाईका दुधमा मिसाएर तयार गरिन्छ।

**हिन्वानो हेतृभिर्हित आ वाजं वाज्यक्रमीत्। सीदन्तो वनुषो यथा ॥५॥**

युद्धभूमिमा यशस्वी शूरवीर घुमेझैँ याजकबाट प्रशंसित, बलवर्द्धक सबैको हितकारी, संस्कारित सोम यज्ञभूमिमा प्रतिष्ठा आर्जन गर्दछ।

**ऋधक्सोम स्वस्तये सञ्जग्मानो दिवः कविः। पवस्व सूर्यो दृशे ॥६॥**

हे ज्ञानले सम्पन्न सोमदेव ! तिमी तेजस्वी सूर्यदेवजस्तै दिव्य आभायुक्त भएर सबैको कल्याणका लागि संस्कारित होऊ।

**पवमानस्य ते कवे वाजिन्त्सर्गा असृक्षत। अर्वन्तो न श्रवस्यवः ॥७॥**

हे बलवर्द्धक सोमदेव ! शुद्ध भएका बेला तिम्रो यशस्वी धारा अश्वशालाबाट निस्कने द्रुतगामी अश्वजस्तै वेगवान् हुन्छ।

**अच्छा कोशं मधुश्चुतमसृग्रं वारे अव्यये। अवावशन्त धीतयः ॥८॥**

मधुर रसयुक्त कलशमा हामी सोमरस छान्दछौँ। त्यसले हाम्रा औँलालाई बारम्बार शुद्ध गर्छ।

**अच्छा समुद्रमिन्दवोऽस्तं गावो न धेनवः। अग्मन्नृतस्य योनिमा ॥९॥**

जलयुक्त कलशमा छानिएको सोमरस दुधालु गाई थलामा गएझैँ यज्ञस्थलमा जान्छ।

## इति प्रथमः खण्डः

पहिलो खण्ड समाप्त भयो

***

## द्वितीयः खण्डः

दोस्रो खण्ड

**अग्न आ याहि वीतये गृणानो हव्यदातये। नि होता सत्सि बर्हिषि ॥१॥**

हे प्रकाशक र सर्वव्यापक अग्निदेव ! हविलाई गति दिनका लागि तिमी आऊ। सबैले तिम्रो स्तुति गर्दछन्। यज्ञमा हामी तिम्रो स्वागत गर्दछौँ, किनभने तिमी नै सबै पदार्थ प्रदान गर्दछौ।

**तं त्वां समिद्भिरङ्गिरो घृतेन वर्धयामसि। बृहच्छोचा यविष्ठ्य ॥२॥**

हे प्रकाशस्वरूप अग्निदेव ! तिमीलाई हामी समिधा र घिउले प्रदीप्त गर्दछौँ। त्यसैले हे सामर्थ्यवान् ! तिमी अझै प्रखर होऊ।

**स नः पृथु श्रवाय्यमच्छा देव विवाससि। बृहदग्ने सुवीर्यम् ॥३॥**

हे अग्निदेव ! हामी महान् पराक्रमी र श्रेष्ठ यशस्वी सामर्थ्य प्राप्त गर्ने बन्न सकौँ। त्यसका लागि तिमी कृपा गर।

**आ नो मित्रावरुणा घृतैर्गव्यूतिमुक्षतम्। मध्वा रजांसि सुक्रतू ॥४॥**

हे मित्रावरुण हो ! तिमीहरू गाईलाई घिउले सम्पन्न गराओ र हाम्रा घरबासमा पनि असल रसले सेचन गर।

**उरुशंसा नमोवृधा मह्ना दक्षस्य राजथः। द्राघिष्ठाभिः शुचिव्रता ॥५॥**

हे असल कर्मले सम्पन्न मित्रावरुण हो ! तिमीहरू हविष्यान्न एवं स्तुतिबाट दरिला भएर गौरवशाली यश प्राप्त गर।

**गृणाना जमदग्निना योनावृतस्य सीदतम्। पातं सोममृतावृधा ॥६॥**

जमदग्नि ऋषिले स्तुति गरेका हे मित्रावरुण हो ! तिमीहरू यज्ञस्थलमा आओ र तयार गरेको सोमरस पान गर।

**आ याहि सुषुमा हि त इन्द्र सोमं पिबा इमम्। एदं बर्हिः सदो मम ॥७॥**

हे इन्द्रदेव ! हाम्रा यज्ञमा आऊ, सोमरस तयार गरेर तिम्रा लागि चढाएका छौँ। पान गरेर उच्च आसनमा विराजमान होऊ।

**आ त्वा ब्रह्मयुजा हरी वहतामिन्द्र केशिना। उप ब्रह्माणि नः शृणु ॥८॥**

हे इन्द्रदेव ! मन्त्र सुन्नासाथ रथमा नारिने श्रेष्ठ अश्वका माध्यमबाट तिमी नजिकै आऊ र हाम्रा प्रार्थनामा ध्यान देऊ।

**ब्रह्माणस्त्वा युजा वयं सोमपामिन्द्र सोमिनः। सुतावन्तो हवामहे ॥९॥**

हे इन्द्रदेव ! ब्रह्मनिष्ठ सोमयज्ञकर्ता साधक सोमपानका लागि तिमीलाई आह्वान गर्छन्।

**इन्द्राग्नी आ गतं सुतं गीर्भिर्नभो वरेण्यम्। अस्य पातं धियेषिता ॥१०॥**

हे इन्द्र र अग्निदेव ! हाम्रा स्तुतिले प्रभावित भएर आकाशबाट असल सोमरस बर्सेको छ। हाम्रो भक्तिभाव स्वीकार गर्दै तिमीहरू यो सोमरस पान गर।

**इन्द्राग्नी जरितुः सचा यज्ञो जिगाति चेतनः। अया पातमिमं सुतम् ॥११॥**

हे इन्द्र र अग्निदेव ! स्तुति गर्नेहरूका लागि तिमीहरू सहायक बन। स्तुति गरेर बोलाइएका तिमीहरू स्फुर्तिदायक र यज्ञको साधनजस्तो सोमरस पान गर।

**इन्द्रमग्निं कविच्छदा यज्ञस्य चूत्या वृणे। ता सोमस्येह तृम्पताम् ॥१२॥**

हे इन्द्र र अग्निदेव ! यज्ञीय प्रेरणाले स्तुति गर्नेहरूका लागि योग्य फल प्रदान गर्ने हुनाले हामी पूजा गर्दछौँ। तिमीहरू दुवै यस यज्ञमा सोमरस पान गरेर सन्तुष्ट होओ।

## इति द्वितीयः खण्डः

दोस्रो खण्ड समाप्त भयो

***

## तृतीयः खण्डः

तेस्रो खण्ड

**उच्चा ते जातमन्धसो दिवि सद्भूम्या ददे। उग्रं शर्म महि श्रवः ॥१॥**

हे सोमदेव ! तिम्रा पोषक रसको जन्म द्युलोकमा भयो। त्यहाँ प्राप्त हुने हितकारी सुख र महान् अन्न हामी पृथ्वीमा प्राप्त गर्दछौँ।

**स न इन्द्राय यज्यवे वरुणाय मरुद्भ्यः। वरिवोवित्परिस्रव ॥२॥**

हामीलाई ऐश्वर्यशाली बनाउने हे सोमदेव ! हामी इन्द्र, मरुत्गण र वरुणदेवका लागि यज्ञ गर्दछौँ, उनैका निम्ति तिमी राम्ररी झरिदेऊ।

**एना विश्वान्यर्य आ द्युम्नानि मानुषाणाम्। सिषासन्तो वनामहे ॥३॥**

मानिसलाई आवश्यक पर्ने सबै खालका अन्न आदि हामीलाई सोमका सहायताले प्राप्त होस्। हामी तिनको राम्रो उपयोग गर्न चाहन्छौँ।

**पुनानः सोम धारयापो वसानो अर्षसि। आ रत्नधा योनिमृतस्य सीदस्युत्सो देवो हिरण्ययः ॥४॥**

ऐश्वर्यदाता, स्वर्णझैँ चम्किलो, स्वच्छ हे सोमदेव ! शोधनका क्रममा जलले संयुक्त भएर अविरल धाराका रूपमा प्रवाहित हुँदै तिमी यज्ञ पात्रमा प्रतिष्ठित हुन्छौ।

**दुहान ऊधर्दिव्यं मधु प्रियं प्रत्नं सधस्थमासदत्। आपृच्छ्यं धरुणं वाज्यर्षति नृभिर्धौतो विचक्षणः ॥५॥**

यज्ञ कर्ताहरूले परिष्कृत गरेको मधुर आनन्ददायी, दिव्य रस सोम यज्ञवेदीमा स्थापित छ। निरीक्षणकर्ता याजकलाई यो सोम श्रेष्ठ यज्ञीय भावले सम्पन्न रूपमा प्राप्त हुन्छ।

**प्र तु द्रव परि कोशं नि षीद नृभिः पुनानो अभि वाजमर्ष। अश्वं न त्वा वाजिनं मर्जयन्तोऽच्छा बर्ही रशनाभिर्नयन्ति ॥६॥**

हे सोमदेव ! याजकले पवित्र गरेपछि तिमी चाँडै पात्रमा स्थित होऊ र यजमानलाई पोषक तत्त्व प्रदान गर। शक्तिमान् घोडाजस्तो शुद्ध पारेर याजकले तिमीलाई यज्ञमण्डपमा ल्याउँछन्।

**स्वायुधः पवते देव इन्दुरशस्तिहा वृजनं रक्षमाणः। पिता देवानां जनिता सुदक्षो विष्टम्भो दिवो धरुणः पृथिव्याः ॥७॥**

उत्तम आयुधयुक्त, शत्रुनाशक, विघ्न हटाउने, विघ्नबाट टाढा राख्ने, पालनकर्ता, दिव्यताको विकास गर्ने, उत्तम बलशाली, दिव्य सोम शोधन गरिन्छ।

**ऋषिर्विप्रः पुरएता जनानामृभुर्धीर उशना काव्येन। स चिद्विवेद निहितं यदासामपीच्यां३ गुह्यं नाम गोनाम् ॥८॥**

नेतृत्व प्रदान गर्ने, प्रखर, परम ज्ञानी, धैर्यवान् उशना ऋषिले प्रयास गरेर गाईमा गोप्य रूपले बसेको सोम फेला पारेका छन्।

## इति तृतीयः खण्डः

तेस्रो खण्ड समाप्त भयो

***

## चतुर्थः खण्डः

चौथो खण्ड

**अभि त्वा शूर नोनुमोऽदुग्धाइव धेनवः। ईशानमस्य जगतः स्वर्दृशमीशानमिन्द्र तस्थुषः ॥१॥**

हे शूरवीर इन्द्रदेव ! तिमी यस स्थावर र जङ्गम संसारका स्वामी हौ। नदुहिएको गाई बाछो भेट्नका लागि लालायित भएझैँ दिव्य दृष्टिसम्पन्न तिम्रो दर्शनका लागि हामी लालायित रहन्छौँ।

**न त्वावाँ अन्यो दिव्यो न पार्थिवो न जातो न जनिष्यते। अश्वायन्तो मघवन्निन्द्र वाजिनो गव्यन्तस्त्वा हवामहे ॥२॥**

हे ऐश्वर्यवान् इन्द्रदेव ! यस पृथ्वीमा वा दिव्य लोकमा तिमीजस्तो अर्को न कोही छ, न थियो र न त कहिल्यै हुने नै छ। हे देव ! अश्व, गाई र धनधान्यको कामना गर्ने हामी स्तोताहरू तिम्रो प्रार्थना गर्दछौँ।

**कया नश्चित्र आ भुवदूती सदावृधः सखा। कया शचिष्ठया वृता ॥३॥**

निरन्तर गतिशील हे इन्द्रदेव ! तिमी कुनकुन तृप्तिकारक पदार्थ अर्पण गर्दा र कस्ता पूजाविधिले प्रसन्न हुन्छौ ? तिमी कुन दिव्य शक्तिका सहायताले हाम्रो सहयोग गर्छौ ?

**कस्त्वा सत्यो मदानां मंहिष्ठो मत्सदन्धसः। दृढहा चिदारुजे वसु ॥४॥**

सत्यनिष्ठलाई आनन्द प्रदान गर्नेहरूमा सोम सर्वोपरि छ, किनकि हे इन्द्रदेव ! तिमी डराउँदा शत्रुको ऐश्वर्य नाश गर्न यसले प्रेरणा दिन्छ।

**अभी षु णः सखीनामविता जरितॄणाम्। शतं भवास्यूतये ॥५॥**

स्तुतिले प्रसन्न गर्ने आफ्ना मित्रका रक्षक हे इन्द्रदेव ! हरेक किसिमले हाम्रो रक्षा गर्नका लागि तिमी उच्च कोटिको तयारीका साथ प्रस्तुत होऊ।

**तं वो दस्ममृतीषहं वसोर्मन्दानमन्धसः। अभि वत्सं न स्वसरेषु धेनव इन्द्रं गीर्भिर्नवामहे ॥६॥**

हे ऋत्विक् हो ! शत्रुबाट रक्षा गर्ने, तेजस्वी सोमरसले सन्तुष्ट हुने इन्द्रदेवलाई हामी स्तुति गर्दछौँ। त्यो स्तुति गोठमा आफ्ना बाछासँग जान गाई हतारिएजस्तै हुन्छ।

**द्युक्षं सुदानुं तविषीभिरावृतं गिरिं न पुरुभोजसम्। क्षुमन्तं वाजं शतिनं सहस्रिणं मक्षू गोमन्तमीमहे ॥७॥**

देवलोकवासी, उत्तम दानदाता, सामर्थ्यवान् इन्द्रदेवसित हामी सबै खालका ऐश्वर्य, सयौँ गाई र पोषक अन्नको कामना गर्दछौँ।

**तरोभिर्वो विदद्वसुमिन्द्रं सबाध ऊतये। बृहद् गायन्तः सुतसोमे अध्वरे हुवे भरं न कारिणम् ॥८॥**

बालकले अभिभावक गुहारेझैँ हामी आफ्ना हितैषि इन्द्रदेवलाई सहायताका लागि बोलाउँछौँ। सोमयज्ञमा ऐश्वर्य दिने, वेगवान् अश्वयुक्त इन्द्रदेवलाई आफ्नो रक्षाका लागि आराधना गरौँ।

**न यं दुध्रा वरन्ते न स्थिरा मुरो मदेषु शिप्रमन्धसः। य आदृत्या शशमानाय सुन्वते दाता जरित्र उक्थ्यम् ॥९॥**

सुन्दर आकृति भएका इन्द्रदेवलाई प्राणको बाजी लगाउने असुरले पनि हराउन सक्दैन। ऐश्वर्य प्रदाता, सोमरस पिएर आनन्दित हुने इन्द्रदेवलाई हामी स्तुति गर्दछौँ। सोमयज्ञ गर्ने र भावपूर्ण स्तुति गर्ने याजकलाई उनी सहयोग गर्छन्।

## इति चतुर्थः खण्डः

चौथो खण्ड समाप्त भयो

***

## पञ्चमः खण्डः

पाँचौं खण्ड

**स्वादिष्ठया मदिष्ठया पवस्व सोम धारया। इन्द्राय पातवे सुतः ॥१॥**

हे सोमदेव ! इन्द्रदेवले पान गर्नका लागि तिमीलाई निकालिएका हुनाले अत्यन्त स्वादिष्ट, हर्षप्रदायक धाराका रूपमा प्रवाहित होऊ।

**रक्षोहा विश्वचर्षणिरभि योनिमयोहते। द्रोणे सधस्थमासदत् ॥२॥**

दुष्ट नाश गर्ने, मानिसका लागि हितकारी सोमदेव शुद्ध भएर सुनको पात्रमा भरिएपछि यज्ञस्थलमा प्रतिष्ठित भएका छन्।

**वरिवोधातमो भुवो मंहिष्ठो वृत्रहन्तमः। पर्षि राधो मघोनाम् ॥३॥**

हे सोमदेव ! तिमी महान् ऐश्वर्य प्रदाता तथा शत्रु नाशक हौ। वृत्रासुर हनन गरेर उसको महान् धन हामीलाई प्रदान गर।

**पवस्व मधुमत्तम इन्द्राय सोम क्रतुवित्तमो मदः। महि द्युक्षतमो मदः ॥४॥**

हे सोमदेव ! अत्यन्त मधुर हविका विषयमा सबै कुरो जान्ने, श्रेष्ठ, तेजस्वी, आनन्द बढाउने भएकाले तिमी इन्द्रदेवलाई आनन्दित गर्नका लागि पवित्र होऊ।

**यस्य ते पीत्वा वृषभो वृषायतेऽस्य पीत्वा स्वर्विदः। स सुप्रकेतो अभ्यक्रमीदिषोऽच्छा वाजं नैतशः ॥५॥**

हे सोमदेव ! बलशाली इन्द्रदेव तिमीलाई पान गरेपछि अरू बलशाली हुन्छन्। आत्मज्ञानीहरू तिम्रो पान गरेर अत्यधिक आनन्दित हुन्छन्। उत्तम ज्ञानी इन्द्रदेव तिम्रा बलले सङ्ग्राममा विजयी अश्वजस्तै शीघ्र शत्रुको धन आफ्नो अधिकारमा लिन्छन्।

**इन्द्रमच्छ सुता इमे वृषणं यन्तु हरयः। श्रुष्टे जातास इन्दवः स्वर्विदः ॥६॥**

भर्खर बनेको, आत्मज्ञान वृद्धि गर्ने हरियो आभासम्पन्न सोम पराक्रमी इन्द्रदेवलाई चाँडै प्राप्त होस्।

**अयं भराय सानसिरिन्द्राय पवते सुतः। सोमो जैत्रस्य चेतति यथा विदे ॥७॥**

युद्धका समयमा सेवन गर्न योग्य सोमरस इन्द्रदेवका लागि तयार छ। विजयको कामना गर्ने इन्द्रदेवलाई यस सोमरसले विशेष जोस दिन्छ भन्ने सबैले जान्दछन्।

**अस्येदिन्द्रो मदेष्वा ग्राभं गृभ्णाति सानसिम्। वज्रं च वृषणं भरत्समप्सुजित् ॥८॥**

सेवनीय सोमपानले आनन्दित भएर जल जितेका इन्द्रदेव धनुष र वज्र धारण गर्छन्।

**पुरोजिती वो अन्धसः सुताय मादयित्नवे। अप श्वानं श्नथिष्टन सखायो दीर्घजिह्व्यम् ॥९॥**

हे मित्र हो ! अगाडि राखेको आनन्द प्रदान गर्ने सोमतिर लामो जिब्रो निकाल्दै जान लागेको कुकुर धपाओ।

**यो धारया पावकया परिप्रस्यन्दते सुतः। इन्दुरश्वो न कृत्व्यः ॥१०॥**

यज्ञको सहयोगी सोम शोधित भएका बेला अश्वका गतिले पात्रमा खस्दछ।

**तं दुरोषमभी नरः सोमं विश्वाच्या धिया । यज्ञाय सन्त्वद्रयः ॥११॥**

हे ऋत्विक् हो ! दुष्टतानाशक सोमरसलाई आह्वान गर र यज्ञका निम्ति पूरा बलबुद्धि लगाएर ढुङ्गाले कुटेर रस निकाल।

**अभि प्रियाणि पवते चनोहितो नामानि यह्वो अधि येषु वर्धते । आ सूर्यस्य बृहतो बृहन्नधि रथं विष्वञ्चमरुहद्विचक्षणः ॥१२॥**

दिव्य सोम सर्वत्रगामी सूर्यदेवका रथमा आरूढ भएर संसारको द्रष्टा बन्दछ। प्रिय जलसँगै अन्नका लागि हितकारी बनेर विस्तृत हुँदै प्रवाहित हुन्छ।

**ऋतस्य जिह्वा पवते मधु प्रियं वक्ता पतिर्धियो अस्या अदाभ्यः । दधाति पुत्रः पित्रोरपीच्यां३ नाम तृतीयमधि रोचने दिवः ॥१३॥**

ऋतको जिब्रोजस्ता सोमले मधुर एवं प्रिय प्रवाह प्रदान गर्दछ। बोल्ने र अदम्य बुद्धि भएको सोम पुत्र वा पिताका लागि अज्ञात भएर तेस्रो नामले द्युलोकमा प्रकट हुन्छ।

**अव द्युतानः कलशाँ अचिक्रदन्नृभिर्येमाणः कोश आ हिरण्यये । अभीऋतस्य दोहना अनूषताधि त्रिपृष्ठ उषसो वि राजति ॥१४॥**

स्वर्ण कलशमा शोधित हुँदा शब्द गर्ने तेजस्वी सोमको ऋत्विक्हरूबाट स्तुति गरिन्छ। यो सोम तीनै सन्ध्यामा प्रकट हुन्छ।

## इति पञ्चमः खण्डः

पाँचौँ खण्ड समाप्त भयो

***

## षष्ठः खण्डः

छैटौँ खण्ड

**यज्ञायज्ञा वो अग्नये गिरागिरा च दक्षसे । प्रप्र वयममृतं जातवेदसं प्रियं मित्रं न शंसिषम् ॥१॥**

सर्वज्ञ, अमर, हितकारी, मित्रजस्ता अग्निदेवलाई हामी प्रशंसा गर्दछौँ। हे उद्गाताहरू हो ! प्रत्येक स्तुति र यज्ञको आयोजनामा उनै बलशाली अग्निदेवलाई स्तुति गर।

**ऊर्जो नपातं स हिनायमस्मयुर्दाशेम हव्यदातये । भुवद्वाजेष्वविता भुवद्वृध उत त्राता तनूनाम् ॥२॥**

निरन्तर उर्जा बनाइरहने अग्निदेवलाई हामी प्रार्थना गर्दछौँ। निश्चय नै हाम्रा लागि उनी हितकारी छन्। उनै हव्यवाहक अग्निलाई हामी हव्य प्रदान गर्दछौँ। उनले हाम्रो र हाम्रा पुत्रको रक्षा गरून्।

**एह्यू षु ब्रवाणि तेऽग्न इत्थेतरा गिरः । एभिर्वर्धास इन्दुभिः ॥३॥**

हामी तिम्रै लागि स्तुति गर्दछौँ। तिमी स्तुति सुनेर प्रकट होऊ र यस सोमरसले आफ्नो महानता विस्तार गर।

**यत्र क्व च ते मनो दक्षं दधस उत्तरम्। तत्रा योनिं कृणवसे ॥४॥**

हे अग्निदेव ! तिमी जुन क्षेत्र र याजकदेखि खुसी हुन्छौ, त्यहाँ अत्यधिक बल धारण गराउँछौ र त्यहीं आवास पनि बनाउँछौ।

**न हि ते पूर्तमक्षिपद्भुवन्नेमानां पते। अथा दुवो वनवसे ॥५॥**

हे अग्निदेव ! तिम्रो तेज आँखाका लागि हानिकारक छैन। हे व्रतपालक मानिसहरूका स्वामी ! हाम्रो प्रार्थना तिमी स्वीकार गर।

**वयमु त्वामपूर्व्य स्थूरं न कच्चिद्भरन्तोऽवस्यवः। वज्रिं चित्रं हवामहे ॥६॥**

हे वज्रधारी, अनुपम इन्द्रदेव ! व्यावहारिक गुणसम्पन्न व्यक्तिलाई मानिसले बोलाएझैं रक्षाको कामनाले विशिष्ट सोमले तृप्त गराउँन हामी स्तुति गर्दछौं।

**उप त्वा कर्मन्नुतये स नो युवोग्रश्चक्राम यो धृषत्। त्वामिद्ध्यवितारं ववृमहे सखाय इन्द्र सानसिम् ॥७॥**

हे शत्रुसंहारक तरुण र शूरवीर इन्द्रदेव ! हामी कर्मशीलहरू आफ्नो सहायताका लागि तिम्रो आश्रय लिन्छौं। सहायताका लागि तिमी मित्रजस्तै छौ भन्ने हामी सम्झन्छौं।

**अधा हीन्द्र गिर्वण उप त्वा काम ईमहे ससृग्महे। उदेव ग्मन्त उदभिः ॥८॥**

स्तोत्रले पूजित हे इन्द्रदेव ! हामी निकै ठूलो कामना लिएर पानी पानीकै प्रवाहसित बगेर गएझैं तिमीकहाँ आउँछौं।

**वार्ण त्वा यव्याभिर्वर्धन्ति शूर ब्रह्माणि। वावृध्वांसं चिदद्रिवो दिवेदिवे ॥९॥**

वज्र धारण गर्ने, शूरवीर हे इन्द्रदेव ! नदीका जलले समुद्रको गरिमा बढाएझैं हामी आफ्ना स्तुतिले तिम्रो गरिमा बढाउँछौं।

**युञ्जन्ति हरी इषिरस्य गाथयोरौ रथ उरुयुगे वचोयुजा इन्द्रवाहा स्वर्विदा ॥१०॥**

गमनशील इन्द्रदेवका महान् रथमा आदेश मात्रैले दुई वटा अश्व नारिन्छन्। स्तोताहरू तिनलाई स्तोत्रले नार्दछन्।

**इति षष्ठः खण्डः**

छैटौं खण्ड समाप्त भयो

***

**इति सामवेद संहिता प्रथमोऽध्यायः**

सामवेद संहिताको पहिलो अध्याय समाप्त भयो।



**अव्या वारे परि प्रियो हरिर्वनेषु सीदति। रेभो वनुष्यते मती ॥६॥**

जल मिसिएको, हरियो आभायुक्त र मन्त्रले पवित्र गर्दा ऋत्विक्हरूले गरेका स्तुति स्वीकार गर्ने सोम ध्वनि उत्पन्न गर्दै पात्रमा जम्मा भई अडिन्छ।

**स वायुमिन्द्रमश्विना साकं मदेन गच्छति। रणा यो अस्य धर्मणा ॥७॥**

जुन याजक सोम निकाल्ने र शुद्ध गर्ने काममा जुटेका हुन्छन्, तिनीहरू खुसी थपिदिने सोमसँगै वायु, इन्द्र र अश्विनीकुमारका नजिक पुगेर लाभ उठाउँछन्।

**आ मित्रे वरुणे भगे मधोः पवन्त ऊर्मयः। विदाना अस्य शक्मभिः ॥८॥**

ऋत्विक्ले मित्र, वरुण र भगदेवका लागि मधुर सोमका धारा प्रवाहित गर्छन्। सोमदेवको महिमाबाट परिचित र्ती याजकले आनन्द प्राप्त गर्दछन्।

**अस्मभ्यं रोदसी रयिं मध्वो वाजस्य सातये। श्रवो वसूनि सञ्जितम् ॥९॥**

हे पृथ्वी र द्युलोकका अधिष्ठाता देवता हो ! सोमरसरूपी अत्यन्त पोषक आहार प्राप्त गर्नका लागि तिमीहरू हामीलाई धनधान्यका रूपमा अपार वैभव प्रदान गर।

**आ ते दक्षं मयोभुवं वह्निमद्या वृणीमहे। पान्तमा पुरुस्पृहम् ॥१०॥**

हे सोमदेव ! हर्ष प्रदान गर्ने, सम्पत्ति प्रदान गर्ने, शत्रुबाट रक्षा गर्ने तिम्रा बलको अनेकौँ मानिसले कामना गर्दछन्। त्यस बललाई हामी धारण गर्दछौँ।

**आ मन्द्रमा वरेण्यमा विप्रमा मनीषिणम्। पान्तमा पुरुस्पृहम् ॥११॥**

आनन्दवर्द्धक, श्रेष्ठ, ज्ञानी, विलक्षण, संरक्षक र सबैबाट प्रशंसनीय हे सोमदेव ! हामी तिम्रो उपासना गर्दछौँ।

**आ रयिमा सुचेतुनमा सुक्रतो तनूष्वा। पान्तमा पुरुस्पृहम् ॥१२॥**

उत्तम कर्ममा लागेका हे सोमदेव ! धन, उत्तम ज्ञान, पुत्रपौत्र आदि असल सन्तान, सबल संरक्षण र प्रशंसायोग्य शक्तिको सामर्थ्य पाउन हामी तिम्रो वन्दना गर्दछौँ।

## इति द्वितीयः खण्डः

दोस्रो खण्ड समाप्त भयो

***

## तृतीयः खण्डः

तेस्रो खण्ड

**मूर्धानं दिवो अरतिं पृथिव्या वैश्वानरमृत आ जातमग्निम्। कविं सम्राजमतिथिं जनानामासन्ना पात्रं जनयन्त देवाः ॥१॥**

द्युलोकको सबैभन्दा माथि बस्ने, भूलोकका स्वामी, वैश्वानर अग्निदेव सबै प्राणीभित्र छन्। ज्ञानी अतिथिजस्ता र पूज्य देवताहरूका मुखरूपी अग्निदेवलाई देवताहरूले नै प्रकट गरेका हुन्।

**त्वां विश्वे अमृत जायमानं शिशुं न देवा अभि सं नवन्ते। तव ऋतुभिरमृतत्वमायन्वैश्वानर यत्पित्रोरदीदेः ॥२॥**

हे अमृतस्वरूप अग्निदेव ! तिमी उत्पन्न हुनेबित्तिकै देवता र मानिसहरू तिमीलाई बालकजस्तै आदरणीय मान्दछन्। हे विश्वका नायक ! द्युलोक र भूलोकका माझमा तिमी दीप्तिमान् भएर यज्ञ सम्पादन गर्दा त्यस यज्ञबाट यजमानहरूले देवत्व प्राप्त गरे।

**नाभिं यज्ञानां सदनं रयीणां महामहावमभि सं नवन्त। वैश्वानरं रथ्यमध्वराणां यज्ञस्य केतुं जनयन्त देवाः ॥३॥**

यज्ञका केन्द्रस्थल, धनका भण्डार, महान् आहुति युक्त, समस्त विश्वका नेता, अहिंसक, यज्ञका सञ्चालक र यज्ञको पताकारूपी अग्निलाई याज्ञिकहरूले मन्थन गरेर उत्पन्न गरे। हामी उनको वन्दना गर्दछौँ।

**प्र वो मित्राय गायत वरुणाय विपा गिरा। महिक्षत्रावृतं बृहत् ॥४॥**

हे ऋत्विक्हरू हो ! तिमीहरू मित्र र वरुणदेवका लागि तेज ध्वनिले गायन गर। महानता युक्त, क्षात्र बलले सम्पन्न दुवै देवताहरू यज्ञस्थलमा विस्तृत स्तोत्रगान सुन्नका लागि उपस्थित होऊन्।

**सम्राजा या घृतयोनी मित्रश्चोभा वरुणश्च। देवा देवेषु प्रशस्ता ॥५॥**

तेजस्विताका उत्पत्तिकेन्द्र, मित्र र वरुण यी दुवै अधिपतिहरूको देवताहरूका माझमा प्रशंसा हुन्छ।

**ता नः शक्तं पार्थिवस्य महो रायो दिव्यस्य। महि वां क्षत्रं देवेषु ॥६॥**

देवताहरूमा प्रसिद्ध, पराक्रमी हे मित्र र वरुणदेव हो ! हामीलाई पृथ्वी र द्युलोकको अपार वैभव प्रदान गर, हामी तिमीहरूको स्तुति गर्दछौँ।

**इन्द्रा याहि चित्रभानो सुता इमे त्वायवः। अण्वीभिस्तना पूतासः ॥७॥**

हे अद्‌भुत दीप्तिले सम्पन्न इन्द्रदेवता ! औँलाहरूबाट चुहिएको, श्रेष्ठ पवित्रताले युक्त यो सोम तिम्रै लागि तयार गरिएको हो। तिमी यहाँ आऊ र यही सोमरस पान गर भनेर इन्द्रदेवतालाई ऋषिहरूले बिन्ती गरे।

**इन्द्रा याहि धियेषितो विप्रजूतः सुतावतः। उप ब्रह्माणि वाघतः ॥८॥**

हे उत्तम बुद्धि हुनेहरूले मात्र चिन्ने इन्द्रदेव ! ऋत्विक्हरू तिम्रा लागि सोमरस तयार गर्दै बोलाउँछन्। उनीहरूको स्तुति सुनेपछि यज्ञशालामा आऊ।

**इन्द्रा याहि तूतुजान उप ब्रह्माणि हरिवः। सुते दधिष्व नश्चनः ॥९॥**

हे अश्वयुक्त इन्द्रदेव ! तिमी आफ्नो प्रशंसा सुन्न र हामीबाट दिइएको हवि सेवन गर्नका लागि यस यज्ञशालामा चाँडै आइदेऊ।

**तमीडिष्व यो अर्चिषा वना विश्वा परिष्वजत्। कृष्णा कृणोति जिह्वया ॥१०॥**

अग्निदेवका प्रचण्ड ज्वालाले सारा वन आफ्ना चपेटामा लिएर ज्वालारूपी जिब्राले वन कालो बनाइदिन्छन्। उनै शक्तिशाली अग्निदेवलाई हामी स्तुति गर्दछौँ।

**य इद्ध आविवासति सुम्नमिन्द्रस्य मर्त्यः । द्युम्नाय सुतरा अपः ॥११॥**

प्रज्वलित अग्निमा इन्द्रदेवका लागि आनन्दप्रद आहुति प्रदान गर्ने मानिसको तेज र अन्न वृद्धिका लागि इन्द्रदेव जल वर्षा गराउँछन् ।

**ता नो वाजवतीरिष आशून्पिपृतमर्वतः । एन्द्रमग्निं च वोढवे ॥१२॥**

हे इन्द्र र अग्निदेव ! तिमीहरू दुवै उन्नतिका लागि शक्तिवर्द्धक अन्न र शीघ्र गतिशील अश्व प्रदान गर ।

## इति तृतीयः खण्डः

तेस्रो खण्ड समाप्त भयो

***

## चतुर्थः खण्डः

चौथो खण्ड

**प्रो अयासीदिन्दुरिन्द्रस्य निष्कृतं सखा सख्युर्न प्र मिनाति सङ्गिरम् । मर्य इव युवतिभिः समर्षति सोमः कलशे शतयामना पथा ॥१॥**

मित्रजस्तै हुनाले सोमरस इन्द्रदेवका पेटमा पुगेपछि उनलाई दुःख दिँदैन । तरुनीका माझमा तन्नेरी मिलेर रहेझैँ पानीसित सोम मिसिएर शोधक यन्त्रका सयौँ प्वालबाट निस्केर कलशमा प्रवेश गर्दछ ।

**प्र वो धियो मन्द्रयुवो विपन्युवः पनस्युवः संवरणेष्वक्रमुः । हरिं क्रीडन्तमभ्यनूषत स्तुभोऽभि धेनवः पयसेदशिश्रयुः ॥२॥**

हे सोमदेव ! तिम्रो ध्यान गर्ने र आनन्दपूर्वक स्तुति गर्ने विचार भएका याजकहरू यज्ञस्थलमा यज्ञ गर्न लाग्दा मननशील स्तोता तरङ्गित भएर तिम्रो स्तुति गर्दछन् । त्यस बेला गाईको दुध तिमीसित मिसाउँछन् ।

**आ नः सोम संयतं पिप्युषीमिषमिन्दो पवस्व पवमानो ऊर्मिणा । या नो दोहते त्रिरहन्नसश्चुषी क्षुमद्वाजवन्मधुमत्सुवीर्यम् ॥३॥**

हे पवित्र रहने तेजोमय सोमदेव ! दिनका तीन सवनमा प्रयुक्त अन्न प्रशंसित, बलवर्द्धक, मधुर र उत्तम पुत्र प्रदान गर्ने हुन्छ । हाम्रो त्यही पोषक अन्न तिमी आफ्ना तरङ्गले शुद्ध गर ।

**न किष्टं कर्मणा नशद्यश्चकार सदावृधम् । इन्द्रं न यज्ञैर्विश्वगूर्तमृभ्वसमधृष्टं धृष्णुमोजसा ॥४॥**

स्तुत्य, महाबलशाली, समृद्ध, अपराजित, शत्रु दमन गर्ने इन्द्रदेवलाई यज्ञ आदि कर्मले आफ्नो सहचर बनाउने साधकको कर्म कसैले नष्ट गर्द सक्दैन ।

अषाढमुग्रं पृतनासु सासहिं यस्मिन्महीरुरुज्रयः। सं धेनवो जायमाने अनोनवुर्द्यावः क्षामीरनोनवुः ॥५॥

इन्द्रदेवलाई प्रकट रूपमा नै महान् वेगशाली गाई, पृथ्वी र आकाशले समेत अगाडि झुकेर अभिवादन गर्दछन्। ती उग्र, शत्रुविजेता र पराक्रमीलाई हामी स्तुति गर्दछौं।

## इति चतुर्थः खण्डः

चौथो खण्ड समाप्त भयो

***

## पञ्चमः खण्डः

पाँचौं खण्ड

**सखाय आ नि षीदत पुनानाय प्र गायत। शिशुं न यज्ञैः परि भूषत श्रिये॥१॥**

हे ऋत्विक् मित्र हो ! यहाँ आएर बस र सोम शोधित गर्दाखेरि स्तुति गर। शिशुलाई गहनाले सजाएझैं यज्ञीय साधनले सोमरसलाई सजाओ।

**समी वत्सं न मातृभिः सृजता गयसाधनम्। देवाव्यं३ मदमभि द्विशवसम्॥२॥**

हे ऋत्विक् हो ! घरको साधनजस्तो, दिव्य गुणको रक्षक, आनन्दवर्द्धक, दुवै खालका बल बढाउने यस सोमलाई आमासित छोराछोरी टाँसिएझैं पारेर पानीमा मिसाओ।

**पुनाता दक्षसाधनं यथा शर्धाय वीतये। यथा मित्राय वरुणाय शंतमः॥३॥**

शक्ति प्राप्त हुने र मित्रवरुणले सुख पाउने गरी सोमरस शोधित गर।

**प्र वाज्यक्षाः सहस्रधारस्तिरः पवित्रं वि वारमव्यम्॥४॥**

बलशाली र अनेकौं धाराले छानिने सोम ऊनीको शोधक चाल्नीबाट छानिएर चुहुन्छ।

**स वाज्यक्षाः सहस्ररेता अद्भिर्मृजानो गोभिः श्रीणानः॥५॥**

बलशाली, जलले शोधित, गाईको दुध आदिमा मिसिएको सोम छानिँदै जान्छ।

**प्र सोम याहीन्द्रस्य कुक्षा नृभिर्येमानो अद्रिभिः सुतः॥६॥**

ढुङ्गाले कुटेर निकालेका, ऋत्विक्हरूले विधिपूर्वक पवित्र गरिएका हे सोमदेव ! तिमी इन्द्रदेवको पेटरूपी कलशमा पस।

**ये सोमासः परावति ये अर्वावति सुन्विरे। ये वादः शर्यणावति॥७॥**

टाढाको देशमा या नजिकको देशमा अथवा शर्यणावत सरोवरका नजिकै उत्पन्न भएर संस्कारित सोमरस हाम्रा लागि इष्टप्रदायक हुनेछ।

**य आर्जीकेषु कृत्वसु ये मध्ये पस्त्यानाम्। ये वा जनेषु पञ्चसु॥८॥**

आर्जीक देशमा, कर्म गर्नेका देशमा वा नदीका किनारमा अथवा पाँच वर्णका बीचमा उत्पन्न भएर संस्कारित सोम नै हाम्रा लागि सुखदायक हुनेछ।

**ते नो वृष्टिं दिवस्परि पवन्तामा सुवीर्यम्। स्वाना देवास इन्दवः ॥९॥**

पेलेर निकालिएको, दीप्तिमान्, दिव्य सोम हामीलाई द्युलोकबाट वर्षा र उत्तम बलले युक्त पोषक अन्न प्रदान गर्दछ।

## इति पञ्चमः खण्डः

पाँचौँ खण्ड समाप्त भयो

***

## षष्ठः खण्डः

छैटौँ खण्ड

**आ ते वत्सोमनो यमत्परमाच्चित्सधस्थात्। अग्ने त्वा कामया गिरा ॥१॥**

सर्वव्यापी प्रदीप्त हे अग्निदेव ! हामी तिम्रा पुत्र हौँ, हृदयदेखि नै स्तुति गर्दै तिमीलाई आफूतिर आकर्षित गर्न चाहन्छौँ।

**पुरुत्रा हि सदृङ्ङसि दिशो विश्वा अनु प्रभुः। समत्सु त्वा हवामहे ॥२॥**

हे अग्निदेव ! तिमी सर्वत्र समान दृष्टि राख्ने र सबै प्रजाका अधिपति हौ। त्यसैले युद्धमा आफ्नो सुरक्षाका लागि तिमीलाई आह्वान गर्दछौँ।

**समत्स्वग्निमवसे वाजयन्तो हवामहे। वाजेषु चित्रराधसम् ॥३॥**

हामी सङ्ग्रममा बल र संरक्षण प्राप्त गर्नका लागि अद्भुत सामर्थ्यवान् एवं धनले सम्पन्न अग्निदेवलाई आह्वान गर्दछौँ।

**त्वं न इन्द्रा भर ओजो नृम्णं शतक्रतो विचर्षणे। आ वीरं पृतनासहम् ॥४॥**

अनेकौँ कार्य गर्ने, ज्ञानी हे इन्द्रदेव ! हामीलाई शक्ति एवं ऐश्वर्यले परिपूर्ण गराऊ र शत्रु जित्ने पुत्र पनि प्रदान गर।

**त्वं हि नः पिता वसो त्वं माता शतक्रतो बभूविथ। अथा ते सुम्नमीमहे ॥५॥**

सबैलाई आश्रय दिने, सयौँ खालका कर्म गर्ने हे इन्द्रदेव ! तिमी पिताजस्तै पालन गर्ने र माताजस्तै धारण गर्ने हौ। तिमीसित हामी सुख माग्नका लागि आउँछौँ।

**त्वां शुष्मिन् पुरुहूत वाजयन्तमुप ब्रुवे सहस्कृत। स नो रास्व सुवीर्यम् ॥६॥**

असङ्ख्य तिरबाट स्तुत्य, बलवान्, प्रशंसित, शक्तिशाली हे इन्द्रदेव ! तिम्रो स्तुति गर्दै हामीलाई उत्तम, तेजस्वी सामर्थ्य प्रदान गर भन्ने कामना गर्दछौँ।

**यदिन्द्र चित्र म इह नास्ति त्वादातमद्रिवः। राधस्तन्नो विदद्वस उभयाहस्त्या भर ॥७॥**

अचम्मको वज्र लिने, ऐश्वर्यशाली हे इन्द्रदेव ! हामीसित तिमीलाई चढाउने योग्य धनको खाँचो छ। त्यसैले हामीलाई खुला हातले मनग्गे धन देऊ।

**यन्मन्यसे वरेण्यमिन्द्र द्युक्षं तदा भर। विद्याम तस्य ते वयमकूपारस्य दावनः ॥८॥**

हे इन्द्रदेव ! तिमी जुन धनको शक्तिलाई असल र तेजयुक्त मान्दछौ, त्यो धन हामीलाई मनग्गे मात्रामा प्रदान गर। हामी त्यस धनलाई दान दिने स्थितिमा पनि होऔँ।

**यत्ते दिक्षु प्राध्यं मनो अस्ति श्रुतं बृहत्। तेन दृढहा चिदद्रिव आ वाजं दर्षि सातये ॥९॥**

हे वज्रधारी इन्द्रदेव ! तिमी सबै दिशामा स्तुत्य छौ। प्रसिद्ध र व्यापक मनले हामीलाई स्थायी धन र सामर्थ्य प्रदान गर।

**इति षष्ठः खण्डः**

छैटौँ खण्ड समाप्त भयो

***

**इति सामवेद संहिता अष्टमोऽध्यायः**

सामवेद संहिताको पहिलो आठौँ समाप्त भयो।

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# सामवेद संहिता

## नवमोऽध्यायः

**ऋषि—** प्रतर्दन दैवोदासि। असित काश्यप देवल। उचथ्य आङ्गिरस। अमहीयु आङ्गिरस। निध्रुवि काश्यप। वसिष्ठ मैत्रावरुणि। सुकक्ष आङ्गिरस। कवि भार्गव। देवातिथि काण्व। भर्ग प्रागाथ। अम्बरीष वार्षागिर ऋजिश्वा भारद्वाज। अग्नि धिष्ण्य ऐश्वर। उशना काव्य। नृमेध आङ्गिरस। जेता माधुच्छन्दस।

**देवता—** पवमान सोम। अग्नि। इन्द्र।

**छन्द—** त्रिष्टुप्। गायत्री। जगती। बार्हत प्रगाथ बृहती सतोबृहती। अनुष्टुप्। द्विपदा विराट् गायत्री। उष्णिक्।

### प्रथमः खण्डः

पहिलो खण्ड

**शिशुं जज्ञानं हर्यतं मृजन्ति शुम्भन्ति विप्रं मरुतो गणेन। कविर्गीर्भिः काव्येना कविः सन्त्सोमः पवित्रमत्येति रेभन्॥१॥**

नवजात शिशुजस्तै सबैलाई आनन्द गराउने सोमलाई मरुत्हरूले शुद्ध गर्दछन्। सात गुणले युक्त मेधावर्द्धक सोम स्तुतिसँगै शब्द गर्दै शुद्ध हुन्छ।

**ऋषिमना य ऋषिकृत्स्वर्षाः सहस्रणीथः पदवीः कवीनाम्। तृतीयं धाम महिषः सिषासन्त्सोमो विराजमनु राजति ष्टुप्॥२॥**

ऋषिजस्तै संस्कार भएको, ऋषित्व प्रदान गर्ने, स्तुत्य, ज्ञानदायी सोम स्वयं महान् छ। यसले तेस्रो धामरूपी स्वर्गलोकमा रहने तेजस्वी इन्द्रदेवलाई धेरै तेजसम्पन्न बनाउँछ।

**चमूषच्छ्येनः शकुनो विभृत्वा गोविन्दुर्द्रप्स आयुधानि बिभ्रत्। अपामूर्मिं सचमानः समुद्रं तुरीयं धाम महिषो विवक्ति॥३॥**

यो प्रशंसनीय, सबै खालका सामर्थ्यले युक्त, शक्तिमान्, समुद्रका छालजस्तै गतिमान् र गाईको दुधमा मिसाइने प्रवाहशील सोम चतुर्थ धामरूपी महलोकमा रहन्छ।

**एते सोमा अभि प्रियमिन्द्रस्य काममक्षरन्। वर्धन्तो अस्य वीर्यम्॥४॥**

इन्द्रदेवको सामर्थ्य बढाउने यस सोमले उनलाई प्रिय लाग्ने रसको वर्षा गराउँछ।

**पुनानासश्चमूषदो गच्छन्तो वायु मश्विना। ते नो धत्त सुवीर्यम्॥५॥**

हे शुद्ध सोमदेव ! वायु र अश्विनीकुमारसँगै हामीलाई वीरसुहाउँदो श्रेष्ठता प्रदान गर।

**इन्द्रस्य सोम राधसे पुनानो हार्दि चोदय। देवानां योनिमासदम्॥६॥**

हे पवित्र सोमदेव ! इन्द्रको आराधना गर्ने प्रेरणा हाम्रा हृदयमा उत्पन्न गर। हामी देवताका लागि सुहाउँदो यज्ञकर्म गर्नका लागि प्रस्तुत भएका छौँ।

**मृजन्ति त्वा दश क्षिपो हिन्वन्ति सप्त धीतयः। अनु विप्रा अमादिषुः॥७॥**

हे सोमदेव ! दस दिशाले तिमीलाई चोख्याउँछन्, सात धारण शक्तिले बढाउँछन् र विप्ररूपी सत्पुरुपले सन्तुष्ट गराउँछन्।

**देवेभ्यस्त्वा मदाय कं सृजानमति मेष्यः । सं गोभिर्वासयामसि ॥८॥**

हे विशुद्ध सुखदायी सोम ! तिमी देवतालाई आनन्द प्रदान गर्ने हुनाले तिमीलाई हामी गाईका दुधमा मिसाउँछौँ।

**पुनानः कलशेष्वा वस्त्राण्यरुषो हरिः । परि गव्यान्यव्यत ॥९॥**

शुद्ध भएर कलशमा रहने, हरियो आभा भएका सोमलाई गाईका दुधले धारण गर्दछ।

**मघोन आ पवस्व नो जहि विश्वा अप द्विषः । इन्दो सखायमा विश ॥१०॥**

हे सोमदेव ! हामीलाई धनऐश्वर्ययुक्त गराउन पवित्र तिमी होऊ, रिस गर्नेको नाश गर र मित्ररूपी इन्द्रदेवमा एकाकार होऊ।

**नृचक्षसं त्वा वयमिन्द्रपीतं स्वर्विदम् । भक्षीमहि प्रजामिषम् ॥११॥**

हे सोमदेव ! सबै प्राणीकै हेरचाह गर्ने सर्वज्ञ इन्द्रदेवले तिमीलाई पान गर्छन्। हामीलाई सन्तान, अन्न, बल र सद्‌बुद्धि देऊ।

**वृष्टिं दिवः परि स्रव द्युम्नं पृथिव्या अधि । सहो नः सोम पृत्सु धाः ॥१२॥**

हे सोमदेव ! तिमी आकाशबाट पृथिवीमा दिव्य पदार्थ वर्षा गराऊ। पृथ्वीमा पोषक रस उत्पन्न गर र हामीलाई सङ्घर्षको शक्ति प्रदान गर।

## इति प्रथमः खण्डः

पहिलो खण्ड समाप्त भयो

***

## द्वितीयः खण्डः

दोस्रो खण्ड

**सोमः पुनानो अर्षति सहस्रधारो अत्यविः । वायोरिन्द्रस्य निष्कृतम् ॥१॥**

हजारौँ धाराका रूपमा शोधक यन्त्रले शोधित सोम वायु र इन्द्रदेवले पान गर्नका लागि असल पात्रमा स्थिर हुन्छ।

**पवमानमवस्यवो विप्रमभि प्र गायत । सुष्वाणं देववीतये ॥२॥**

संरक्षणको कामना गर्ने हे याजक हो ! सबैलाई पवित्र गराउने, विशेष आनन्द प्रदान गर्ने, देवताले पान गर्न योग्य र प्रशोधित सोमलाई सबैले सम्मानपूर्वक स्तुति गर।

**पवन्ते वाजसातये सोमाः सहस्रपाजसः । गृणाना देववीतये ॥३॥**

अन्न प्रदान गरेर स्तुत्य, देवतासरिको, हजारौँ बल बढाउने सोमरस शोधित गरिँदै छ।

**उत नो वाजसातये पवस्व बृहतीरिषः । द्युमदिन्दो सुवीर्यम् ॥४॥**

हे सोमदेव ! जीवनसङ्ग्रामको सफलताका लागि हामीलाई असल अन्न प्रदान गर र तेजस्वी एवं सामर्थ्यशील बनाऊ।

**अत्या हियाना न हेतृभिरसृग्रं वाजसातये । वि वारमव्यमाशवः ॥५॥**

युद्धस्थलमा जाँदै गरेको अश्वभैँ प्रेरित सोम ऋत्विक्‌हरू तीव्र गतिले शोधित गर्दछन्।

**ते नः सहस्रिणं रयिं पवन्तामा सुवीर्यम् । स्वाना देवास इन्दवः ॥६॥**

पेलेर खस्दै गरेका दिव्य सोमरसले असङ्ख्य ऐश्वर्य र उत्तम सामर्थ्य प्रदान गरोस्।

**वाश्रा अर्षन्तीन्दवोऽभि वत्सं न मातरः। दधन्विरे गभस्त्योः ॥७॥**

बाछो खोज्न कराउँदै कुदेका गाईको जस्तै शब्द गरेर सोमरस कलशमा प्रवेश गर्दछ र त्यसैलाई ऋत्विक्हरू हातमा लिन्छन्।

**जुष्ट इन्द्राय मत्सरः पवमान कनिक्रदत्। विश्वा अप द्विषो जहि ॥८॥**

इन्द्रदेवलाई खुसी गर्ने हे सोम ! पवित्र भएर हल्ला गर्दै शत्रुको विकृति विनाश गर।

**अपघ्नन्तो अराव्णः पवमानाः स्वर्दृशः। योनावृतस्य सीदत ॥९॥**

हे सोम ! दान नदिने स्वार्थीलाई नाश गरेपछि तेजस्वी रूपमा यज्ञस्थलमा आएर बस।

## इति द्वितीयः खण्डः

दोस्रो खण्ड समाप्त भयो

***

## तृतीयः खण्डः

तेस्रो खण्ड

**सोमा असृग्रमिन्दवः सुता ऋतस्य धारया। इन्द्राय मधुमत्तमाः ॥१॥**

यज्ञका लागि शोधन गरेर बनाएको मिठो रसयुक्त सोम इन्द्रदेवका लागि प्रस्तुत गर्दछौं।

**अभि विप्रा अनूषत गावो वत्सं न धेनवः। इन्द्रं सोमस्य पीतये ॥२॥**

हे ऋत्विक् हो ! बाछो भेट्न गाई हतारिएझैं सोमपानका लागि इन्द्रदेवको स्तुति गर।

**मदच्युत्क्षेति सादने सिन्धोरूर्मा विपश्चित्। सोमो गौरी अधि श्रितः ॥३॥**

आनन्द दिने सोम यज्ञस्थलमा प्रतिष्ठित हुन्छ। यसले नदीको तरङ्गजस्तै वाणीलाई तरङ्गित गर्दछ।

**दिवो नाभा विचक्षणोऽव्यो वारे महीयते। सोमो यः सुक्रतुः कविः ॥४॥**

असल काम गर्ने र ज्ञानयुक्त सोम अन्तरिक्षको नाभीजस्तै चालनीबाट विशुद्ध भएर महत्त्वपूर्ण बनेको छ।

**यः सोमः कलशेष्वाँ अन्तः पवित्र आहितः। तमिन्दुः परि षस्वजे ॥५॥**

पवित्र भएर कलशमा बसेको सोमरसमा चन्द्रमाका असल गुणहरू सञ्चार हुन्छन्।

**प्र वाचमिन्दुरिष्यति समुद्रस्याधि विष्टपि। जिन्वन्कोशं मधुश्चुतम् ॥६॥**

मिठो सोमरस आकाशमा प्रवेश गरेर शब्द गर्दै कलशलाई पूरै रूपमा भराउँछ।

**नित्यस्तोत्रो वनस्पतिर्धीनामन्तः सबर्दुघाम्। हिन्वानो मानुषा युजा ॥७॥**

नित्य स्तुति गरिने, वनका स्वामी सोमदेव असल मानिसलाई सङ्गठित हुन प्रेरणा प्रदान गरून् र मधुरभाषी हार्दिक स्तुति स्वीकार गरून्।

**आ पवमान धारया रयिं सहस्रवर्चसम् । अस्मे इन्दो स्वाभुवम् ॥८॥**

हे विशुद्ध सोमदेव ! हामीलाई हजारौँ गुणसम्पन्न धाम, ऐश्वर्य र अधिकारयुक्त बनाऊ।

**अभि प्रिया दिवः कविर्विप्रः स धारया सुतः । सोमो हिन्वे परावति ॥९॥**

ज्ञानीलाई अन्तरिक्षबाट प्रेरित गराउँदै ज्ञानवर्द्धक सोम धाराका रूपमा यज्ञमा आएर प्रतिष्ठित हुन्छ।

## इति तृतीयः खण्डः

तस्रो खण्ड समाप्त भयो

***

## चतुर्थः खण्डः

चौथो खण्ड

**उत्ते शुष्मास ईरते सिन्धोरूर्मेरिव स्वनः । वाणस्य चोदया पविम् ॥१॥**

हे सोमदेव ! तिमी प्रवाहित हुँदा समुद्रको तरङ्गजस्तै ध्वनि हुन्छ। तिमी वाणीले उत्पन्न शब्दको जस्तै ध्वनि गर।

**प्रसवे त उदीरते तिस्रो वाचो मखस्युवः । यदव्य एषि सानवि ॥२॥**

हे सोमदेव ! तिमी प्रादुर्भाव हुँदा याकजहरू ऋक्, यजु र सामवेदका मन्त्रको गाउँछन्। अनि तिमी उच्च आसनमा विराजमान भएर संस्कारित हुनका लागि तत्पर हुन्छौ।

**अव्यो वारे परि प्रियं हरिं हिन्वन्त्यद्रिभिः । पवमानं मधुश्चुतम् ॥३॥**

ऋत्विक्हरू ढुङ्गाले कुटेर हरियो आभासम्पन्न सुन्दर, मिठो सोमरस चाल्नीले छान्छन्।

**आ पवस्व मदिन्तम पवित्रं धारया कवे । अर्कस्य योनिमासदम् ॥४॥**

हे परम आनन्ददायी सोमरस ! इन्द्रदेवलाई तृप्त गराउनका लागि तिमी शोधनयन्त्रबाट सफा धाराका रूपमा प्रवाहित होऊ।

**स पवस्व मदिन्तम गोभिरञ्जानो अक्तुभिः । एन्द्रस्य जठरं विश ॥५॥**

हे आनन्ददाता सोम ! तिमी गाईको पुष्टिकारक दुध आदिका मिश्रणमा छानिएर इन्द्रदेवले पान गर्नका लागि योग्य होऊ।

## इति चतुर्थः खण्डः

चौथो खण्ड समाप्त भयो

***

## पञ्चमः खण्डः

पाँचौं खण्ड

**अया वीती परि स्रव यस्त इन्दो मदेष्वा । अवाहन्नवतीर्नव ॥१॥**

हे सोमदेव ! इन्द्रदेवले सेवनार्थ तिमी कलशमा स्थित होऊ। तिम्रो रस युद्धमा शत्रुका सबै सहर नष्ट गर्नका लागि इन्द्रदेवलाई सामर्थ्य प्रदान गर्दछ।

**पुरः सद्य इत्थाधिये दिवोदासाय शम्बरम्। अध त्यं तुर्वशं यदुम् ॥२॥**

यज्ञ गर्ने दिवोदासका लागि इन्द्रदेवले सोम पिएर शम्बासुर, तुर्वश र यदुलाई मारे।

**परि णो अश्वमश्वविद्गोमदिन्दो हिरण्यवत्। क्षरा सहस्रिणीरिषः ॥३॥**

हे सोमदेव ! हामीलाई गाई, अश्व, सुवर्ण आदि ऐश्वर्य र मन परेको पोषक अन्न देऊ।

**अपघ्नन्पवते मृधोऽप सोमो अराव्णः। गच्छन्निन्द्रस्य निष्कृतम् ॥४॥**

यस सोमले शत्रु र दान नदिनेलाई मारिदिन्छ अनि छचल्किँदै इन्द्रदेवकहाँ जान्छ।

**महो नो राय आ भर पवमान जही मृधः। रास्वेन्दो वीरवद्यशः ॥५॥**

हे पवित्रकर्मा सोमदेव ! हामीलाई अनेकौँ साधन, पुत्र आदि र यश प्राप्त गराऊ। हाम्रा शत्रु मासिदेऊ।

**न त्वा शतं चन ह्रुतो राधो दित्सन्तमा मिनन्। यत्पुनानो मखस्यसे ॥६॥**

हे पवित्र गराउने सोमदेव ! यज्ञ गर्नेलाई ऐश्वर्य प्रदान गर्न खोज्दा तिमीलाई सयौँ शत्रुले पनि रोक्न सक्दैनन्।

**अया पवस्व धारया यया सूर्यमरोचयः। हिन्वानो मानुषीरपः ॥७॥**

हे सोमदेव ! जसका कारणले तिमी मानिसका लागि जलरूपी रस बढाउँछौ, जसबाट सूर्यदेवलाई प्रकाशित गर्दछौ उसै असल धारासँगै तिमी प्रवाहित होऊ।

**अयुक्त सूर एतशं पवमानो मनावधि। अन्तरिक्षेण यातवे ॥८॥**

पवित्र सोम चाहेकोजस्तो उचाइमा पुग्ने गति पाउनका लागि सङ्कल्पका साथ प्रयासरत याजकलाई सूर्यको अश्वजस्तै वेग प्रदान गर्न सक्दछ।

**उत त्या हरितो रथे सूरो अयुक्त यातवे। इन्दुरिन्द्र इति ब्रुवन् ॥९॥**

इन्द्रदेवको नाम उच्चारण गर्ने सोमले हरित वर्णका अश्वलाई सूर्यको रथजस्तै गरी दसै दिशामा जानका लागि नियोजित गर्दछ।

## इति पञ्चमः खण्डः

पाँचौँ खण्ड समाप्त भयो

***

## षष्ठः खण्डः

छैटौँ खण्ड

**अग्निं वो देवमग्निभिः सजोषा यजिष्ठं दूतमध्वरे कृणुध्वम्। यो मर्त्येषु निधुविर्ऋतावा तपुर्मूर्धा घृतान्नः पावकः ॥१॥**

हे देवताहरू हो ! अनेकौँ अग्निमध्येका पूज्य यज्ञाग्निलाई नै दूतका रूपमा नियुक्त गर। उनी देवता भए पनि मानिसका साथी हुन्, उनी यज्ञवान् वा सत्यवान् छन्, उनको आहार घिउ हो। तिनको तेज र ताप विकारनाशक हुनुका साथै पवित्रता प्रदायक छ।

**प्रोथदश्वो न यवसेऽविष्यन्यदा महः संवरणाद्व्यस्थात्। आदस्य वातो अनु वाति शोचिरध स्म ते व्रजनं कृष्णमस्ति ॥२॥**

हिल्लिने घोडाले घाँसमा चरेझैँ दावानल रुखले पेट भराउने गर्दछ। यस अवस्थामा वायुका प्रभावले कालो धुवाँ जतातिर जान्छ, अग्निदेवको मार्ग त्यतै हुन्छ।

**उद्यस्य ते नवजातस्य वृष्णोऽग्ने चरन्त्यजरा इधानाः। अच्छा द्यामरुषो धूम एषि सं दूतो अग्न ईयसे हि देवान् ॥३॥**

हे यज्ञका अग्निदेव ! तिम्रो नयाँ ज्वाला वर्षा गर्नमा समर्थ छ। हे प्रकाशित यज्ञका अग्निदेव ! तिमी नष्ट नहुने आफ्नो उर्जासँगै द्युलोक पुगेर देवतालाई सन्तुष्ट गर्दछौ।

**तमिन्द्रं वाजयामसि महे वृत्राय हन्तवे। स वृषा वृषभो भुवत् ॥४॥**

वृत्र नाश गर्नेलाई हामी प्रशंसा र स्तुति गर्दछौँ। ती दानदाता इन्द्रदेवले हामीलाई धनधान्यले भरिपूर्ण गराऊन्।

**इन्द्रः स दामने कृत ओजिष्ठः स बले हितः। द्युम्नी श्लोकी स सोम्यः ॥५॥**

दान दिन उत्पन्न भएका इन्द्रदेव बलवान् बन्नका लागि सोमपान गर्दछन्। प्रशंसनीय कार्य गर्ने इन्द्रदेव सोमपान गराउन योग्य छन्।

**गिरा वज्रो न सम्भृतः सबलो अनपच्युतः। ववक्ष उग्रो अस्तृतः ॥६॥**

वज्र हातमा लिने, स्तुतिले प्रशंसित, बलवान्, तेजस्वी र अपराजेय इन्द्रदेव साधकलाई ऐश्वर्य दिने इच्छा गर्दछन्।

## इति षष्ठः खण्डः

छैटौँ खण्ड समाप्त भयो

***

## सप्तमः खण्डः

सातौँ खण्ड

**अध्वर्यो अद्रिभिः सुतं सोमं पवित्र आ नय। पुनाहीन्द्राय पातवे ॥१॥**

हे अध्वर्यु हो ! इन्द्रले पिउने गरी ढुङ्गाले पेलेको सोम पवित्र गरेर भाँडानजिकै ल्याओ।

**तव त्य इन्दो अन्धसो देवा मधोर्व्याशत। पवमानस्य मरुतः ॥२॥**

हे सोमदेव ! तिम्रो आनन्दवर्द्धक मिठो अन्नरूपी रस देवता र मरुत्‌ले सेवन गर्दछन्।

**दिवः पीयूषमुत्तमं सोममिन्द्राय वज्रिणे। सुनोता मधुमत्तमम् ॥३॥**

हे याज्ञिक हो ! द्युलोकको अमृतजस्तै अत्यन्त मिठो सोमरस वज्रधारी इन्द्रदेवलाई प्रदान गर्नका लागि तयार गर।

**धर्ता दिवः पवते कृत्व्यो रसो दक्षो देवानामनुमाद्यो नृभिः। हरिः सृजानो अत्यो न सत्वभिर्वृथा पाजांसि कृणुषे नदीष्वा ॥४॥**

धारक शक्तिसम्पन्न, कर्मनिष्ठ, देवशक्ति संवर्द्धक, स्तोताबाट प्रशंसित, हरित सोम शोधित हुन्छ। यस्तो सोमरस बलवान् अश्वजस्तै सहजतासाथ आफैँ नदीमा मिसिन्छ।

**शूरो न धत्त आयुधा गभस्त्योः स्वः सिषासन्नथिरो गविष्टिषु। इन्द्रस्य शुष्ममीरयन्नपस्युभिरिन्दुर्हिन्वानो अज्यते मनीषिभिः ॥५॥**

हातमा शस्त्र लिएका, सरमाको जस्तै रथमा चढेका, गाईको रक्षा गर्ने, वीर र इन्द्रदेवको बल बढाउँदै यो दिव्य सोम ऋत्विक्हरूबाट प्रेरित भएर गाईको दुधसित मिसिन्छ।

**इन्द्रस्य सोम पवमान ऊर्मिणा तविष्यमाणो जठरेष्वा विश। प्र नः पिन्व विद्युदभ्रेव रोदसी धिया न वाजाँ उप मासि शश्वतः ॥६॥**

हे संस्कारित सोमदेव ! महान् सामर्थ्यवान् बनेर इन्द्रदेवका पेटमा पस। मेघलाई बर्सन प्रेरित गर्ने विद्युत्झैँ तिमी आकाश र पृथ्वीलाई फलदायी बनाऊ। गरेका कर्मका माध्यमबाट हाम्रा लागि अक्षय र पोषणयुक्त अन्न प्रदान गर।

**यदिन्द्र प्रागपागुदङ्न्यग्वा हूयसे नृभिः। सिमा पुरू नृषूतो अस्यानवेऽसि प्रशर्ध तुर्वशे ॥७॥**

हे इन्द्रदेव ! स्तोताहरू सहायताका लागि चारैतिरबाट तिमीलाई आह्वान गर्दछन्। शत्रुनाशक हे इन्द्रदेव ! अनु र तुर्वशले तिमीलाई प्रार्थनापूर्वक बोलाउँछन्।

**यद्वा रुमे रुशमे श्यावके कृप इन्द्र मादयसे सचा। कण्वासस्त्वा स्तोमेभिर्ब्रह्मवाहस इन्द्रा यच्छन्त्या गहि ॥८॥**

हे इन्द्रदेव ! रुम, रुशम, श्यावक र कृपले तिमीलाई प्रसन्न गर्दछन्। कण्वका वंशज ऋषिहरू विभिन्न स्तोत्रले प्रभावित गर्ने प्रयास गर्छन्। हे इन्द्रदेव ! तिमी यज्ञमा आऊ।

**उभयं शृणवच्च न इन्द्रो अर्वागिदं वचः। सत्राच्या मघवान्त्सोमपीतये धिया शविष्ठ आ गमत् ॥९॥**

धनवान् र बलवान् हे इन्द्रदेव ! हाम्रा दुवै किसिमका प्रार्थना नजिकै आएर सुन। सामूहिक उपासनाले प्रसन्न भएर तिमीहरू सोमपान गर्न यहाँ उपस्थित होओ।

**तं हि स्वराजं वृषभं तमोजसे धिषणे निष्टतक्षतुः। उतोपमानां प्रथमो नि षीदसि सोमकामं हि ते मनः ॥१०॥**

वर्षा गराउन सक्षम तेजस्वी इन्द्रदेवलाई आकाश र पृथ्वीले संस्कारित गरे। हे इन्द्रदेव ! तिमी उपमानहरूमा सर्वश्रेष्ठ छौ। सोमपानको इच्छाले यज्ञवेदीमा विराजमान हुन्छौ।

**इति सप्तमः खण्डः**

सातौँ खण्ड समाप्त भयो

***

## अष्टमः खण्डः

आठौँ खण्ड

**पवस्व देव आयुषगिन्द्रं गच्छतु ते मदः। वायुमा रोह धर्मणा ॥१॥**

हे दिव्य गुणले युक्त सोमदेव ! तिमी छानिनका लागि भाँडामा जाऊ। तिम्रो अनन्ददायी रस इन्द्रदेवलाई प्राप्त होस्। तिमी दिव्य रूपले वायुसित मिसिन पुग।

**पवमान नि तोशसे रयिं सोम श्रवाय्यम्। इन्दो समुद्रमा विश ॥२॥**

हे पवित्र सोमरस ! तिमी प्रशंसनीय ऐश्वर्यका लागि दुष्टलाई सताउँछौ। हामी यज्ञका कलशमा तिम्रो आह्वान गर्दछौँ।

**अपघ्नन्पवसे मृधः क्रतुवित्सोम मत्सरः। नुदस्वादेवयुं जनम् ॥३॥**

हे आनन्द प्रदायक, सत्ययज्ञका ज्ञाता सोमदेव ! विकृति विनाश गर्दै देवत्व विरोधीलाई तिमी विनाश गर।

**अभि नो वाजसातमं रयिमर्ष शतस्पृहम्। इन्दो सहस्रभर्णसं तुविद्युम्नं विभासहम् ॥४॥**

सयौँ मानिसबाट प्रशंसित, हजारौँको पोषक, विशेष ओजस्वी, बलवर्द्धक सोमरसले हामीलाई धन प्रदान गरोस्।

**वयं ते अस्य राधसो वसोर्वसो पुरुस्पृहः। नि नेदिष्ठतमा इषः स्याम सुम्ने ते अध्रिगो ॥५॥**

हे उत्तम आश्रय प्रदान गर्ने सोमदेवता ! सबैका तर्फबाट प्रशंसा प्राप्त गर्ने, सबैलाई पोषण प्रदान गर्ने तिमीहरूका विभूतिको निकटता हामी खोज्दछौँ। हे सूर्य रश्मिसँगै रहने गरेका सोमदेवता ! तिमीले प्रदान गरेका अन्न आदि पोषक पदार्थको उपयोग गरेर हामी सुखी हुन सकौँ।

**परि स्य स्वानो अक्षरदिन्दुरव्ये मदच्युतः। धारा य ऊर्ध्वो अध्वरे भ्राजा न याति गव्ययुः ॥६॥**

सूर्यरश्मिको कामना गर्ने, स्वाभाविक तेजयुक्त यो श्रेष्ठ सोम धाराका रूपमा यज्ञमा प्रयोग हुन्छ। याजकलाई आनन्दित गर्नका लागि प्राकृतिक ढङ्गले परिष्कृत हुन्छ।

**पवस्व सोम महान्त्समुद्रः पिता देवानां विश्वाभि धाम ॥७॥**

हे सोमदेव ! विस्तृत समुद्रजस्तै पोषण गर्ने तिमी देवताका सबै आवासस्थलरूपी पात्रमा विद्यमान रहन्छौ।

**शुक्रः पवस्व देवेभ्यः सोम दिवे पृथिव्यै शं च प्रजाभ्यः ॥८॥**

हे कान्तिमान् सोमदेव ! तिमी दिव्य गुणका लागि प्रवाहित होऊ। त्यसबाट आकाश, पृथ्वी र प्रजालाई सुख प्राप्त होस्।

**दिवो धर्तासि शुक्रः पीयूषः सत्ये विधर्मन्वाजी पवस्व ॥९॥**

हे सोमदेव ! तिमी तेजस्वी पेय र दिव्य गुणका धारक हौ। हे बलवान् सोम ! तिमी सत्यरूपी यज्ञकर्मका बीचमा परिष्कृत हुन्छौ।

**इति अष्टमः खण्डः**

आठौँ खण्ड समाप्त भयो

***

## नवमः खण्डः

नवौँ खण्ड

**प्रेष्ठं वो अतिथिं स्तुषे मित्रमिव प्रियम्। अग्ने रथं न वेद्यम् ॥१॥**

हे अग्निदेव ! उपासकको अभिलाषा पूरा गर्ने, सधैँ सबैमाथि कृपा गर्ने, मित्रजस्तो व्यवहार गर्ने तिमी हाम्रो प्रार्थनाले प्रसन्न होऊ।

**कविमिव प्रशस्यं यं देवास इति द्विता। नि मर्त्येष्वादधुः ॥२॥**

देवतागणले प्रशंसनीय ज्ञानीहरूको जस्तै गरेर गार्हपत्य र आहवनीय यी दुवै रूपले मानिसका बीचमा अग्निलाई स्थापित गराए।

**त्वं यविष्ठ दाशुषो नॄँः पाहि शृणुही गिरः। रक्षा तोकमुत त्मना ॥३॥**

सधैँ युवा रहने हे अग्निदेव ! तिमी दानीहरूको रक्षा गर्नका लागि स्तुतिमा ध्यान देऊ। आफ्ना पुत्रको रक्षाका लागि प्रयत्नशील होऊ।

**एन्द्र नो गधि प्रियः सत्राजिदगोह्यः। गिरिर्न विश्वतः पृथुः पतिर्दिवः ॥४॥**

सबैका प्रिय, शत्रु जित्ने, अपराजेय हे इन्द्रदेव ! तिमी पर्वतजस्तै विशाल, द्युलोकका अधिपति हौ, हामीसित आऊ।

**अभि हि सत्य सोमपा उभे बभूथ रोदसी। इन्द्रासि सुन्वतो वृधः पतिर्दिवः ॥५॥**

सत्यका पालक, सोमपान गर्ने हे इन्द्रदेव ! आकाश र पृथ्वी दुवैलाई आफ्ना प्रभावमा लिन समर्थ छौ। हे द्युलोकका स्वामी ! तिमी सोमयाग कर्तालाई उन्नति प्रदान गर्दछौ।

**त्वं हि शश्वतीनामिन्द्र दर्ता पुरामसि। हन्ता दस्योर्मनोर्वृधः पतिर्दिवः ॥६॥**

हे इन्द्रदेव ! तिमी दुष्टका अविनाशी पुर नाश गर्ने, अज्ञान मेटाउने, यज्ञकर्ता, मानिसको मनोबल बढाउने र प्रकाशलोकका स्वामी हौ।

**पुरां भिन्दुर्युवा कविरमितौजा अजायत। इन्द्रो विश्वस्य कर्मणो धर्ता वज्री पुरुष्टुतः ॥७॥**

शत्रुको सहर नष्ट गर्ने इन्द्रदेव सधैँका युवा, सबैका ज्ञाता, सबैभन्दा शक्तिशाली, शुभकर्मका आश्रय र कीर्तियुक्त भएर विविध गुणले सम्पन्न छन्।

**त्वं वलस्य गोमतोऽपावरद्रिवो बिलम्। त्वां देवा अबिभ्युषस्तुज्यमानास आविषुः ॥८॥**

हे वज्रधारी इन्द्रदेव ! तिमीले गाई चोर्ने असुरका व्यूह नष्ट गराइदियौ। असुरहरूबाट पराजित भएका देवताहरू तिमीसँग आएर सङ्गठित भए।

**इन्द्रमीशानमोजसाभि स्तोमैरनूषत। सहस्रं यस्य रातय उत वा सन्ति भूयसीः ॥९॥**

असङ्ख्य किसिमले दान गर्ने दानीहरू ओजबल र पराक्रम भएका कारण संसारका नेता मानिएका इन्द्रदेवलाई स्तोत्रले स्तुति गर्न थाले।

**इति नवमः खण्डः**

नवौँ खण्ड समाप्त भयो

***

**इति सामवेद संहिता नवमोऽध्यायः**

सामवेद संहिताको नवौँ अध्याय समाप्त भयो।

ॐ

भूर्भुवः स्वः तत्सवितुवरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# सामवेद संहिता

## दशमोऽध्यायः

**ऋषि—** पराशर शाक्त्य। शुनःशेप आजीगर्ति। असित काश्यप देवल। रहूगण आङ्गिरस। प्रियमेध आङ्गिरस। नृमेध आङ्गिरस। इध्मवाह दार्ढच्युत। पवित्र आङ्गिरस वसिष्ठ। वसिष्ठ मैत्रावरुणि। वत्स काण्व शतं वैखानस। सप्तर्षिगण। वसुभारद्वाज। भर्ग प्रागाथ। भरद्वाज बार्हस्पत्य। मनु आप्सव। अम्बरीष वार्षागिर ऋजिश्वा भारद्वाज। अग्निधिष्ण्य ऐश्वर अमहीयु आङ्गिरस। त्रिशोक काण्व। गोतम राहूगण। मधुच्छन्दा वैश्वामित्र।

**देवता—** पवमान सोम। पवमान अध्येता। अग्नि। इन्द्र। अग्नीन्द्र।

**छन्द—** त्रिष्टुप्। गायत्री। अनुष्टुप्। बार्हत प्रगाथ बृहती सतोबृहती। द्विपदा विराट् गायत्री। जगती उष्णिक्।

### प्रथमः खण्डः

पहिलो खण्ड

**अक्रान्त्समुद्रः प्रथमे विधर्मन् जनयन्प्रजा भुवनस्य गोपाः। वृषा पवित्रे अधि सानो अव्ये बृहत्सोमो वावृधे स्वानो अद्रिः ॥१॥**

जलयुक्त, समस्त भुवनको राजा, बलवर्द्धक, पेलेर निकालेको सोम सर्वप्रथम प्रजाको उत्साह बढाएर उनीहरूको उन्नति गर्दै सबैभन्दा महान् बन्यो।

**मत्सि वायुमिष्टये राधसे नो मत्सि मित्रावरुणा पूयमानः। मत्सि शर्धो मारुतं मत्सि देवान्मत्सि द्यावापृथिवी देव सोम ॥२॥**

हे दिव्य सोमदेव ! हामीलाई अन्न र धन प्राप्त गराउन वायुलाई खुसी गर। शोधित भएर मरुत्का सामर्थ्यले आकाश र पृथ्वीमा मित्र र वरुणको खुसी बढाइदेऊ।

**महत्तत्सोमो महिषश्चकारापां यद्गर्भोऽवृणीत देवान्। अदधादिन्द्रे पवमान ओजोऽजनयत्सूर्ये ज्योतिरिन्दुः ॥३॥**

महान् शक्तिशाली दिव्य सोमबाट महान् कार्य सम्पन्न हुन्छ। गर्भमा जल धारण गरेर देवतालाई पोषण प्रदान गर्ने उही हो। शुद्ध भएर उसैले इन्द्रदेवलाई सामर्थ्य प्रदान गर्दछ र उसैले सूर्यमा तेज स्थापित गर्दछ।

**एष देवो अमर्त्यः पर्णवीरिव दीयते। अभि द्रोणान्यासदम् ॥४॥**

अमर पदवी पाएका दिव्य सोमदेव गतिमान् चरोभैँ कलशमा वेगका साथ पस्दछन्।

**एष विप्रैरभिष्टुतोऽपो देवो वि गाहते। दधद्रत्नानि दाशुषे ॥५॥**

असल मानिसले प्रशंसा गर्ने दिव्य सोम हविदातालाई धनवैभव प्रदान गर्दै जलमा मिसिन्छ।

**एष विश्वानि वार्या शूरो यन्निव सत्वभिः । पवमानः सिषासति ॥६॥**
शोधित, बलयुक्त सोमले आफ्ना सामर्थ्यले उत्तम ऐश्वर्य प्राप्त गरेपछि समुचित वितरण होस् भन्ने इच्छा गर्दछ।

**एष देवो रथर्यति पवमानो दिशस्यति । आविष्कृणोति वग्वनुम् ॥७॥**
शोधित एवं दिव्य सोमदेव ध्वनि गर्दै यज्ञस्थलमा जाने उपयुक्त माध्यमको कामना गर्दछ र याजकले खोजेको कुरो प्रदान गर्न चाहन्छ।

**एष देवो विपन्युभिः पवमान ऋतायुभिः । हरिर्वाजाय मृज्यते ॥८॥**
शोधित सोमरसलाई उद्गाताहरूका स्तुतिले युद्धमा जान लागेका अश्वलाई झैँ सबै किसिमले सुशोभित गर्छ र मन्त्रशक्तिले अत्यधिक प्रभावउत्पादक बनाउँछ।

**एष देवो विपा कृतोऽति ह्वरांसि धावति । पवमानो अदाभ्यः ॥९॥**
औँलाले निचोरेर सफा गरिएको सोम स्वयं अदम्य रहेर शत्रुको दमन गर्दछ।

**एष दिवं वि धावति तिरो रजांसि धारया । पवमानः कनिक्रदत् ॥१०॥**
प्रशोधित भएर, शब्द गर्दै, धारो लागेर प्रकट भएको सोम शत्रु जितेर यज्ञका प्रभावले पुनः मास्तिर लाग्दछ।

**एष दिवं व्यासरत्तिरो रजांस्यस्पृतः । पवमानः स्वध्वरः ॥११॥**
उत्तम यज्ञ गराउने, प्रशोधित र दिव्य सोम शत्रु पराजित गर्न समर्थ छ र यस यज्ञबाट दिव्यलोक जान्छन्।

**एष प्रत्नेन जन्मना देवो देवेभ्यः सुतः । हरिः पवित्रे अर्षति ॥१२॥**
चलनअनुसार शुद्ध बनाएको हरियो आभायुक्त सोम देवताले पान गर्नका लागि छानेर ठिक्क पारिन्छ।

**एष उ स्य पुरुव्रतो जज्ञानो जनयन्निषः । धारया पवते सुतः ॥१३॥**
विशिष्ट कार्यक्षमताको जनक र पोषिलो अन्न उब्जाउने सोम आफ्ना प्रवाहका क्रममा स्वाभाविक रूपले शुद्ध हुन्छ।

## इति प्रमथः खण्डः
पहिलो खण्ड समाप्त भयो

***

## द्वितीयः खण्डः
दोस्रो खण्ड

**एष धिया यात्यण्व्या शूरो रथेभिराशुभिः । गच्छन्निन्द्रस्य निष्कृतम् ॥१॥**
औँलाले निचोरिएको शक्तिशाली यो सोम रथबाट तीव्र गतिमा विवेकपूर्वक इन्द्रदेवका नजिकमा पुग्दछ।

**एष पुरू धियायते बृहते देवातातये । यत्रामृतास आशत ॥२॥**
देवताहरूबाट अधिष्ठित, असल सोम यज्ञस्थलमा असङ्ख्य कर्महरू स्वयं सम्पन्न गर्ने अभिलाषा भएको हुन्छ।

**एतं मृजन्ति मर्ज्यमुप द्रोणेष्वायवः । प्रचक्राणं महीरिषः ॥३॥**
रसयुक्त अन्न उत्पादक, शोधित, सोम ऋत्विक्ले केलाएर कलशमा एकत्र गर्दछन्।

**एष हितो विं नीयतेऽन्तः शुभ्रावता पथा । यदी तुञ्जन्ति भूर्णयः ॥४॥**
हविष्यान्नका रूपमा प्रयुक्त सोम यज्ञस्थलमा ल्याइन्छ र त्यहाँबाट अध्वर्युहरूले केलाएर देवतालाई चढाउँछन्।

**एष रुक्मिभिरीयते वाजी शुभ्रेभिरंशुभिः । पतिः सिन्धूनां भवन् ॥५॥**
सेतो रश्मियुक्त, रसको अधिपति, प्रवाहमान, शक्तिशाली सोम वेगले प्रवाहित भएर उपासकका नजिकै पुग्दछ।

**एष शृङ्गाणि दोधुवच्छिशीते यूथ्योऽवृषा । नृम्णा दधान ओजसा ॥६॥**
बलिया साँढेले पशुका बथानमा बल देखाएभैँ ऐश्वर्यशाली सोमले सामर्थ्य प्रकट गर्छ।

**एष वसूनि पिब्दना परुषा ययिवाँ अति । अव शादेषु गच्छति ॥७॥**
आफ्ना सामर्थ्यले दुष्टलाई दुःख दिँदै यस सोमले अनुशासित गराउँछ र हिंस्रकको विनाश गर्दछ।

**एतमुत्यं दश क्षिपो हरिं हिन्वन्ति यातवे । स्वायुधं मदिन्तमम् ॥८॥**
असल आनन्ददायी शक्ति धारण गर्ने हरियो आभायुक्त सोम दस औँला र सात ऋत्विक्ले निचोरेपछि शोधित हुन्छ।

## इति द्वितीयः खण्डः

दोस्रो खण्ड समाप्त भयो

***

## तृतीयः खण्डः

तेस्रो खण्ड

**एष उ स्य वृषा रथोऽव्या वारेभिरव्यत । गच्छन् वाजं सहस्रिणम् ॥१॥**
रथजस्तै वेगवान्, अभीष्ट प्रदायक यो सोम चाल्नीले कलशमा छानिन्छ।

**एतं त्रितस्य योषणो हरिं हिन्वन्त्यद्रिभिः । इन्दुमिन्द्राय पीतये ॥२॥**
इन्द्रदेवले प्रयोग गर्ने यो हरियो आभासम्पन्न सोम तीन किसिमले पेल्ने गरिन्छ।

**एष स्य मानुषीष्वा श्येनो न विक्षु सीदति । गच्छञ्जारो न योषितम् ॥३॥**
प्रेमीप्रेमिका आपसमा भेट गर्नका लागि कुदेभैँ वा बाज पक्षी सिकारमा कुदेभैँ यो सोम मानवका बीचमा शीघ्रतापूर्वक पुगेर प्रतिष्ठित हुन्छ।

**एष स्य मद्यो रसोऽव चष्टे दिवः शिशुः । य इन्दुर्वारमाविशत् ॥४॥**
द्युलोकमा उत्पन्न भएको आनन्दवर्द्धक सोम सबैलाई हेर्दै चाल्नीले शुद्ध हुन्छ।

**एष स्य पीतये सुतो हरिरर्षति धर्णसिः । क्रन्दन्योनिमभि प्रियम् ॥५॥**
सबैलाई धारण गर्ने अविनाशी सोम देवताले पिउनका लागि तयार भएको छ। यो ध्वनि गर्दै आफ्नो प्रिय निवासस्थान कलशमा प्रवेश गर्दछ।

**एतं त्यं हरितो दश मर्मृज्यन्ते अपस्युवः। याभिर्मदाय शुम्भते ॥६॥**
इन्द्रदेवलाई प्रसन्न गर्ने यज्ञमा प्रयोग गर्नका निम्ति दस औँलाले सोम शोधित गर्दछन्।

## इति तृतीयः खण्डः
तेस्रो खण्ड समाप्त भयो

***

## चतुर्थः खण्डः
चौथो खण्ड

**एष वाजी हितो नृभिर्विश्वविन्मनसस्पतिः। अव्यं वारं वि धावति ॥१॥**
सर्वज्ञाता, मनका अधिपति, बलशाली सोमलाई यज्ञकर्ताले शुद्ध गरेपछि कलशमा प्रतिष्ठित गर्दछन्।

**एष पवित्रे अक्षरत् सोमो देवेभ्यः सुतः। विश्वा धामान्याविशन् ॥२॥**
देवताहरूका निमित्त उत्पन्न भएको सोम शुद्ध भएर देवताका शरीरमा व्याप्त हुन्छ।

**एष देवः शुभायतेऽधि योनावमर्त्यः। वृत्रहा देववीतमः ॥३॥**
देवताको प्रिय, देवत्व बढाउने, अविनाशी, शत्रुसंहारक सोम शोभायुक्त कलशमा छ।

**एष वृषा कनिक्रदद्दशभिर्जामिभिर्यतः। अभि द्रोणानि धावति ॥४॥**
दस औँलाले निचोरेको बलवर्द्धक सोम ठूलो शब्दका साथ कलशमा पस्दछ।

**एष सूर्यमरोचयत् पवमानो अधि द्यवि। पवित्रे मत्सरो मदः ॥५॥**
सर्वद्रष्टा सोमरस विश्वका ज्ञाता हो उसले सबै ठाउँ र सूर्यदेवलाई प्रकाशित गर्दछ।

**एष सूर्येण हासते संवसानो विवस्वता। पतिर्वाचो अदाभ्यः ॥६॥**
पवित्र, आनन्द प्रदान गर्ने र प्रसन्नता प्रदान गर्ने सोमलाई पञ्चतत्त्वमा मिसाउनका लागि छोडिएको छ।

## इति चतुर्थः खण्डः
चौथो खण्ड समाप्त भयो

***

## पञ्चमः खण्डः
पाँचौँ खण्ड

**एष कविरभिष्टुतः पवित्रे अधि तोशते। पुनानो घ्नन्नप द्विषः ॥१॥**
ज्ञानी र कविले स्तुति गर्ने, शोधित, विकारनाशक सोम तृप्ति प्रदान गर्ने खालको छ।

**एष इन्द्राय वायवे स्वर्जित्परि षिच्यते। पवित्रे दक्षसाधनः ॥२॥**
शक्तिवर्द्धक र स्वर्गीय सुख आफ्ना अधिकारमा राख्ने दिव्य सोमरस अन्तरिक्षमा छानिएर इन्द्रदेव र वायुका लागि तल आउँछ।

एष नृभिर्वि नीयते दिवो मूर्धा वृषा सुतः। सोमो वनेषु विश्ववित् ॥३॥

द्युलोकका उच्च भागबाट बर्सिने बलवान् सोम वनका विषयमा सबै जान्दछ। पेलेर तयार भएपछि अगुवा मानिसले ल्याउँछन्।

एष गव्युरचिक्रदत् पवमानो हिरण्ययुः। इन्दुः सत्राजिदस्तृतः ॥४॥

द्युलोकमा प्रतिष्ठित, शक्तिवर्द्धक, रसका रूपमा रहने, विश्वले चिनेका सोमलाई वनका माध्यमबाट नै मानिसले प्राप्त तथा प्रयोग गर्दछन्।

एष शुष्म्यसिष्यददन्तरिक्षे वृषा हरिः। पुनान इन्दुरिन्द्रमा ॥५॥

अन्तरिक्षमा वर्षणशील, बलवर्द्धक हरियो आभायुक्त सोमरस तल आएपछि पवित्र भएर इन्द्रदेवलाई प्रदान गरिन्छ।

एष शुष्म्यदाभ्यः सोमः पुनानो अर्षति। देवावीरघशंसहा ॥६॥

देवताको रक्षक, पापीको संहारक, अविनाशी, शोधित, बलयुक्त सोम कलशमा पस्छ।

## इति पञ्चमः खण्डः

पाँचौँ खण्ड समाप्त भयो

***

## षष्ठः खण्डः

छैटौँ खण्ड

स सुतः पीतये वृषा सोमः पवित्रे अर्षति। विघ्नन्रक्षांसि देवयुः ॥१॥

दिव्य गुणयुक्त, इन्द्र आदि देवताका लागि तयार गरिएको र खोजेको पूरा गराउने सोम विकृति नाश गराउँदै चाल्ने यन्त्रबाट झर्न थाल्छ।

स पवित्रे विचक्षणो हरिरर्षति धर्णसिः। अभि योनिं कनिक्रदत् ॥२॥

सबैको संरक्षक, सबैको धारक, दुष्टसंहारक, हरियो आभाले सम्पन्न सोम छान्नेबाट पवित्र भएर शब्दसँगै कलशमा पुग्दछ।

स वाजी रोचना दिवः पवमानो वि धावति। रक्षोहा वारमव्ययम् ॥३॥

द्युलोकमा प्रकाशमान, सामर्थ्यवान्, दुष्टसंहारक, शोधित, दिव्य सोम अविरल रूपले प्रवाहित हुन्छ।

स त्रितस्याधि सानवि पवमानो अरोचयत्। जामिभिः सूर्यं सह ॥४॥

त्रित यज्ञमा संस्कारित सोमले आफ्ना महान् तेजले सूर्यदेवलाई प्रकाशित गर्दछ।

स वृत्रहा वृषा सुतो वरिवोविददाभ्यः। सोमो वाजमिवासरत् ॥५॥

शत्रुको नाश गर्ने बलवर्द्धक, पेलेर निकालिएको, धन प्रदान गर्ने सोम अश्वजस्तै वेगले कलशमा प्रवेश गर्दछ।

स देवः कविनेषितोऽभि द्रोणानि धावति। इन्दुरिन्द्राय मंहयन् ॥६॥

द्युलोकमा प्रकाशमान् सोम याजकबाट प्रभावित भएपछि इन्द्र आदि देवताको महत्त्व बढाउनका लागि वेगपूर्वक कलशमा प्रवेश गर्दछ।

## इति षष्ठः खण्डः

छैटौं खण्ड समाप्त भयो

***

## सप्तमः खण्डः

सातौं खण्ड

यः पावमानीरध्येत्यृषिभिः सम्भृतं रसम्। सर्वं स पूतमश्नाति स्वदितं मातरश्विना ॥१॥

ऋषिहरूले सँगालेका जीवनसूत्रमा रस प्रदान गर्ने, पवित्र गराउने सूक्त पाठ गर्ने साधक यज्ञका प्रभावले वायुदेवले सुखपूर्वक स्वीकार गरेको सबै पवित्र अन्न सेवन गर्दछन्।

पावमानीर्यो अध्येत्यृषिभिः सम्भृतं रसम्। तस्मै सरस्वती दुहे क्षीरं सर्पिर्मधूदकम् ॥२॥

ऋषिबाट प्रणीत वेदका ऋचाको अध्ययन जसले गर्दछ, उसका लागि सरस्वतीले दुध, घिउ, महजस्ता तत्त्वहरू उपलब्ध गराउँछिन्।

पवमानीः स्वस्त्ययनीः सुदुघा हि घृतश्चुतः। ऋषिभिः संभृतो रसो ब्राह्मणेष्वमृतं हितम् ॥३॥

ऋषिहरूले पवित्र बनाउनका लागि सम्पादन गरेका पावमानी ऋचाहरू कल्याणकारक, उत्तम फलदायक र स्नेहवर्षक छन्। वेदपाठी ब्राह्मणका बीचमा उनीहरूले मानौं हितकारी अमृत राखिदिएको जस्तो छ।

पावमानीर्दधन्तु न इमं लोकमथो अमुम्। कामान्त्समर्धयन्तु नो देवीर्देवैः समाहृताः ॥४॥

देवताहरूले सम्पादन गरेका पावमानी पवित्रकारक ऋचाहरूले हामीलाई यो लोक र परलोकमा सुखी बनाऊन् र हाम्रो अभीष्ट मनोरथ सफल होस्।

येन देवाः पवित्रेणात्मानं पुनते सदा। तेन सहस्रधारेण पावमानीः पुनन्तु नः ॥५॥

देवताहरू आफूलाई पवित्र गराउने जुन साधनको प्रयोग गर्दछन्, ती हजारौं किसिमका साधनहरूले पवित्र गराउने यी ऋचाहरू नै हुन् र यिनले हामीलाई पनि पवित्र गराऊन्।

**पावमानीः स्वस्त्ययनीस्ताभिर्गच्छति नान्दनम्। पुण्याँश्च भक्षान्भक्षयत्यमृतत्वं च गच्छति ॥६॥**

पवित्रता प्रदान गर्ने र कल्याणकारी ऋचाहरूले प्रेरित भएर साधकले आनन्दको स्थिति प्राप्त गर्दछन्। उनीहरूले पुण्यले आर्जन गरेको पवित्र अन्न खान्छन् र अमरता प्राप्त गर्दछन्।

## इति सप्तमः खण्डः

सातौँ खण्ड समाप्त भयो

***

## अष्टमः खण्डः

आठौँ खण्ड

**अगन्म महा नमसा यविष्ठं यो दीदाय समिद्धः स्वे दुरोणे। चित्रभानुं रोदसी अन्तरुर्वी स्वाहुतं विश्वतः प्रत्यञ्चम् ॥१॥**

आफ्ना स्थानमा प्रदीप्त अग्निदेव आकाश र पृथ्वीका मध्य भागमा विशेष रूपले दीप्तिमान् भएका छन्। उत्तम आहुतिले युक्त, सर्वत्र व्याप्त, चिरयुवा अग्निदेवलाई श्रद्धापूर्वक नमस्कार गर्दै हामी उनैको आश्रय प्राप्त गर्दछौँ।

**स मह्ना विश्वा दुरितानि साह्वानग्निः ष्टवे दम आ जातवेदाः। स नो रक्षिषद् दुरितादवद्यादस्मान्गृणत उत नो मघोनः ॥२॥**

आफ्ना महान् तेजले समस्त पाप नष्ट गर्ने, ज्ञानरूपी प्रकाश विस्तार गराउने अग्निदेव यज्ञशालामा प्रतिष्ठित हुन्छन्। स्तुत्य अग्निदेव हामीलाई दोषपूर्ण र निन्दित कर्मबाट जोगाउँछन् र आहुति स्वीकार गरेर हाम्रो योगक्षेम वहन गर्दछन्।

**त्वं वरुण उत मित्रो अग्ने त्वां वर्धन्ति मतिभिर्वसिष्ठाः। त्वे वसु सुषणनानि सन्तु यूयं पात स्वस्तिभिः सदा नः ॥३॥**

हे अग्निदेव ! तिमी कामना पूरा गर्ने वरुणका रूप र स्नेहपूर्वक सहयोग गर्ने मित्रका रूप हौ। ऋत्विक्‌हरू विशिष्ट एवं श्रेष्ठ स्तुतिले तिमीलाई गौरवान्वित गराउँछन्। तिमी असल धन र कल्याणकारी साधनले हाम्रो रक्षा गर।

**महाँ इन्द्रो य ओजसा पर्जन्यो वृष्टिमाँ इव। स्तोमैर्वत्सस्य वावृधे ॥४॥**

जल वर्षा गराउने मेघजस्तै महान् र तेजस्वी इन्द्रदेव आफ्ना प्रियपात्रको स्तुतिले समृद्ध भएर व्यापक रूप ग्रहण गर्दछन्।

**कण्वा इन्द्रं यदक्रत स्तोमैर्यज्ञस्य साधनम्। जामि ब्रुवत आयुधा ॥५॥**

कण्ववंशीय ऋषिहरूले स्तुतिका माध्यमबाट इन्द्रदेवलाई यज्ञका साधक बनाउँदा शस्त्रको आवश्यकता नै पर्दैन भन्ने गरिन्छ।

**प्रजामृतस्य पिप्रतः प्र यद्भरन्त वह्नयः। विप्रा ऋतस्य वाहसा ॥६॥**

आकाश मार्गबाट गमन गर्न सक्षम अश्वले यज्ञका लागि तत्पर इन्द्रदेलाई वेगपूर्वक ल्याउँदा उद्‌गाताहरू यज्ञमा प्रयुक्त हुने मन्त्रले उनै इन्द्रदेवको स्तुति गर्दछन्।

## इति अष्टमः खण्डः

आठौँ खण्ड समाप्त भयो

***

## नवमः खण्डः

नवौँ खण्ड

**पवमानस्य जिघ्नतो हरेश्चन्द्रा असृक्षत। जीरा अजिरशोचिषः ॥१॥**

शत्रुविनाशक, सर्वत्र गमनशील, तेजोमय हरियो आभासम्पन्न सोमको आनन्ददायक धारा प्रवाहित हुन्छ।

**पवमानो रथीतमः शुभ्रेभिः शुभ्रशस्तमः। हरिश्चन्द्रो मरुद्गणः ॥२॥**

उच्च स्थानमा सुशोभित, शुभ्र तेजले कान्तिमान, हरियो आभाले युक्त सोम मरुत्‌हरूका सहायताले पुष्ट हुँदै सबैलाई आनन्दित गराउँछ।

**पवमान व्यश्नुहि रश्मिभिर्वाजसातमः। दधत्स्तोत्रे सुवीर्यम् ॥३॥**

हे सोमदेव ! असङ्ख्य किसिमका अन्न र सामर्थ्य प्रदान गर्ने तिमी स्तोतालाई असल पुत्र र ऐश्वर्य प्रदान गर्दछौ।

**परीतो षिञ्चता सुतं सोमो य उत्तमं हविः। दधन्वाँ यो नर्यो अप्स्वाऽन्तरा सुषाव सोममद्रिभिः ॥४॥**

हे ऋत्विक् हो ! मानिसको हितैषि, ढुङ्गामा पेलिएको, जल मिसिएको सोम देवताको उत्तम हवि हो।

**नूनं पुनानोऽविभिः परि स्रवादब्धः सुरभिंतरः। सुते चित्त्वाप्सु मदामो अंधसा श्रीणन्तो गोभिरुत्तरम् ॥५॥**

अविनाशी, अति सुगन्धित, शोधित हुने हे सोमदेव ! छानिएपछि तिमीलाई अन्न आदि र गाईका दुधसित मिसाइन्छ। तिमीलाई जलमा मिसाएर सेवन योग्य बनाइन्छ।

**परि स्वानश्चक्षसे देवमादनः क्रतुरिन्दुर्विचक्षणः ॥६॥**

देवताको आनन्द बढाउने, यज्ञको साधनरूप, ज्ञानसम्पन्न, तेजस्वी सोम सबैले हेर्नका लागि कलशमा रहोस्।

**असावि सोमो अरुषो वृषा हरी राजेव दस्मो अभि गा अचिक्रदत्। पुनानो वारमत्येष्यव्ययं श्येनो न योनिं घृतवन्तमासदम् ॥७॥**

ओजस्वी, शक्तिवर्द्धक, हरियो वर्णको, सम्राट्भैँ सौन्दर्ययुक्त सोमरस निस्कँदै छ। गाईको दुध मिसाएपछि सोम ध्वनि गर्दै पवित्र भएर चाल्नीबाट छानेर तयार हुन्छ। त्यसपछि श्येनपक्षीभैँ पानीका भाँडामा स्थित हुन्छ।

**पर्जन्यः पिता महिषस्य पर्णिनो नाभा पृथिव्या गिरिषु क्षयं दधे। स्वसार आपो अभि गा उतासरन्त्सं ग्रावभिर्वसते वीते अध्वरे ॥८॥**

पानी बर्साउने बादल ठूला पात हुने सोमको पिता हो। सोम पृथ्वीका केन्द्रस्थलमा रहने पर्वतका निवासी हो। सोम गाईको दुध, पानी र स्तुति पाएर यज्ञस्थलमा रहन्छ।

**कविर्वेधस्या पर्येषि माहिनमत्यो न मृष्टो अभि वाजमर्षसि। अपसेधन्दुरिता सोम नो मृड घृता वसानः परि यासि निर्णिजम् ॥९॥**

हे सोमदेव ! यज्ञको इच्छा हुँदा जलयुक्त भएर चाल्नीले शोधित भएपछि युद्धस्थलमा जाने अश्वजस्तै वेगले आएर अडिन्छौ। हे सोमदेव ! हामीलाई दुष्प्रवृत्तिबाट टाढा राखेर सुखी बनाऊ।

## इति नवमः खण्डः

नवौँ खण्ड समाप्त भयो

***

## दशमः खण्डः

दसौँ खण्ड

**श्रायन्त इव सूर्यं विश्वेदिन्द्रस्य भक्षत। वसूनि जातो जनिमान्योजसा प्रति भागं न दीधिमः ॥१॥**

सूर्यको आश्रयमा किरण रहेभैँ इन्द्रदेव सम्पूर्ण संसारका आश्रयदाता हुन्। पिताबाट पुत्रले पाउने धनको भागजस्तै इन्द्रदेवसित हामी आफ्ना भागको कामना गर्दछौँ। किनभने जन्म लिएका र जन्म लिनेहरूलाई उनैले आआफ्नो भाग प्रदान गर्दछन्।

**अलर्षिरातिं वसुदामुप स्तुहि भद्रा इन्द्रस्य रातयः। यो अस्य कामं विधतो न रोषति मनो दानाय चोदयन् ॥२॥**

हे स्तोता हो ! सात्विक पुरुषलाई धन आदि दान गर्ने इन्द्रदेवको स्तुति गर। किनभने यिनको दान कल्याणकारी र प्रेरणा प्रदान गर्ने हुन्छ। इन्द्रदेव आफ्ना मनको अनुकूल फल दिनका लागि प्रेरणा दिँदा उपासकहरूको कामना नष्ट गर्दैनन्।

**यत इन्द्र भयामहे ततो नो अभयं कृधि। मघवञ्छग्धि तव तन्न ऊतये वि द्विषो वि मृधो जहि ॥३॥**

हे इन्द्रदेव ! हामी डराएका छौँ। हामीलाई भयमुक्त गराऊ। हे धनवान् इन्द्रदेव ! तिमी सर्वशक्तिमान् छौ, त्यसैले आफ्ना सामर्थ्यले हाम्रा शत्रु तथा हिंस्रक वृत्ति हुनेलाई नष्ट गरेर हाम्रो संरक्षण गर।

त्वं हि राधस्पते राधसो महः क्षयस्यासि विधर्ता। तं त्वा वयं मघवन्निन्द्र गिर्वणः सुतावन्तो हवामहे ॥४॥

हे ऐश्वर्यशाली इन्द्रदेव ! हामीलाई दिनका लागि तिमी असङ्ख्य धन लिने गर्दछौ। हे स्तुति गर्न योग्य धनवान् ! शुद्ध सोमरस आस्वादन गर्नका लागि हामी साधकहरू तिमीलाई बोलाउँछौँ।

## इति दशमः खण्डः

दसौँ खण्ड समाप्त भयो

***

## एकादशः खण्डः

एघारौँ खण्ड

**त्वं सोमासि धारयुर्मन्द्र ओजिष्ठो अध्वरे। पवस्व मंहयद्रयिः ॥१॥**

हे परम सुखदायक, सामर्थ्यवान् सोमदेव ! उत्तम यज्ञमा आफ्नो धारा ऐश्वर्ययुक्त गर। धन र बल प्रदायक हे सोमदेव ! तिमी कलशमा शुद्ध होऊ।

**त्वं सुतो मदिन्तमो दधन्वान्मत्सरिन्तमः। इन्दु सत्राजिदस्तृतः ॥२॥**

हे सोमदेव ! तिम्रो रस याजकभित्र बढ्दछ। यजमानलाई धन र आनन्द प्रदान गर्ने तिमी इन्द्रदेवलाई पनि आनन्दयुक्त होऊ।

**त्वं सुष्वाणो अद्रिभिरभ्यर्ष कनिक्रदत्। द्युमन्तं शुष्ममा भर ॥३॥**

हे सोम ! ढुङ्गाले कुटेर निकालिएको तिम्रो रस घोषणा गरेझैँ गरी हामीलाई तेजयुक्त पौष्टिक अन्न प्रदान गरोस्।

**पवस्व देववीतय इन्दो धाराभिरोजसा। आ कलशं मधुमान्त्सोम नः सदः ॥४॥**

हे सोमदेव ! देवताले सेवन गर्नका लागि वेगपूर्वक धारासँगै कलशमा प्रवाहित होऊ। आनन्ददायक हे सोमदेव ! हाम्रा यस कलशमा आएर तिमी स्थित होऊ।

**तव द्रप्सा उदप्रुत इन्द्रं मदाय वावृधुः। त्वां देवासो अमृताय कं पपुः ॥५॥**

जलमा मिसिने तिम्रा रसले इन्द्रदेवलाई आनन्द र यश बढाउँछ। देवता अमरत्व प्राप्त गर्न सोमपान गर्दछन्।

**आ नः सुतास इन्दवः पुनाना धावता रयिम्। वृष्टिद्यावो रीत्यापः स्वर्विदः ॥६॥**

आकाशबाट प्राणदायी वर्षा गराउने, शोधित रसरूपी हे दिव्य सोम ! ऐश्वर्य प्रदान गर।

**परि त्यं हर्यतं हरिं बभ्रुं पुनन्ति वारेण। यो देवान्विश्वाँ इत्परि मदेन सह गच्छति ॥७॥**

मनमोहक तथा सुन्दर सोमलाई जलरूपी चाल्नीले पवित्र बनाउँछ। यो सोम इन्द्र आदि देवताका नजिक आफ्नो हर्षप्रदायक गुणसँगै जान्छ।

**द्वियं पञ्च स्वयशसं सखायो अद्रिसं हतम्। प्रियमिन्द्रस्य काम्यं प्रस्नापयन्त ऊर्मयः ॥८॥**

ढुङ्गाले पेलेर निकालेको, कीर्तिवान्, सबैको इष्ट र इन्द्रदेवका लागि प्रिय सोमलाई दस औँलाले राम्ररी शोधित गर्दछन् र जलसित मिसाउँछन्।

**इन्द्राय सोम पातवे वृत्रघ्ने परि षिच्यसे। नरे च दक्षिणावते वीराय सदनासदे ॥९॥**

हे सोमदेव ! दुष्टसंहारक इन्द्रदेवले पान गर्नका लागि, यज्ञमा दक्षिणा दिने वीरका लागि र यज्ञ गर्ने यजमानका लागि तिमी पात्रमा प्रवाहित भएर स्थिर होऊ।

**पवस्व सोम महे दक्षायाश्वो न निक्तो वाजी धनाय ॥१०॥**

हे सोमदेव ! स्वच्छ, शक्तिवर्द्धक भएर सधिएको अश्वझैँ बल र ऐश्वर्य प्रदान गर्नका लागि पात्रमा स्थिर होऊ।

**प्र ते सोतारो रसं मदाय पुनन्ति सोमं महे द्युम्नाय ॥११॥**

हे सोमदेव ! साधकहरू तिम्रो रस हर्ष बढाउनका लागि शोधित गर्दछन्। तिमीलाई हामी दिव्य तेजरूपी ज्ञानका लागि शोधन गर्दछौँ।

**शिशुं जज्ञानं हरिं मृजन्ति पवित्रे सोमं देवेभ्य इन्दुम् ॥१२॥**

नवजात शिशु सफा गरिएझैँ ऋत्विक्हरू हरियो आभासम्पन्न सोमलाई देवताका लागि चाल्नीले शोधन गर्दछन्।

**उपो षु जातमप्तुरं गोभिर्भङ्गं परिष्कृतम्। इन्दुं देवा अयासिषुः ॥१३॥**

शत्रुसंहार गर्ने, राम्ररी तयार, जल र गाईका दुधमा मिसिएको यो सोमरस देवतालाई सन्तुष्ट गर्न सफल होस्।

**तमिद्वर्धन्तु नो गिरो वत्सं संशिश्वरीरिव। य इन्द्रस्य हृदंसनिः ॥१४॥**

हाम्रा बोलीले इन्द्रदेवका अत्यन्त प्रिय सोमको स्तुति गरोस्। बालकलाई आमाले आफ्ना दुधले पोसेझैँ हाम्रा स्तुतिले सोमको यश बढाओस्।

**अर्षा नः सोम शं गवे धुक्षस्व पिप्युषीमिषम्। वर्धा समुद्रमुक्थ्यम् ॥१५॥**

स्तुति गर्न योग्य हे सोमदेव ! हाम्रा गाईलाई सुख प्रदान गर्ने, हाम्रो घर पौष्टिक अन्नले भर्ने तिमी हौ। जलमा मिसिएर सुपात्रमा स्थिर होऊ।

**इति एकादशः खण्डः**

एघारौँ खण्ड समाप्त भयो

***

## द्वादशः खण्डः

बाह्रौँ खण्ड

**आ घा ये अग्निमिन्धते स्तृणन्ति बर्हिरानुषक्। येषामिन्द्रो युवा सखा ॥१॥**

यज्ञाग्नि प्रज्वलित गराउने याजक आफ्ना मित्र चिरयुवा इन्द्रदेवलाई यज्ञशालामा पवित्र आसन प्रदान गर्दछन्।

**बृहन्निदिध्म एषां भूरि शस्तं पृथुः स्वरुः। येषामिन्द्रो युवा सखा॥२॥**

ऋषिका नजिकै समिधा पर्याप्त छ। स्तोत्र पनि असङ्ख्य छन्। चिरयुवा इन्द्रदेव सधैँ ऋषिहरूका मित्र बनेर रहन्छन्।

**अयुद्ध इद्युधा वृतं शूर आजति सत्वभिः। येषामिन्द्रो युवा सखा॥३॥**

इन्द्रदेव मित्र भएका साधकले युद्ध नगरीकनै सैन्यबलयुक्त शत्रु पराजित गर्न सक्छन्।

**य एक इद्विदयते वसु मर्ताय दाशुषे। ईशानो अप्रतिष्कुत इन्द्रो अङ्ग॥४॥**

विश्वका स्वामी, युद्धमा एक्लै भए पनि शत्रुलाई संहार गर्नमा कहिल्यै परास्त नहुने इन्द्रदेवताले याजकहरूलाई सबै किसिमका धन र वैभव प्रदान गर्दछन्।

**यश्चिद्धि त्वा बहुभ्य आ सुतावाँ आविवासति। उग्रं तत्पत्यते शव इन्द्रो अङ्ग॥५॥**

यज्ञ गर्ने असङ्ख्य यजमानहरूमध्ये जसले सोमयज्ञ गरेर तिम्रो आराधना गर्दछ, त्यसलाई हे इन्द्रदेव ! तिमी शीघ्र नै बलसम्पन्न बनाइदिन्छौ।

**कदा मर्तमराधसं पदा क्षुम्पमिव स्फुरत्। कदा नः शुश्रवद्गिर इन्द्रो अङ्ग॥६॥**

इन्द्रदेवले कहिले हाम्रो स्तुति सुन्लान् ? आराधना नगर्नेलाई बेकामे बिरुवाझैँ उनले कहिले नष्ट गर्लान् ?

**गायन्ति त्वा गायत्रिणोऽर्चन्त्यर्कमर्किणः। ब्रह्माणस्त्वा शतक्रत उद्वंशमिव येमिरे॥७॥**

हे सय यज्ञ गरेर शतक्रतु नाम पाएका इन्द्रदेव ! उच्च स्वरले गाउने भएर उद्‌गाता नाम पाएकाहरूले तिमीलाई आह्वान गरिरहेका छन्। स्तुति गर्ने स्तोताहरूले तिमीलाई पूज्य मानेर मन्त्रोच्चारणद्वारा आदर गर्दछन्। बाँसका चोकेमाथि चढेर चटक देखाउने नट वा नर्तकजस्ता ब्रह्मा नामका ऋत्विक्‌ले श्रेष्ठ स्तुतिगान गर्दै तिमीलाई प्रोत्साहित गर्छन्।

**यत्सानोः सान्वारुहो भूर्यस्पष्ट कर्त्वम्। तदिन्द्रो अर्थं चेतति यूथेन वृष्णिरेजति॥८॥**

यजमानहरू सोमवल्ली वा समिधा आदि खोज्दै पर्वतका एउटा टाकुराबाट अर्को टकुरामा पुग्दै यज्ञ गर्दा उनीहरूका मनको रहर बुझ्ने र खोजेको कुरो दिने इन्द्रदेव यज्ञमा जान तयार हुन्छन्।

**युंक्ष्वा हि केशिना हरी वृषणा कक्ष्यप्रा। अथा न इन्द्र सोमपा गिरामुपश्रुतिं चर॥९॥**

हे सोमरस ग्रहण गर्ने इन्द्रदेव ! लामो जगर भएका, शक्तिशाली र लक्ष्यसम्म पुऱ्याउने दुई वटा घोडा तिमी रथमा नार। अनि सोमपानले तृप्त हुँदै हामीले गरेको प्रार्थना सुन।

**इति द्वादशः खण्डः**

बाह्रौँ खण्ड समाप्त भयो

***

**इति सामवेद संहिता दशमोऽध्यायः**

सामवेद संहिताको दसौँ अध्याय समाप्त भयो।

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# सामवेद संहिता

## एकादशोऽध्यायः

**ऋषि—** मेधातिथि काण्व। वसिष्ठ मैत्रावरुणि। प्रगाथ काण्व। पराशर शाक्त्य। प्रगाथ घौर काण्व। मेध्यातिथि काण्व त्र्यरुणत्रैवृष्ण त्रसदस्युपौरुकुत्स। अग्नि धिष्ण्य ऐश्वर हिरण्यस्तुप आङ्गिरस। सार्पराज्ञी।

**देवता—** आप्री सूक्त इध्म समिद्ध अग्नि तनूनपात् नराशंस इडा। आदित्य। इन्द्र। आत्मा सूर्य।

**छन्द—** गायत्री। त्रिष्टुप्। बार्हत प्रगाथ बृहती सतोबृहती। पिपीलिकामध्या अनुष्टुप्। द्विपदा विराट् गायत्री। जगती विराट् स्थाना।

### प्रथमः खण्डः

पहिलो खण्ड

**सुषमिद्धो न आ वह देवाँ अग्ने हविष्मते। होतः पावक यक्षि च ॥१॥**

हे पवित्रकर्ता तथा यज्ञ सम्पादनकर्ता अग्निदेव ! राम्ररी प्रज्वलित होऊ र यजमानको कल्याण गर्नका लागि देवताहरूलाई आह्वान गर। तिनै देवताहरूलाई लक्ष्य गरेर हाम्रो यज्ञ सम्पन्न गराऊ अनि देवताहरूको पोषणका लागि हविष्यान्न ग्रहण गर।

**मधुमन्तं तनूनपाद्यज्ञं देवेषु नः कवे। अद्या कृणुह्यूतये ॥२॥**

हे ऊर्ध्वगामी, मेधावी अग्निदेव ! हाम्रो रक्षा गर्नका लागि प्राणवर्द्धक मधुर हवि देवतालाई प्राप्त हुने गरी पुऱ्याइदेऊ।

**नराशंसमिह प्रियमस्मिन्यज्ञ उप ह्वये। मधुजिह्वं हविष्कृतम्। ३ ॥**

देवताहरूका प्रिय र आनन्ददायक मधुजिह्व नामका अग्निदेवलाई यस यज्ञमा हामी आह्वान गर्दछौँ। देवतासम्म हाम्रो हवि पुऱ्याइदिने हुनाले उनी स्तुति गर्न योग्य छन्।

**अग्ने सुखतमे रथे देवाँ ईडित आ वह। असि होता मनुर्हितः ॥४॥**

हे सम्पूर्ण मानवका हितैषि अग्निदेव ! तिमी आफ्ना श्रेष्ठ एवं सुखदायी रथमा देवताहरूलाई लिएर यस यज्ञस्थलमा आइदेऊ। हामी तिम्रो वन्दना गर्दछौँ।

**यदद्य सूर उदितेऽनागा मित्रो अर्यमा। सुवाति सविता भगः ॥५॥**

सूर्य उदाउँदा निष्पाप मित्र, अर्यमा, भग र सविताले हामीलाई अभीष्ट धन दिऊन्।

**सुप्रावीरस्तु स क्षयः प्र नु यामन्त्सुदानवः। ये नो अंहोऽतिपिप्रति ॥६॥**

हे कल्याणकारी देवताहरू हो ! तिमीहरूको आगमन भएपछि हाम्रो आवास सुरक्षित बनोस्। तिमीहरू हामीलाई पापबाट मुक्त गराओ।

**उत स्वराजो अदितिरदब्धस्य व्रतस्य ये। महो राजान ईशते ॥७॥**

मित्र आदि देवता आफ्नी माता अदितिसँगै हाम्रा अधिष्ठाता हुन्। हाम्रो अभीष्ट पूरा गराउनका लागि समर्थ हुनाले उनीहरू शासक हुन्।

अग्निदेव आफ्ना दिदीबहिनीजस्ता उषासित जान्छन्। आफ्ना तेजका प्रभावले सर्वत्र विचरणशील हुँदै जाज्वल्यमान लप्काले रातको अन्धकार नष्ट गरेर प्रतिष्ठित हुन्छन्।

**कया ते अग्ने अङ्गिर ऊर्जो नपादुपस्तुतिम्। वराय देव मन्यते ॥४॥**

हे अग्निदेव ! तिमी ऊर्जा खस्न नदिने अङ्गिरा हौ। वरण गर्न योग्य र विरोधीलाई सताउने तिमीलाई हामीले कुन शब्दले प्रशंसा गरौँ ?

**दाशेम कस्य मनसा यज्ञस्य सहसो यहो। कदु वोच इदं नमः ॥५॥**

हे पुरुषार्थबाट उत्पन्न भएका अग्निदेव ! कुन यजमानका यजन कर्मद्वारा तिम्रा लागि हामी आहुति अर्पित गरौँ ? यो हवि तिमीलाई प्राप्त होस् भन्ने प्रार्थना कहिले गरौँ ?

**अधा त्वं हि नस्करो विश्वा अस्मभ्यं सुक्षितीः। वाजद्रविणसो गिरः ॥६॥**

हे अग्निदेव ! आफ्नो स्तुतिका प्रभावले हामी श्रेष्ठ स्थानका अधिपति र श्रेष्ठ पोषक धनधान्यले युक्त हुन सक्ने कृपा हामीमाथि होस्।

**अग्न आ याह्यग्निभिर्होतारं त्वा वृणीमहे। आ त्वामनक्तु प्रयता हविष्मती यजिष्ठं बर्हिरासदे ॥७॥**

हे अग्निदेव ! तिमी देवतालाई बोलाउँछौ। हाम्रो प्रार्थना सुनेर आफ्ना अग्निहरूसँगै यहाँ आऊ। हे पूज्य अग्निदेव ! अध्वर्युले प्रदान गरेका आसनमा बस, तिम्रो पूजा गर्दछौँ।

**अच्छा हि त्वा सहसः सूनो अङ्गिरः स्रुचश्चरन्त्यध्वरे। ऊर्जो नपातं घृतकेशमीमहेऽग्निं यज्ञेषु पूर्व्यम् ॥८॥**

बलद्वारा उत्पन्न, सर्वत्र गमनशील हे अग्निदेव ! तिमीसम्म हविष्यान्न पुऱ्याउनका लागि यो पवित्र हविपात्र सक्रिय छ। शक्ति ह्रास हुनबाट रोक्ने, अभीष्ट प्रदान गर्ने, तेजस्वी ज्वालाले युक्त तिमीलाई हामी यज्ञस्थलमा प्रार्थना गर्दछौँ।

**अच्छा नः शीरशोचिषं गिरो यन्तु दर्शतम्। अच्छा यज्ञासो नमसा पुरूवसुं पुरुप्रशस्तमूतये ॥९॥**

हाम्रो प्रार्थना उचित किसिमले प्रज्वलित ज्वालाले सुशोभित र दर्शनयोग्य अग्निदेवका सामु सजिलै लैजाऊ। हाम्रो रक्षाका लागि घिउयुक्त हविले सम्पन्न यज्ञ, प्रचुर सम्पदा र अति प्रशंसनीय अग्निदेवलाई प्राप्त होस्।

**अग्निं सूनुं सहसो जातवेदसं दानाय वार्याणाम्। द्विता यो भूदमृतो मर्त्येष्वा होता मन्द्रतमो विशि ॥१०॥**

हामी दान प्राप्तिका कामनाले बलका पुत्र, जातवेदा अग्निदेवलाई आह्वान गर्दछौँ। उनी दुई रूप भएका, मरणशील प्रजाका माझ होता र अमर देवताका माझमा आनन्दका रूप हुन्।

**इति द्वितीयः खण्डः**

दोस्रो खण्ड समाप्त भयो

***

# तृतीयः खण्डः
## तेस्रो खण्ड

**अदाभ्यः पुरुएता विशामग्निर्मानुषीणाम् । तूर्णी रथः सदा नवः ॥१॥**

मानिसका अगुवा मार्गदर्शक, तत्काल क्रियाशील, रथजत्तिकै चाँडो गति भएका, सधैं युवा रहने यी अग्निदेव सर्वथा अदम्य छन् ।

**अभि प्रयांसि वाहसा दाश्वाँ अश्नोति मर्त्यः । क्षयं पावकशोचिषः ॥२॥**

हविदाता मानिसहरू हविवाहक अग्निदेवबाट सबै किसिमका अन्न र पवित्र प्रकाशले युक्त उत्तम आवास पाउँछन् ।

**साह्वान्विश्वा अभियुजः क्रतुर्देवानाममृक्तः । अग्निस्तु विश्रवस्तमः ॥३॥**

आक्रामक, शत्रुका सेनालाई परास्त गराउने, दिव्य गुण बढाउने हे अग्निदेव ! तिमी मनग्गे अन्न प्रदान गर्दछौ ।

**भद्रो नो अग्निराहुतो भद्रा रातिः सुभग भद्रो अध्वरः । भद्रा उत प्रशस्तयः ॥४॥**

हविले सन्तुष्ट भएका हे अग्निदेव ! हाम्रा लागि मङ्गलकारी होऊ। हे ऐश्वर्यशाली ! हामीलाई कल्याणकारी धन प्राप्त होस् र तिम्रो स्तुति हाम्रा लागि मङ्गलकारी होस्।

**भद्रं मनः कृणुष्व वृत्रतूर्ये येना समत्सु सासहिः । अव स्थिरा तनुहि भूरि शर्धतां वनेमा ते अभिष्टये ॥५॥**

हे अग्निदेव ! युद्धमा शत्रु परास्त गर्ने तिम्रो मङ्गलकारी मनोबल हामीलाई पनि प्रदान गर। हामी शत्रुको सेना परास्त गरेर इच्छित सुखले सम्पन्न हुँदै उपासना गर्न सकौं।

**अग्ने वाजस्य गोमत ईशानः सहसो यहो । अस्मे देहि जातवेदो महि श्रवः ॥६॥**

बलपूर्वक उत्पन्न हुने हे ज्ञानसम्पन्न अग्निदेव ! तिमी अन्न र गाई आदि पशुधनले सम्पन्न छौ। हाम्रा लागि पनि तिमी अपार वैभव प्रदान गर।

**स इधानो वसुष्कविरग्निरीडेन्यो गिरा । रेवदस्मभ्यं पुर्वणीक दीदिहि ॥७॥**

ज्वालाका रूपमा विभिन्न मुख भएका जाज्वल्यमान हे अग्निदेव ! तिमी त्रिकालदर्शी एवं सबैका आश्रयस्थल हौ। दिव्य स्तुतिले सन्तुष्ट भएर यज्ञमा सर्वप्रथम उपस्थित हुने तिमी आफ्नो तेजस्विताले हामीलाई अपार धनवैभव प्रदान गर।

**क्षपो राजन्नुत त्मनाग्ने वस्तोरुतोषसः । स तिग्मजम्भ रक्षसो दह प्रति ॥८॥**

ज्वालारूपी विकराल दाह्रा हुने हे अग्निदेव ! आफ्ना तीक्ष्ण स्वभावले तिमी असुर संहार गर्दछौ। त्यसैले रात्रि, दिन, उषाकाल र हाम्रा सबै हानीकारक असुर भस्म गर।

**इति तृतीयः खण्डः**

तेस्रो खण्ड समाप्त भयो

***

## चतुर्थः खण्डः

### चौथो खण्ड

**विशोविशो वो अतिथिं वाजयन्तः पुरुप्रियम्। अग्निं वो दुर्यं वचः स्तुषे शूषस्य मन्मभिः ॥१॥**

अन्न र बल चाहने हे मानिस हो ! सर्वप्रिय र सर्वपूज्य अग्निदेवको स्तुति गर। हामी पनि यी अग्निदेवलाई सुखदायक स्तोत्रले स्तुति गर्दछौँ।

**यं जनासो हविष्मन्तो मित्रं न सर्पिरासुतिम्। प्रशंसन्ति प्रशस्तिभिः ॥२॥**

हविदाता मित्रले जस्तै घिउ आदिले यज्ञ सम्पन्न गर्दै वैदिक स्तोत्रले अग्निदेवको स्तवन गरौँ।

**पन्यांसं जातवेदसं यो देवतात्युद्यता। हव्यान्यैरयद्दिवि ॥३॥**

स्तुत्य, सर्वज्ञानयुक्त अग्निदेवलाई हामी प्रशंसा गर्दछौँ। अग्निदेव यज्ञमा प्रदान गरेको हविष्यान्न देवलोकसम्म पुऱ्याउन सहायता गर्दछन्।

**समिद्धमग्निं समिधा गिरा गृणे शुचिं पावकं पुरो अध्वरे ध्रुवम्। विप्रं होतारं पुरुवारमद्रुहं कविं सुम्नैरीमहे जातवेदसम् ॥४॥**

समिधाबाट प्रकट अग्निदेवलाई हामी वाणीले अर्चना गर्दछौँ। शुद्ध, स्थिर र पवित्र गराउने अग्निदेवलाई यज्ञका अग्रिम स्थानमा प्रतिष्ठित गर्दछौँ। विशिष्ट ज्ञानले सम्पन्न हविदाताहरूले धारण गर्न योग्य, द्रोहरहित, ज्ञानवान् र सर्वज्ञाता अग्निदेवलाई ऐश्वर्य प्राप्तिका लागि हामी स्तुति गर्दछौँ।

**त्वां दूतमग्ने अमृतं युगेयुगे हव्यवाहं दधिरे पायुमीड्यम्। देवासश्च मर्तासश्च जागृविं विभुं विश्पतिं नमसा नि षेदिरे ॥५॥**

हे अग्निदेव ! अमर देवता र मानिसले प्रत्येक शुभ यज्ञमा हविदाता, रक्षक र स्तुति गर्न योग्य तिमीलाई दूतका रूपमा नियुक्त गर्दछन्। जागृतिप्रधान, विस्तारशील र प्रजाको रक्षा गर्नमा सहायक मानेर मानिसहरू तिमीलाई प्रणाम गर्दै उपासना गर्दछन्।

**विभूषन्नग्न उभयाँ अनु व्रता दूतो देवानां रजसी समीयसे। यत्ते धीतिं सुमतिमावृणीमहेऽध स्मा नस्त्रिवरूथः शिवो भव ॥६॥**

देवता र मानिस दुवैलाई महिमावान् बनाउँदै अनुशासनप्रिय, नियमपालक देवताहरूका दूत बनेर दिव्यलोक र यस लोकमा हवि लिएर जाने हे अग्निदेव ! हामी तिम्रो स्तुति गर्दछौँ। तीनै स्थानमा विचरण गर्दै हामीलाई सुख प्रदान गर।

**उपत्वा जामयो गिरो देदिशतीर्हविष्कृतः। वायोरनीके अस्थिरन् ॥७॥**

हे अग्निदेव ! यजमानका वाणीले उच्चरित हुने प्रिय स्तुतिले तिम्रो गुण प्रकट गर्दछन्। उनीहरू वायुका सहयोगले तिमीलाई प्रदीप्त गर्दछन्।

**यस्य त्रिधात्ववृतं बर्हिस्तस्थावसन्दिनम् । आपश्चिन्नि दधा पदम् ॥८॥**

अग्निदेव चारैतिर र तीन वटा धारण क्षमताले बाँधिएका छन् र उनका चारैतिर विभिन्न लोकहरू खुला स्थितिमा रहेका छन्। उनै अग्निदेवसँग जलले स्थिर पद प्राप्त गर्दछ।

**पदं देवस्य मीढुषोऽनाधृष्याभिरूतिभिः । भद्रा सूर्य इवोपदृक् ॥९॥**

प्रशंसनीय र तेजस्वी अग्निदेवको स्थान शत्रुको बाधाभन्दा निकै पर सुरक्षित छ। उनको दर्शन पनि सूर्यको दर्शनजस्तै कल्याणकारी हुन्छ।

**इति चतुर्थः खण्डः**

चौथो खण्ड समाप्त भयो

***

**इति सामवेद संहिता पञ्चदशोऽध्यायः**

सामवेद संहिताको पन्ध्रौँ अध्याय समाप्त भयो।

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# सामवेद संहिता

## षोडशोऽध्यायः

**ऋषि—** मेध्यातिथि काण्व। विश्वामित्र गाथिन। भर्ग प्रागाथ। सोभरि काण्व। शुनःशेप आजीगर्ति। सुकक्ष आङ्गिरस। विश्वकर्मा भौवन। अनानत पारुच्छेपि। भरद्वाज बार्हस्पत्य। गौतम राहूगण। ऋजिश्वा भरद्वाज। वामदेव गौतम। हर्यत प्रागाथ। देवतिथि काण्व। बालखिल्य। पर्वत नारद। अभि भौम।

**देवता—** इन्द्र। इन्द्राग्नी। अग्नि। वरुण। विश्वकर्मा। पवमान सोम। पूषा। मरुद्गण। विश्वेदेवा। द्यावापृथिवी। अग्नि हवीषि।

**छन्द—** बार्हत प्रगाथ बृहती सतोबृहती। गायत्री। त्रिष्टुप्। अत्यष्टि। उष्णिक्। जगती।

### प्रथमः खण्डः

पहिलो खण्ड

**अभि त्वा पूर्वपीतय इन्द्र स्तोमेभिरायवः। समीचीनास ऋभवः समस्वरन् रुद्रा गृणन्त पूर्व्यम् ॥१॥**

हे इन्द्रदेव ! उहिलेदेखि नै ऋभु र रुद्रहरूले तिम्रो स्तुति गर्दै आएका छन्। याजकहरू स्तुति गर्दै सोमपान गर्नका लागि सर्वप्रथम तिमीलाई नै बोलाउँछन्।

**अस्येदिन्द्रो वावृधे वृष्ण्यं शवो मदे सुतस्य विष्णवि। अद्या तमस्य महिमानमायवोऽनु ष्टुवन्ति पूर्वथा ॥२॥**

इन्द्रदेव सोमरस पान गरेर अत्यधिक आनन्दित हुँदै यजमानको वीर्य र बल बढाउँछन्, त्यसैले स्तोताहरू आज पनि इन्द्रदेवकै महिमा वर्णन गर्दछन्।

**प्र वामर्चन्त्युक्थिनो नीथाविदो जरितारः। इन्द्राग्नी इष आ वृणे ॥३॥**

हे इन्द्र र अग्निदेव ! वेदपाठ गर्नेले तिमीहरूलाई प्रार्थना गर्दछन्। सामवेद गाउनेहरू तिमीहरूको गुण गाउँछन् र अन्न प्राप्त गर्नका लागि हामी पनि स्तुति गर्दछौं।

**इन्द्राग्नी नवतिं पुरो दासपत्नीरधूनुतम्। साकमेकेन कर्मणा ॥४॥**

हे इन्द्र र अग्निदेव ! तिमीहरू दुवैले संयुक्त भएर शत्रुका नब्बे सहर र उनको विभूति एकै पटकको आक्रमणमा एकै समयमा कम्पित गरायौ।

**इन्द्राग्नी अपसस्पर्युप प्र यन्ति धीतयः। ऋतस्य पथ्या३ अनु ॥५॥**

हे इन्द्र र अग्निदेव ! असल कर्म गर्ने मानिसहरू सत्यको बाटो पहिल्याउँदै सधैंभरि अगाडि बढ्दछन्।

**इन्द्राग्नी तविषाणि वां सधस्थानि प्रयांसि च। युवोरप्तूर्यं हितम् ॥६॥**

हे इन्द्र र अग्निदेव ! तिमीहरूको बल र अन्न संयुक्त रूपमा रहन्छन्। तिमीहरूको बल शुभ कर्मतर्फ प्रेरित गर्ने खालको छ।

**शग्ध्यू३ षु शचीपत इन्द्र विश्वाभिरूतिभिः। भगं न हि त्वा यशसं वसुविदमनु शूर चरामसि ॥७॥**

शचीका पति, शूरवीर हे इन्द्रदेव ! सबै किसिमका रक्षा साधनसँगै हामीलाई अभीष्ट फल प्रदान गर। सौभाग्ययुक्त धन प्रदान गर्ने तिमीलाई हामी आराधना गर्दछौँ।

**पौरो अश्वस्य पुरुकृद्‌गवामस्युत्सो देव हिरण्ययः। न किर्हि दानं परिमर्धिषत्त्वे यद्यद्यामि तदा भर ॥८॥**

हे इन्द्रदेव ! तिमी गाई र अश्व बढाउँछौ, स्वर्णसम्पदाका स्रोत हौ र तिम्रो अनुदान बिर्सने सामर्थ्य कसैसित छैन। त्यसैले हामीलाई अभीष्ट फलले परिपूर्ण गराऊ।

**त्वं ह्येहि चेरवे विदा भगं वसुत्तये। उद्वावृषस्व मघवन् गविष्टय उदिन्द्राश्वमिष्टये ॥९॥**

हे इन्द्रदेव ! हामी उत्तम आचरणयुक्त भएर तिमीलाई आह्वान गर्दछौँ। हे ऐश्वर्यवान् इन्द्रदेव ! गाई, अश्व र श्रेष्ठ धन प्राप्ति गर्ने हाम्रो कामना पूरा गराऊ।

**त्वं पुरू सहस्राणि शतानि च यूथा दानाय मंहसे। आ पुरन्दरं चकृम विप्रवचस इन्द्रं गायन्तोऽवसे ॥१०॥**

हे इन्द्रदेव ! हवि प्रदान गर्नेलाई सयौँ वा हजारौँ गाईको समूह दिन समर्थ छौ। शत्रुको सहर विध्वंस गर्नमा समर्थ तिमीलाई हामी रक्षाका लागि सामगान गर्दै बोलाउँछौँ।

**यो विश्वा दयते वसु होता मन्द्रो जनानाम्। मधोर्न पात्रा प्रथमान्यस्मै प्र स्तोमा यन्त्वग्नये ॥११॥**

याजकलाई धनधान्यका रूपमा अपार वैभव दिएर खुसी बनाउने अग्निदेवलाई हामी पहिले स्तुति गर्दछौँ। उनलाई सबैभन्दा पहिले सोमको पात्र प्रदान गरिन्छ।

**अश्वं न गीर्भी रथ्यं सुदानवो मर्मृज्यन्ते देवयवः। उभे तोके तनये दस्म विश्पते पर्षि राधो मघोनाम् ॥१२॥**

हे अग्निदेव ! रथमा नारेका अश्वले रथ वहन गरेझैँ श्रेष्ठ दानदाता र देवताका पक्षमा रहने यजमानले तिमीहरूको स्तुति गर्छन्। तिमी याजकका पुत्रपौत्रादिलाई धनवान्को धन खोसेर प्रदान गर।

**इति प्रथमः खण्डः**

पहिलो खण्ड समाप्त भयो

***

## द्वितीयः खण्डः

दोस्रो खण्ड

**इमं मे वरुण श्रुधी हवमद्या च मृडय। त्वामवस्युरा चके ॥१॥**

हे वरुणदेव ! तिमी हाम्रा प्रार्थनामा ध्यान देऊ र हामीलाई सुखी बनाऊ। आफ्नो रक्षाका लागि हामी तिम्रो स्तुति गर्दछौँ।

**कया त्वं न ऊत्याभि प्र मन्दसे वृषन्। कया स्तोतृभ्य आ भर ॥२॥**

हे अभीष्ट फलदायक इन्द्रदेव ! तिमी कुन साधनले रक्षा गर्दै हामीलाई अति हर्ष प्रदान गर्दछौ ? कस्ता खालका संरक्षण साधनले तिमी स्तोतालाई सम्पन्न बनाउँछौ ?

**इन्द्रमिद्देवतातय इन्द्रं प्रयत्यध्वरे। इन्द्रं समीके वनिनो हवामह इन्द्रं धनस्य सातये ॥३॥**

दैवी प्रयोजनका लागि गरेका यज्ञमा हामी याजकहरू प्रारम्भ र समाप्त हुने बेलामा इन्द्रदेवलाई आह्वान गर्दछौँ। धन प्राप्तिका कामनाले पनि इन्द्रदेवलाई आह्वान गर्दछौँ।

**इन्द्रो मह्ना रोदसी पप्रथच्छव इन्द्रः सूर्यमरोचयत्। इन्द्रे ह विश्वा भुवनानि येमिर इन्द्रे स्वानास इन्दवः ॥४॥**

इन्द्रदेवताले आफ्नै बलले द्युलोक र पृथ्वीलोकलाई विस्तृत गराए, सूर्यलाई आलोकयुक्त बनाए। सबै लोकहरूलाई उनले आश्रय प्रदान गरे त्यसै किसिमका हुनाले इन्द्रदेवतालाई यो सोमरस समर्पित गरिएको छ।

**विश्वकर्मन् हविषा वावृधानः स्वयं यजस्व तन्वांऽ स्वा हि ते। मुह्यन्त्वन्ये अभितो जनास इहास्माकं मघवा सूरिरस्तु ॥५॥**

हे विश्वका स्रष्टा परमात्मा ! हामीले दिइएका हविष्यान्नले प्रसन्न भएर पृथ्वीले जस्तै सबै आश्रितहरूको हितका लागि यज्ञमा स्वयं यजन गर। तिमी सबै शत्रु आफ्ना बलले मोहग्रस्त गराऊ। यज्ञमा ऐश्वर्यसम्पन्न देवता हाम्रा लागि श्रेष्ठ फल प्रदान गरून्।

**अया रुचा हरिण्या पुनानो विश्वा द्वेषांसि तरति स्वयुग्वभिः सूरो न सयुग्वभिः। धारा पृष्ठस्य रोचते पुनानो अरुषो हरिः। विश्वा यद्रूपा परियास्यृक्वभिः सप्तास्येभिर्ऋक्वभिः ॥६॥**

हरियो आभा भएको शोधित सोमरसका तेजले शत्रु नाश गर्दछ। अन्धकार हटाउने सूर्यको रश्मिजस्तै सोमरसको उत्तम धारा चम्कन्छ। शोधित हरियो आभासम्पन्न सोमरस चम्कन्छ। अनि प्रकाशका सात रङ्ग तेज र स्तोत्रले अनेक रूप धारण गर्दछ।

**प्राचीमनु प्रदिशं याति चेकितत्सं रश्मिभिर्यतते दर्शतो रथो दैव्यो दर्शतो रथः। अग्मन्नुक्थानि पौंस्येन्द्रं जैत्राय हर्षयन्। वज्रश्च यद्भवथो अनपच्युता समत्स्वनपच्युता ॥७॥**

हे सर्वज्ञ सोमदेव ! तिमी पूर्व दिशामा प्रस्थान गर्दा दिव्य र दर्शनीय तिम्रो रथ रश्मिका प्रभावले झन् तेजस्वी देखिन्छ। पुरुषार्थवर्द्धक स्तोत्र इन्द्रदेवसम्म पुग्दछ। त्यसपछि स्तोताहरू विजयका लागि उनलाई प्रसन्न गराउँछन् र उनले वज्र प्राप्त गर्दछन्। हे सोम र इन्द्रदेव ! त्यसपछि तिमीहरूका आपसी सहयोगले युद्धमा पराजित हुँदैनौ।

**त्वं ह त्यत्पणीनां विदो वसु सं मातृभिर्मर्जयसि स्व आ दम ऋतस्य धीतिभिर्दमे। परावतो न साम तद्यत्रा रणन्ति धीतयः। त्रिधातुभिररुषीभिर्वयो दधे रोचमानो वयो दधे ॥८॥**

हे सोमदेव ! तिमीले व्यापारीबाट धनसम्पदा प्राप्त गरेका छौ। यज्ञका आधारभूत जलले यज्ञस्थलमा उत्तम रूपमा तिमी पवित्र हुन्छौ। आनन्दित भएका याजकका

स्थानबाट गुञ्जित हुने सामगान परैदेखि सुनिन्छ। तीनै ठाउँमा देदीप्यमान हे सोमदेव ! याजकलाई तिमी उचित अन्न प्रदान गर्दछौ।

## इति द्वितीयः खण्डः

दोस्रो खण्ड समाप्त भयो

***

## तृतीयः खण्डः

तेस्रो खण्ड

**उत नो गोषणिं धियमश्वसां वाजसामुत। नृवत् कृणुह्यूतये ॥१॥**

हे पूषादेव ! तिमी हाम्रा यज्ञ आदि कार्यको सफलताका लागि गाई, अश्व, सेवक र अन्न प्रदान गर।

**शशमानस्य वा नरः स्वेदस्य सत्यशवसः। विदा कामस्य वेनतः ॥२॥**

हे सत्यका बलले सम्पन्न पराक्रमी मरुत्गण ! पसिनाले भिज्दै स्तुति गर्ने याजकलाई तिमीहरू अभीष्ट फल प्रदान गर।

**उप नः सूनवो गिरः शृण्वन्त्वमृतस्य ये। सुमृडीका भवन्तु नः ॥३॥**

हाम्रो प्रार्थना सुनेर अमरपुत्र देवताहरू हामीकहाँ आऊन् र सुख प्रदान गरून्।

**प्र वां महि द्यवी अभ्युपस्तुतिं भरामहे। शुची उप प्रशस्तये ॥४॥**

हे पवित्र र तेजस्वी आकाश र भूमण्डल ! स्तुति गर्नका लागि नजिकै आएर हामी तिमीहरू दुवैका लागि पर्याप्त मात्रामा स्तुति उच्चारण गर्दछौँ।

**पुनाने तन्वा मिथः स्वेन दक्षेण राजथः। ऊह्याथे सनादृतम् ॥५॥**

हे दुवै देवी हो ! आफ्ना अनन्त शक्तिले तिमीहरू द्युलोक र पृथिवी यी दुवैलाई पवित्र गराउँदै प्रदीप्त हुन्छौ र सधैँ यज्ञको कार्य निर्वाह गर्दछौ।

**मही मित्रस्य साधथस्तरन्ती पिप्रती ऋतम्। परि यज्ञं निषेदथुः ॥६॥**

हे व्यापक आकाश र भूदेवीहरू हो ! तिमीहरू आफ्ना सखाजस्ता यजमानलाई अभीष्ट फल प्रदान गर्दछौ, यज्ञको पूर्णताका लागि संरक्षण दिँदै आधार प्रदान गर्दछौ।

**अयमु ते समतसि कपोत इव गर्भधिम्। वचस्तच्चिन्न ओहसे ॥७॥**

हे इन्द्रदेव ! गर्भिणी पोथीसँग भाले ढुकुर बसेझैँ स्नेहपूर्वक पेटमा बस्ने यो सोमरस तिम्रा लागि प्रस्तुत छ। तिमी हाम्रो निवेदन स्वीकार गर।

**स्तोत्रं राधानां पते गिर्वाहो वीर यस्य ते। विभूतिरस्तु सूनृता ॥८॥**

हे धनका अधिपति ! हे इन्द्र ! हे स्तुतिहरूका आश्रयदेव ! हे वीर ! इत्यादि भनेर जुन स्तोताहरूले तिम्रो स्तुति गर्दछन् उनीहरूलाई तिम्रो विभूति र सत्यता सिद्ध होस्।

**ऊर्ध्वस्तिष्ठा न ऊतये स्मिन्वाजे शतक्रतो। समन्येषु ब्रवावहै ॥९॥**

सयौँ यज्ञ आदि उत्तम कार्य सम्पन्न गर्ने हे इन्द्रदेव ! जीवनका सङ्ग्राममा हाम्रो संरक्षण गर्नका लागि सधैँ प्रयत्नशील रहिदेऊ। तिमीबाट हुने गरेका अन्य उत्तम कार्यहरूका विषयमा पनि हामी परस्पर विचार विनिमय गरिरहनेछौँ।

**गाव उप वदावटे मही यज्ञस्य रप्सुदा। उभा कर्णा हिरण्यया ॥१०॥**

सूर्यरश्मि यज्ञका लागि आऊन्, तिनले पृथ्वीलाई यज्ञीय रूप प्रदान गर्दछन्। तिनका दुवै किनारा चम्किला छन्।

**अभ्यारमिदद्रयो निषिक्तं पुष्करे मधु। अवटस्य विसर्जने ॥११॥**

सम्मानित अध्वर्यु यज्ञनिर आए, बाँकी मधुर सोमरस महावीरलाई विसर्जन गर्ने अवसर स्थापित गर्दछन्।

**सिञ्चन्ति नमसावटमुच्चाचक्रं परिज्मानम्। नीचीनबारमक्षितम् ॥१२॥**

चक्र माथितिर अडिएको छ। चारै तिरबाट तल झुक्दा पनि जसको तल्लो ढोका खिइँदैन त्यस्ता महान्लाई नमस्कार गर्दै यज्ञकर्ताले हवन गर्दछन्।

## इति तृतीयः खण्डः

तेस्रो खण्ड समाप्त भयो

***

## चतुर्थः खण्डः

चौथो खण्ड

**मा भेम मा श्रमिष्मोग्रस्य सख्ये तव। महत्ते वृष्णो अभिचक्ष्यं कृतं पश्येम तुर्वशं यदुम् ॥१॥**

महान् बलशाली हे इन्द्रदेव ! तिम्रा मित्रताका प्रभावले हामी कसैसित भयभीत नहोऔँ र न त कहिल्यै थाकौँ। उपासकहरूको कामना पूरा गराउने हे देव ! तिम्रो सत्कार्य प्रशंसनीय छ। हामी तुर्वश र यदुलाई पनि प्रसन्नताका स्थितिमा देखौँ।

**सव्यामनु स्फिग्यं वावसे वृषा न दानो अस्य रोषति। मध्वा सम्पृक्ताः सारघेण धेनवस्तूयमेहि द्रवा पिब ॥२॥**

हे सर्वशक्तिमान् इन्द्रदेव ! तिमी आफ्ना बायाँ हातले सजिलै सबैलाई आश्रय दिन्छौ। नष्टभ्रष्ट गर्ने क्रूर शत्रुले तिमीलाई कष्ट दिन सक्दैन। महजस्तै मिठो दुधयुक्त र सुखदायी सोम तिम्रा लागि प्रस्तुत छ। शीघ्र यज्ञवेदीका समीप आऊ र पान गर।

**इमा उत्वा पुरूवसो गिरो वर्धन्तु या मम। पावकवर्णाः शुचयो विपश्चिताऽभि स्तोमैरनूषत ॥३॥**

हे ऐश्वर्यवान् इन्द्रदेव ! हाम्रा स्तुतिले तिम्रो कीर्ति बढोस्। अग्निजस्तै प्रखर, पवित्र आत्मा र विद्वान् साधकहरू स्तोत्रले तिम्रो प्रार्थना गर्दछन्।

**अयं सहस्रमृषिभिः सहस्कृतः समुद्र इव पप्रथे। सत्यः सो अस्य महिमा गृणे शवो यज्ञेषु विप्रराज्ये ॥४॥**

हजारौँ ऋषिका स्तुतिको बल पाएका प्रख्यात यज्ञदेव समुद्रजस्तै विस्तृत हुन्छन्। यिनको सत्यनिष्ठा र शक्ति प्रसिद्ध छ। यज्ञमा स्तोत्रगान गर्दै यिनको सम्मान गरौँ।

**यस्यायं विश्व आर्यो दासः शेवाधिपा अरिः। तिरश्चिदर्ये रुशमे पवीरवि तुभ्येत्सो अज्यते रयिः ॥५॥**

आर्य र दास इन्द्रदेवका धनको रक्षक हुन्। उनी रुशमका लागि वीरझैँ अनुकूल हुन्छन्। इन्द्रदेव तिमीहरूका लागि गुप्त धन प्रदायक हुन्छन्।

**तुरण्यवो मधुमन्तं घृतश्चुतं विप्रासो अर्कमानृचुः। अस्मे रयिः पप्रथे वृष्ण्यं शवोऽस्मे स्वानास इन्दवः ॥६॥**

चाँडो कार्य गर्ने विप्रहरू मधुर घिउले सेचन गर्दै पूजनीय मन्त्र उच्चारण गर्दछन्। यसबाट हाम्रा लागि धन, पुरुषार्थ र सोमको सिद्धि हुन्छ।

**गोमन्न इन्दो अश्ववत्सुतः सुदक्ष धनिव। शुचिं च वर्णमधि गोषु धारय ॥७॥**

रस निकालिसकेपछि हे बलशाली सोमदेव ! हामीलाई गाई, घोडाले युक्त धन प्रदान गर। त्यसपछि तिमी गाईका दुधमा मिसिएर पवित्र सेतो वर्णको बन।

**स नो हरीणां पत इन्दो देवप्सरस्तमः। सखेव सख्ये नर्यो रुचे भव ॥८॥**

हे हरियो वर्णका सोमदेव ! तेजस्विताका पुञ्ज र मानवका हितकारी भएर तिमी हाम्रा तेजस्वितामा पनि प्रखरता ल्याइदेऊ। एउटा मित्र अर्को मित्रको सहयोगका लागि तयार रहेझैँ व्यवहार हामीसित गर।

**सनेमि त्वमस्मदाँ अदेवं कं चिदत्रिणम्। साह्वाँ इन्दो परि बाधो अप द्वयुम् ॥९॥**

हे सोमदेव ! हाम्रा लागि पुरातन सुख प्रकट गर र सुखमा बाधा हाल्ने शत्रु संहार गर। मनभित्र र बाहिर फरकफरक विचार राख्ने र बोल्ने गरेका दुष्टलाई समाप्त गर। दिव्य गुणरहित स्वार्थी शत्रु पनि संहार गर।

**अञ्जते व्यञ्जते समञ्जते क्रतुं रिहन्ति मध्वाभ्यञ्जते। सिन्धोरुच्छ्वासे पतयन्तमुक्षणं हिरण्यपावाः पशुमप्सु गृभ्णते ॥१०॥**

स्तोता सोमरस गाईका दुधमा विशेष किसिमले मिसाउँछन्। त्यसको स्वाद देवताले लिन्छन्। त्यस सोममा गाईको घिउ र मह मिसाउँछन्। त्यसपछि नदीका पानीमा रहेका सोमलाई स्वर्णले शुद्ध गरेर तेजस्वी रूप प्रदान गर्दछन्।

**विपश्चिते पवमानाय गायत मही न धारात्यन्धो अर्षति। अहिर्न जूर्णामति सर्पति त्वचमत्यो न क्रीडन्नसरद्वृषा हरिः ॥११॥**

हे ऋत्विक्हरू हो ! उच्च विचारशील र शुद्ध सोमको स्तुति गर। यो सोम महान् धाराजस्तै वेगले अन्न प्रदान गर्दछ। सर्पले काँचुली फेरेझैँ यसले पुरानो आवरण फेर्छ। शक्तिमान् र हरियो वर्णको सोमरस घोडा खेलेझैँ कलशमा पसेर रहन्छ।

**अग्रेगो राजाप्यस्तविष्यते विमानो अह्वां भुवनेष्वर्पितः। हरिर्घृतस्नुः सुदृशीको अर्णवो ज्योतीरथः पवते राय ओक्यः ॥१२॥**

प्रगतिशील राजाझैँ सोम जलमा मिश्रित भएर प्रशंसित हुन्छ। दिनको मापदण्डजस्तो सोम जलमा रहन्छ। हरियो वर्णको, जल मिश्रित, सुन्दर दर्शनीय र जलमा निवास गर्ने, ज्योतिस्वरूपको रथ भएको सोम धनको भण्डार जस्तै हो।

**इति चतुर्थः खण्डः**

चौथो खण्ड समाप्त भयो

***

**इति सामवेद संहिता षोडशोऽध्यायः**

सामवेद संहिताको सोह्रौँ अध्याय समाप्त भयो।

## सप्तदशोऽध्यायः

**ऋषि—** शुनःशेप आजीगर्ति। मधुच्छन्दा वैश्वामित्र। शंयु बार्हस्पत्य। वसिष्ठ मैत्रावरुणि। वामदेव गौतम। रेभसूनू काश्यप। नृमेध आङ्गिरस। गोषूक्ति अश्वसूक्ति काण्वायन। श्रुतकक्ष आङ्गिरस। विरूप आङ्गिरस। वत्स काण्व।

**देवता—** अग्नि। विष्णु। वायु। इन्द्रवायू। पवमान सोम।

**छन्द—** गायत्री। बार्हत प्रगाथ बृहती सतोबृहती। त्रिष्टुप्। अनुष्टुप्। उष्णिक्।

### प्रथमः खण्डः

पहिलो खण्ड

**विश्वेभिरग्ने अग्निभिरिमं यज्ञमिदं वचः। चनो धाः सहसो यहो ॥१॥**

बलका पुत्र हे अग्निदेव ! अरू अग्निहरूका साथमा तिमी यस यज्ञमा आइदेऊ र स्तुतिगान सुन्दै हामीलाई पोषणयुक्त अन्न प्रदान गर।

**यच्चिद्धि शश्वता तना देवं देवं यजामहे। त्वे इद्धूयते हविः ॥२॥**

हे अग्निदेव ! इन्द्र, वरुण आदि अन्य देवताहरूका लागि प्रतिदिन मनग्गे आहुति अर्पित गर्ने हुनाले पनि सबै हविष्यान्न तिमीलाई नै प्राप्त हुन्छ।

**प्रियो नो अस्तु विश्पतिर्होता मन्द्रो वरेण्यः। प्रियाः स्वग्नयो वयम् ॥३॥**

हे यज्ञ सम्पन्न गर्ने, प्रजापालक, आनन्दवर्धक, वरण गर्न योग्य अग्निदेव ! तिमी हाम्रा लागि प्रिय छौ। उत्तम विधिले यज्ञको अग्नि रक्षा गर्दै हामी सधैँ तिम्रा प्रिय हुन पाऔँ।

**इन्द्रं वो विश्वतस्परि हवामहे जनेभ्यः। अस्माकमस्तु केवलः ॥४॥**

हे ऋत्विक्हरू ! तिमीहरू सबै मानिसहरूमा उत्तम हौ। तिमीहामी मिलेर सबैको कल्याणका लागि इन्द्रदेवलाई आमन्त्रित गरेका हौँ। उनले हामीमाथि विशेष कृपा गरून् भन्ने प्रार्थना गरौँ।

**स नो वृषन्नमुं चरुं सत्रादावन्नपा वृधि। अस्मभ्यमप्रतिष्कुतः ॥५॥**

हे तत्काल फल प्रदान गर्ने इन्द्रदेवता ! हामीले दिएको अन्नलाई हव्यका रूपमा ग्रहण गर, हाम्रा सहयोगी होऊ र हाम्रा कामनाहरू अस्वीकार नगर।

**वृषा यूथेव वंसगः कृष्टीरियर्त्योजसा। ईशानो अप्रतिष्कुतः ॥६॥**

इन्द्रदेव हामी सबैका रक्षक हुन्। उनी शक्तिसम्पन्न छन् तर हाम्रा विरुद्ध कार्य गर्दैनन्। उनी आफ्नो सामर्थ्यअनुसारको सहायता पुऱ्याउनका लागि मानिसहरूका नजिक उसरी पस्छन्, जसरी साँढे गाईका बथानमा पस्छ।

**त्वं नश्चित्र ऊत्या वसो राधांसि चोदय। अस्य रायस्त्वमग्ने रथीरसि विदा गाधं तुचे तु नः ॥७॥**

हे सबैका आश्रयदाता अग्निदेव ! तिम्रो शक्ति अद्भुत र अपार छ। तिमी आफ्ना क्षमताले वैभव ल्याउन समर्थ छौ। हामीकहाँ समृद्धि आउन देऊ र हाम्रा सन्तानलाई पनि प्रतिष्ठा प्रदान गर।

**पर्षि तोकं तनयं पर्तृभिष्ट्वमदब्धैरप्रयुत्वभिः। अग्ने हेडांसि दैव्या युयोधि नोऽदेवानि ह्वरांसि च ॥८॥**

हे अग्निदेव ! हाम्रा पुत्रपौत्रलाई विरोधमुक्त, सहयोगयुक्त, पराजित नहुने बनाएर आफ्ना संरक्षण साधनले पालन गर। दैवी प्रकोपबाट हाम्रो रक्षा गर, मानुषी वा राक्षसी वृत्तिबाट पनि हामीलाई रक्षा गर।

**किमित्ते विष्णो परिचक्षि नाम प्र यद्ववक्षे शिपिविष्टो अस्मि। मा वर्पो अस्मपद गूह एतद्यदन्यरूपः समिथे बभूथ ॥९॥**

हे विष्णु ! रश्मिहरूले युक्त भएर सर्वत्र व्यापक रहने हुनाले तिमीले आफ्नो जुन शिपिविष्ट नाम राखेका छौ, त्यो सर्वत्र प्रख्यात छ। किनभने सङ्ग्राममा अनेकौँ किसिमका रूप धारण गर्दै हामीलाई संरक्षण गर्दछौ। त्यसैले तिम्रो दिव्य रूप हामीबाट टाढा नहोस्।

**प्र तत्ते अद्य शिपिविष्ट हव्यमर्यः शंसामि वयुनानि विद्वान्। तं त्वा गृणामि तवसमतव्यान्क्षयन्तमस्य रजसः पराके ॥१०॥**

हे तेजस्वी विष्णु ! हामी तिम्रो महानता र सबै कर्म जानेर तिम्रा सबै श्रेष्ठ नामको कीर्तन गरेर श्रेष्ठ बन्दछौँ। हे देवता ! तिमी महान् छौ, हामी साना छौँ। त्यसै कारण तिम्रो प्रार्थना गर्दछौँ। तिमी यस लोकभन्दा पर छौ।

**वषट् ते विष्णवास आ कृणोमि तन्मे जुषस्व शिपिविष्ट हव्यम्। वर्धन्तु त्वा सुष्टुतयो गिरो मे यूयं पात स्वस्तिभिः सदा नः ॥११॥**

हे विष्णुदेव ! हामीले स्तुतिगान गर्दै तिम्रा तिम्ति वषट्कारसहित यो अन्न समर्पित गरेका छौँ। हे तेजस्वी विष्णु ! हामीले प्रदान गरेको हविष्यान्न स्वीकार गर। हाम्रो श्रेष्ठ स्तुति र प्रार्थनाले तिम्रो यश संवर्द्धित गरून्। सबै देवतासँग हाम्रो संरक्षण गर।

## इति प्रथमः खण्डः

पहिलो खण्ड समाप्त भयो

***

## द्वितीयः खण्डः

दोस्रो खण्ड

**वायो शुक्रो अयामि ते मध्वो अग्रं दिविष्टिषु। आ याहि सोमपीतये स्पार्हो देव नियुत्वता ॥१॥**

हे वायु ! हामी निर्दोष छौँ र तिम्रा लागि यज्ञमा सर्वप्रथम सोमरस अर्पित गर्दछौँ। हे देवता ! आदर गर्न योग्य तिमी नियुत नामका अश्वमा बसेर सोमपान गर्न आऊ।

**इन्द्रश्च वायवेषां सोमानां पीतिमर्हथः। युवां हि यन्तीन्दवो निम्नमापो न सध्र्यक् ॥२॥**

हे वायु र इन्द्रदेव ! तिमीहरू दुवै सोमपान गर्ने योग्यता उपयुक्त भएका छौ। ओरालो लागेको पानीको धाराझैँ बगेको सोमरसको प्रवाहसम्म तिमीहरू दुवै पुग्दछौ।

**वायविन्द्रश्च शुष्मिणा सरथं शवसस्पती। नियुत्वन्ता न ऊतय आ यातं सोमपीतये ॥३॥**

हे वायु र इन्द्रदेव ! तिमीहरू दुवै बलका स्वामी र सामर्थ्यवान् हौ। नियुत नामका घोडा हुने तिमीहरू दुवै हाम्रो रक्षा गर्न र सोमरस पान गर्न सँगै आओ।

**अध क्षपा परिष्कृतो वाजाँ अभि प्र गाहसे। यदी विवस्वतो धियो हरिं हिन्वन्ति यातवे ॥४॥**

रात सकिएपछि उषा कालमा जल मिसिएको परिष्कृत सोमले पौष्टिकता प्रदान गर्दछ। साधकका औँलाले हरियो आभा भएको सोम कलशमा खन्याउँछन्।

**तमस्य मर्जयामसि मदो य इन्द्रपातमः। यं गाव आसभिर्दधुः पुरा नूनं च सूरयः ॥५॥**

परिष्कृत सोम आनन्ददायक हुनाले इन्द्रदेवले पिउन योग्य छ। गाई र साधकले त्यसको पूर्ण सेचन गर्दछन् र आज पनि गर्दै छन्। यस्तो सोम हामी परिष्कृत गर्दछौँ।

**तं गाथया पुराण्या पुनानमभ्यनूषत। उतो कृपन्त धीतयो देवानां नाम बिभ्रतीः ॥६॥**

पवित्र सोमरलाई प्रचलित स्तवनले याजकहरू स्तुति गर्दछन्। यस कामका लागि प्रेरित औँलाले देवताको हविका लागि सोम तयार गर्दछन्।

**अश्वं न त्वा वारवन्तं वन्दध्या अग्निं नमोभिः। सम्राजन्तमध्वराणाम् ॥७॥**

अन्धकार विनाशक, यज्ञका अधिपति हे अग्निदेव ! हामी तिम्रो स्तुति र वन्दना गर्दछौँ। घोडाका पुच्छरका रौँले झिँगा भगाएझैँ तिमी आफ्ना ज्वालाले हाम्रा विरोधीहरूलाई टाढा पन्छाइदेऊ।

**स घा नः सूनुः शवसा पृथुप्रगामा सुशेवः। मीढ्वाँ अस्माकं बभूयात् ॥८॥**

हामी यी अग्निदेवको उपासना उत्तम विधिले गर्दछौँ। बल गरेर काठबाट उत्पन्न गरिएका र चाँडै सबैतिर फैलिने अग्निले हाम्रो लक्षित सुख प्रदान गरून्।

**स नो दूराच्चासाच्च नि मर्त्यादघायोः। पाहि सदमिद्विश्वायुः ॥९॥**

हे अग्निदेव ! तिमी मनुष्यका हितचिन्तक हौ। त्यसैले टाढा अथवा नजिकैबाट अनिष्ट चिताउनेहरूबाट सधैँ हामीलाई तिमी जोगाऊ।

**त्वमिन्द्र प्रतूर्तिष्वभि विश्वा असि स्पृधः। अशस्तिहा जनिता वृत्रतूरसि त्वं तूर्य तरुष्यतः ॥१०॥**

हे इन्द्रदेव ! तिमी सङ्ग्राममा प्रतिस्पर्धा गर्दै शत्रुलाई पराजित गर्दछौ। सबैका जन्मदाता तिमी पान नगर्ने र असुर नष्ट गर्दछौ। तिमी नै विपत्तिनाशक, सुखका उत्पादक र शत्रुनाशक भएर विघ्न उत्पन्न गराउनेहरूलाई पर हटाउने गर्दछौ।

**अनु ते शुष्मं तुरयन्तमीयतुः क्षोणी शिशुं न मातरा। विश्वास्ते स्पृधः श्नथयन्त मन्यवे वृत्रं यदिन्द्र तूर्वसि ॥११॥**

हे इन्द्रदेव ! आफ्ना शिशुको रक्षा गर्नका लागि मातापिता तत्पर रहेझैँ आकाश र पृथ्वी उसै गरी तिम्रा बलका अनुगामी हुन्छन्। तिमीले वृत्रासुरको वध गर्दा तिम्रा क्रोधका अगाडि युद्ध गर्न तयार हुने शत्रुपक्ष कमजोर हुन थाल्दछ।

## इति द्वितीयः खण्डः

दोस्रो खण्ड समाप्त भयो

***

## तृतीयः खण्डः

तेस्रो खण्ड

**यज्ञ इन्द्रमवर्धयद्यद्भूमिं व्यवर्तयत्। चक्राण ओपशं दिवि ॥१॥**

यज्ञले इन्द्रदेवलाई खुसी पारेपछि उनले द्युलोकमा आवास बनाएर भूमि विस्तृत गराए।

**व्य१न्तरिक्षमतिरन्मदे सोमस्य रोचना। इन्द्रो यदभिनद्वलम् ॥२॥**

सोमपानले उमङ्ग उत्पन्न भएपछि इन्द्रदेवले बलवान् मेघलाई विदीर्ण गराए। त्यसै बेला उनले प्रकाशवान् आकाश पनि विस्तृत गराए।

**उद्गा आजदङ्गिरोभ्य आविष्कृण्वन्गुहा सतीः। अर्वाञ्चं नुनुदे वलम् ॥३॥**

सूर्यरूपी हे इन्द्रदेव ! तिमीले गुफामा रहेको किरण प्रकट गरेर त्यसलाई देहधारीसम्म पुऱ्यायौ। त्यसलाई रोकिदिने असुरलाई उँधो मुन्टो लगाउँदै भाग्ने बनायौ।

**त्यमु वः सत्रासाहं विश्वासु गीर्ष्वायतम्। आ च्यावयस्यूतये ॥४॥**

हे याजक हो ! आफ्ना समस्त वाणीले उच्चरित उत्तम स्तुतिले आफ्नो संरक्षणका लागि असुरविजयी इन्द्रदेवलाई आह्वान गर।

**युध्मं सन्तमनर्वाणं सोमपामनपच्युतम्। नरमवार्यक्रतुम् ॥५॥**

युद्धमा पराजित नहुने, शत्रुका काल र सोमरस पान गर्ने अपरिवर्तनीय निर्णय भएका तथा नायक इन्द्रदेवको सहयोग पाउनका लागि हामी उनलाई आह्वान गर्दछौँ।

**शिक्षा ण इन्द्र राय आ पुरु विद्वाँ ऋचीषम। अवा नः पार्ये धने ॥६॥**

हे दर्शनीय, सर्वज्ञ इन्द्रदेव ! हामीलाई पर्याप्त धन देऊ। शत्रुसित जितेर ल्याएको धन हाम्रा काममा खटाऊ।

**तव त्यदिन्द्रियं बृहत्तव दक्षमुत क्रतुम्। वज्रं शिशाति धिषणा वरेण्यम्॥७॥**

हे इन्द्रदेव ! हाम्रा प्रार्थनाले तिम्रो शौर्य, सामर्थ्य, कुशलता, पराक्रम र श्रेष्ठ वज्रलाई तेजस्वी बनाउँछ।

**तव द्यौरिन्द्र पौंस्यं पृथिवी वर्धति श्रवः। त्वामापः पर्वतासश्च हिन्विरे॥८॥**

हे इन्द्रदेव ! अन्तरिक्षमा तिम्रो शक्तिसामर्थ्य र पृथ्वीमा यशस्वी स्वरूप विस्तार हुन्छ। जलप्रवाह र पर्वत तिमीलाई आफ्नो अधिपति मान्दै नजिक पुग्दछन्।

**त्वां विष्णुर्बृहन् क्षयो मित्रो गृणाति वरुणः। त्वां शर्द्धो मदत्यनु मारुतम्॥९॥**

हे इन्द्रदेव ! महान् आश्रयदाता मानेर विष्णु, मित्र र वरुण आदि देवताले तिम्रो स्तुति गाउँछन्। मरुत्‌हरूका बलले तिमी हर्षित हुन्छौ।

## इति तृतीयः खण्डः

तेस्रो खण्ड समाप्त भयो

***

## चतुर्थः खण्डः

चौथो खण्ड

**नमस्ते अग्न ओजसे गृणन्ति देव कृष्टयः। अमैरमित्रमर्दय॥१॥**

हे दिव्य क्षमताले सम्पन्न अग्निदेव ! समस्त साधकहरू तिमीलाई नमस्कार गर्दछन्। तिमी अहितकारीको संहार गर।

**कुवित्सु नो गविष्टयेऽग्ने संवेषिषो रयिम्। उरुकृदुरु णस्कृधि॥२॥**

हे अग्निदेव ! हामीलाई प्रचुर ऐश्वर्य प्रदान गर, हामीलाई तिमी समृद्ध गराऊ, किनभने तिमी उन्नति गराउने हौ।

**मा नो अग्ने महाधने परा वर्ग्भारभृद्यथा। संवर्गं रयिं जय॥३॥**

हे अग्निदेव ! थाकेको भरियाझैँ हामीलाई तिमी नफ्याँक। हाम्रा लागि तिमी शत्रुको ऐश्वर्य जितिदेऊ।

**समस्य मन्यवे विशो विश्वा नमन्त कृष्टयः। समुद्रायेव सिन्धवः॥४॥**

नदीहरू समुद्रमा मिसिनका लागि वेगले गएझैँ सबै प्रजा उग्र इन्द्रदेवप्रति नमस्कार गर्दै आकर्षित हुन्छन्।

**वि चिद्वृत्रस्य दोधतः शिरो बिभेद वृष्णिना। वज्रेण शतपर्वणा॥५॥**

संसारलाई भयभीत गर्ने वृत्रासुरको टाउको शक्तिसम्पन्न इन्द्रदेवले आफ्नो तीक्ष्ण प्रहार भएका वज्रले छिनाए।

**ओजस्तदस्य तित्विष उभे यत्समवर्तयत्। इन्द्रश्चर्मेव रोदसी॥६॥**

द्युलोकदेखि पृथ्वीलोकसम्म आवरणजस्तै भएर फिँजिँदै सुरक्षा गर्ने इन्द्रदेवको ओज अत्यन्त तेजस्वी छ।

**सुमन्मा वस्वी रन्ती सूनरी ॥७॥**

हे इन्द्रदेवता ! तिम्रो मनरूपी अश्व उत्तम ज्ञानयुक्त र ऐश्वर्यवान् छ र त्यो रमणीय तथा सौन्दर्यशाली पनि छ।

**सरूप वृषन्ना गहीमौ भद्रौ धुर्यावभि.। ताविमा उप सर्पतः ॥८॥**

सुन्दर तथा समर्थ हे इन्द्रदेवता ! श्रेष्ठ कल्याणकारी रथमा जोतिने तिम्रा दुवै अश्व लिएर तिमी हाम्रा यज्ञमा आऊ। यी दुवै अश्वले तिम्रो मनगे सेवा गर्दछन्।

**नीव शीर्षाणि मृढ्वं मध्य आपस्य तिष्ठति। शृङ्गेभिर्दशभिर्दिशन् ॥९॥**

हे मानिसहरू हो ! दुवै हातका दसै औँलाले अभीष्ट फल प्रदान गर्दै इन्द्रदेवता हाम्रा यज्ञमा उपस्थित भएका छन्, उनलाई शिर निहुराएर हामीले दर्शन गरौँ।

## इति चतुर्थः खण्डः

चौथो खण्ड समाप्त भयो

***

**इति सामवेद संहिता सप्तदशोऽध्यायः**

सामवेद संहिताको सत्रौँ अध्याय समाप्त भयो।

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# सामवेद संहिता

## अष्यदशोऽध्यायः

**ऋषि—** मेधातिथि काण्व प्रियमेध आङ्गिरस। श्रुतकक्ष सुकक्ष आङ्गिरस। शुनःशेप आजीगर्ति। शंयु बार्हस्पत्य। मेधातिथि काण्व। वसिष्ठ मैत्रावरुणि। बालखिल्य। आम्बरीष वार्षागिर ऋजिश्वा भारद्वाज। विश्वमना वैयश्व। सोभरि काण्व। सप्तर्षिगण। कलि प्रागाथ। विश्वामित्र प्रागाथ। मेध्यातिथि काण्व। निध्रुवि काश्यप। भारद्वाज बार्हस्पत्य।

**देवता—** इन्द्र।अग्नि। विष्णु। देवगण। पवमान सोम। इन्द्राग्नी।

**छन्द—** गायत्री। बार्हत प्रगाथ बृहती सतोबृहती। अनुष्टुप्। उष्णिक्। काकुभ प्रगाथ ककुप् सतोबृहती। बृहती।

### प्रथमः खण्डः

पहिलो खण्ड

**पन्यंपन्यमित्सोतार आ धावत मद्याय। सोमं वीराय शूराय॥१॥**

हे सोम शोधन गर्न लागेका याजक हो ! पराक्रमी, शूरवीर इन्द्रदेवका लागि आनन्द दिने खालको सोमरस अर्पित गर।

**एह हरी ब्रह्मयुजा शग्मा वक्षतः सखायम्। इन्द्रं गीर्भिर्गिर्वणसम्॥२॥**

सङ्केत मात्रैले रथमा नारिने, सुखवर्द्धक दुई अश्वले सबैलाई आश्रय दिने, मित्ररूपी इन्द्रदेवलाई स्तुति गानका साथ यज्ञमण्डपमा लिएर आइपुगून्।

**पाता वृत्रहा सुतमा घा गमन्नारे अस्मत्। नि यमते शतमूतिः॥३॥**

सयौँ किसिमका साधनले हाम्रो रक्षा गर्ने, वृत्रासुर हनन गर्ने, सोमरस पान गर्ने हे इन्द्रदेव ! हाम्रा यज्ञमा अवश्य आऊ र शत्रुलाई हामीभन्दा पर पुऱ्याऊ।

**आ त्वा विशन्त्विन्दवः समुद्रमिव सिन्धवः। न त्वामिन्द्राति रिच्यते॥४॥**

हे इन्द्रदेव ! समुद्रमा नदी मिसिएझैँ सोमरस तिमीभित्र प्रवेश गर्दछ। हे इन्द्रदेव ! तिमीभन्दा महान् अर्को देवता छैन।

**विव्यक्थ महिना वृषन्भक्षं सोमस्य जागृवे। य इन्द्र जठरेषु ते॥५॥**

शक्तिमान्, जागरणशील हे इन्द्रदेव ! तिमी सोमपानका लागि आफ्ना ख्यातिले सबै ठाउँमा व्याप्त रहन्छौ। तिमीले पेटमा पुऱ्याएको सोमरस पनि प्रशंसनीय हुन्छ।

**अरं त इन्द्र कुक्षये सोमो भवतु वृत्रहन्। अरं धामभ्य इन्दवः॥६॥**

हे वृत्रहन्ता इन्द्रदेव ! हामीले प्रदान गरेको सोमरस तिम्रा लागि पर्याप्त होस्। तिम्रा साथसाथै यो सबै देवताका लागि पनि पर्याप्त होस्।

**जराबोध तद्विविड्ढि विशेविशे यज्ञियाय। स्तोमं रुद्राय दृशीकम् ॥७॥**

स्तुतिवाक्यद्वारा देवताहरूलाई जागृत गराउने हे अग्निदेव! यी यजमानले पवित्र स्थलका दुष्टतालाई विनाश गरून् भनेर हामी तिमीलाई आह्वान गर्दछौँ।

**स नो महाँ अनिमानो धूमकेतुः पुरुश्चन्द्रः। धिये वाजाय हिन्वतु ॥८॥**

प्रचुर मात्रामा धुवाँको ध्वजा फर्फराउने, आनन्ददायक र महान् अग्निदेवले हामीलाई ज्ञान र वैभवतिर प्रेरित गरून्।

**स रेवाँ इव विश्पतिर्दैव्यः केतुः शृणोतु नः। उक्थैरग्निर्बृहद्भानुः ॥९॥**

विश्वपालक, अत्यन्त तेजस्वी र ध्वजाझैँ प्रस्ट देखिने गुणहरूले सम्पन्न दूरदर्शी अग्निदेव वैभवशाली राजाजस्तै भएर हाम्रा स्तुतिवाक्यहरू ग्रहण गरून्।

**तद्वो गाय सुते सचा पुरुहूताय सत्वने। शं यद्गवे न शाकिने ॥१०॥**

हे स्तुति गर्ने स्तोताहरू हो! शत्रु जित्ने इन्द्रदेवको यशोगान गर। राम्रो घाँसमा गाई रमाएझैँ सोमसहितका स्तुतिमा इन्द्रदेव खुसी हुन्छन्।

**न घा वसुर्नि यमते दानं वाजस्य गोमतः। यत्सीमुपश्रवद्गिरः ॥११॥**

सबैका आश्रयदाता इन्द्रदेवले स्तुति सुनिसकेपछि हामीलाई धनधान्यका रूपमा अपार वैभव प्रदान गर्नमा विराम गर्दैनन्।

**कुवित्सस्य प्र हि व्रजं गोमन्तं दस्युहा गमत्। शचीभिरप नो वरत् ॥१२॥**

हे इन्द्रदेव! हिंसा गर्ने, गोठका गाई चोर्ने र लुकाउनेलाई तिमी चाँडै खोजेर दण्डित गर र गाई मुक्त गराऊ।

## इति प्रथमः खण्डः

पहिलो खण्ड समाप्त भयो

***

## द्वितीयः खण्डः

दोस्रो खण्ड

**इदं विष्णुर्वि चक्रमे त्रेधा नि दधे पदम्। समूढमस्य पांसुले ॥१॥**

यस्तो सबै विष्णुदेवको पराक्रम हो, उनका तीन प्रकारका चरण छन्। उनका चरणका धुलोभित्रै समस्त विश्वब्रह्माण्ड नै अटाएको हुन्छ।

**त्रीणि पदा वि चक्रमे विष्णुर्गोपा अदाभ्यः। अतो धर्माणि धारयन् ॥२॥**

विश्वरक्षक, अविनाशी विष्णुदेव तीनै लोकमा यज्ञ आदि कर्म पोषित गर्दछन्। उनी तीन पाइलाले जगत्मा व्याप्त रहन्छन्। अर्थात् उनी सृष्टि, स्थिति र रूपान्तरण यी तीन शक्तिले विश्व सञ्चालन गर्दछन्।

**विष्णोः कर्माणि पश्यत यतो व्रतानि पस्पशे। इन्द्रस्य युज्यः सखा ॥३॥**

हे याजकहरू! सर्वव्यापक भगवान् विष्णुका सृष्टि सञ्चालनमा सम्बन्धित कार्यहरू ध्यानपूर्वक हेर। इन्द्रका योग्य मित्रहरूले त्यस्ता परम सत्ताको अनुकूल बनेर रहनुपर्दछ।

**तद्विष्णोः परमं पदं सदा पश्यन्ति सूरयः। दिवीव चक्षुराततम् ॥४॥**

जसरी सामान्य आँखाले आकाशमा रहेका सूर्यदेवलाई सहजतापूर्वक देख्न सकिन्छ उसै गरी विद्वान्हरूले आफ्ना ज्ञानचक्षुले विष्णुदेवका श्रेष्ठ स्थानलाई पनि देख्छन्।

**तद्विप्रासो विपन्यवो जागृवांसः समिन्धते। विष्णोर्यत्परमं पदम् ॥५॥**

जागरुक विद्वान् स्तोताहरूले विष्णुदेवको त्यो परमपद प्रकट गराउँछन्।

**अतो देवा अवन्तु नो यतो विष्णुर्विचक्रमे। पृथिव्याः अधि सानवि ॥६॥**

जहाँबाट विष्णुले पराक्रम देखाए, उसै पृथ्वीका सात धामहरूबाट देवताले हाम्रो रक्षा गरून्।

**मो षु त्वा वाघतश्चनारे अस्मन्नि रीरमन्। आरात्ताद्वा सधमादं न आ गहीह वा सन्नुप श्रुधि ॥७॥**

हे इन्द्रदेव ! यजमानले तिमीलाई हामीदेखि टाढा पुऱ्याउन नसकून्। तिमी हाम्रा यज्ञमा चाँडै आऊ र हाम्रा नजिकै बसेर हाम्रो स्तुति ध्यानपूर्वक सुन।

**इमे हि ते ब्रह्मकृतः सुते सचा मधौ न मक्ष आसते। इन्द्रे कामं जरितारो वसूयवो रथे न पादमा दधुः ॥८॥**

हे इन्द्रदेव ! तिम्रो सन्तुष्टिका लागि सोमरस तयार गर्ने सबै ऋत्विक्हरू माहुरीझैँ जम्मा भएर बस्दछन्। ऐश्वर्यको कामनाले रथमा चढेजस्ता तिनीहरू तिमीलाई आहुति समर्पित गर्दछन्।

**अस्तावि मन्म पूर्व्यं ब्रह्मेन्द्राय वोचत। पूर्वीर्ऋतस्य बृहतीरनूषत स्तोतुर्मेधा असृक्षत ॥९॥**

हे ऋत्विक्हरू हो ! तिमीहरू इन्द्रदेवका लागि सनातन र कण्ठस्थ स्तोत्र पाठ गर। पहिलेका यज्ञमा बृहती छन्दमा सामगान गाएका थियौँ। त्यसले स्तोताको बुद्धि बढ्छ।

**समिन्द्रो रायो बृहतीरधूनुत सं क्षोणी समु सूर्यम्। सं शुक्रासः शुचयः सं गवाशिरः सोमा इन्द्रममन्दिषुः ॥१०॥**

इन्द्रदेवले द्युलोक, पृथ्वीलोक, सूर्य र प्रचुर सम्पत्तिको सिर्जना गरे। उनी गाईको दुध मिसेको तेजस्वी र शुद्ध सोमरसले हर्षित भए।

**इन्द्राय सोम पातवे वृत्रघ्ने परि षिच्यसे। नरे च दक्षिणावते वीराय सदनासदे ॥११॥**

हे सोमदेव ! दुष्टसंहारक इन्द्रदेवले पान गर्नका लागि, यज्ञमा दक्षिणा दिने वीरका लागि र यज्ञ गर्ने यजमानका लागि तिमी पात्रमा प्रवाहित भएर स्थिर होऊ।

**तं सखायः पुरोरुचं वयं यूयं च सूरयः। अश्याम वाजगन्ध्यं सनेम वाजपस्त्यम् ॥१२॥**

हे मित्र हो ! तिमीहामी त्यही पराक्रमी, पौष्टिक, श्रेष्ठ सुगन्धी, शक्तिसामर्थ्य बढाउने सोमरस प्राप्त गरौँ।

**परि त्यं हर्यतं हरिं बभ्रुं पुनन्ति वारेण। यो देवान्विश्वाँ इत्परि मदेन सह गच्छति ॥१३॥**

हरियो र खैरो रङ्गका सुन्दर सोमलाई जलले पवित्र बनाउँछ। यो सोम इन्द्र आदि देवताका नजिक आफ्नो हर्षप्रदायक गुणसँगै जान्छ।

**कस्तमिन्द्र त्वा वसवा मर्त्यो दधर्षति। श्रद्धा हि ते मघवन्पार्ये दिवि वाजी वाजं सिषासति ॥१४॥**

हे सबैका आश्रयदाता इन्द्रदेव ! तिमीलाई कसले पो अपमानित गर्न सक्ला ? हे ऐश्वर्यवान् इन्द्रदेव ! तिमीप्रति श्रद्धा राख्नेहरू बलशाली हुन्छन्। उनीहरू दुःखबाट पार हुने बेलामा पनि सहयोग प्राप्त गर्दछन्।

**मघोनः स्म वृत्रहत्येषु चोदय ये ददति प्रिया वसु। तव प्रणीती हर्यश्व सूरिभिर्विश्वा तरेम दुरिता ॥१५॥**

हे वैभवशाली इन्द्रदेव ! हविष्यान्न समर्पित गर्ने याजकलाई दुष्ट दुराचारीसित सङ्घर्ष गर्ने शक्ति प्रदान गर। हे अश्वपति ! तिम्रा प्रेरणाले ज्ञानीले पापबाट मुक्ति पाऊन्।

**इति द्वितीयः खण्डः**

दोस्रो खण्ड समाप्त भयो

***

## तृतीयः खण्डः

तेस्रो खण्ड

**एदु मधोर्मदिन्तरं सिञ्चाध्वर्यो अन्धसः। एवा हि वीर स्तवते सदावृधः ॥१॥**

हे ऋत्विक् हो ! मधुर सोमपानले आनन्दित हुने इन्द्रदेवलाई सोमरस समर्पित गर। पराक्रमी र निरन्तर वृद्धि प्राप्त गर्ने इन्द्रदेव नै स्तोताहरूद्वारा सधैँ प्रशंसित हुन्छन्।

**इन्द्र स्थातर्हरीणां नकिष्टे पूर्व्यस्तुतिम्। उदानंश शवसा न भन्दना ॥२॥**

हे अश्वपति इन्द्रदेव ! ऋषिले तयार गरेको तिम्रो स्तुति आफ्नो सामर्थ्य र तेजले गर्दा अरू कसैले पनि प्राप्त गर्न सक्दैनन्। तिमीजस्तो बलवान् र तेजस्वी अरू छैनन्।

**तं वो वाजानां पतिमहूमहि श्रवस्यवः। अप्रायुभिर्यज्ञेभिर्वावृधेन्यम् ॥३॥**

ऐश्वर्यको कामनाले हामी वैभवशाली इन्द्रदेवलाई आह्वान गर्दछौँ। उनी प्रमादरहित भएर याजकका यज्ञले वृद्धि प्राप्त गर्दछन्।

**तं गूर्धया स्वर्णरं देवासो देवमरतिं दधन्विरे। देवत्राहव्यमूहिषे ॥४॥**

हे स्तोता हो ! स्वर्गमा रहेका देवताका लागि हवि पुऱ्याउने अग्निदेवको स्तुति गर। याजकहरू स्तुति गर्दछन् र देवतालाई हव्य प्रदान गर्दछन्।

**विभूतरातिं विप्र चित्रशोचिषमग्निमीडिष्व यन्तुरम्। अस्य मेधस्य सोम्यस्य सोभरे प्रेमध्वराय पूर्व्यम् ॥५॥**

हे ऋषिहरू हो ! यज्ञको सफलताका लागि प्रचुर वैभव प्रदान गर्ने, अति ओजस्वी, यस श्रेष्ठ सोमयज्ञका नियामक, चिरन्तन अग्निदेवलाई हामी वन्दना गर्दछौँ।

**आ सोम स्वानो अद्रिभिस्तिरो वाराण्यव्यया। जनो न पुरि चम्वोर्विशद्धरिः सदो वनेषु दध्रिषे ॥६॥**

ढुङ्गाले पेलेर तयार गरेको यो सोमरस शोधनयन्त्रबाट तलको बर्तनमा छानिन्छ। हरियो आभासम्पन्न सोमरस काठको बर्तनमा पुगेर सहर पसेको मानिसझैँ त्यहीँ अडिन्छ।

**स मामृजे तिरो अण्वानि मेष्यो मीढ्वांत्सप्तिर्न वाजयुः। अनुमाद्यः पवमानो मनीषिभिः सोमो विप्रेभिर्ऋक्वभिः ॥७॥**

बलवर्द्धक, परिपुष्ट, अश्वजस्तै प्रिय, ऋत्विक्ले ऊनीले छानेका सोमरस विद्वान्का स्तुतिले प्रशंसित हुँदै पवित्रता प्राप्त गर्दछ।

**वयमेनमिदा ह्योऽपीपेमेह वज्रिणम्। तस्मा उ अद्य सवने सुतं भरा नूनं भूषत श्रुते ॥८॥**

हामी याजकले इन्द्रदेवलाई हिजो सोमरसले सन्तुष्ट गराएका थियौँ। उनलाई आजका यज्ञमा पनि सोमरस प्रदान गर्दछौँ। हे याजक हो ! यस बेला स्तोत्र गाएर इन्द्रदेवलाई सुहाउँदिलो बनाओ।

**वृकश्चिदस्य वारण उरामथिरा वयुनेषु भूषति। सेमं नः स्तोमं जुजुषाण आ गहीन्द्र प्र चित्रया धिया ॥९॥**

ब्वाँसाजस्ता क्रूर शत्रु पनि इन्द्रदेवका अगाडि सोझा हुन थाल्दछन्। उनले हाम्रो प्रार्थना स्वीकार गर्दै हामीलाई उत्कृष्ट चिन्तनले युक्त विवेकबुद्धि प्रदान गरून्।

**इन्द्राग्नी रोचना दिवः परि वाजेषु भूषथः। तद्वां चेति प्र वीर्यम् ॥१०॥**

हे इन्द्र र अग्निदेव ! दिव्य गुणले आलोकित तिमीहरू सङ्घर्षमा सफल भएर शोभायमान छौ। यो तिमीहरूका शौर्यको परिचय हो।

**इन्द्राग्नी अपसस्पर्युप प्र यन्ति धीतयः। ऋतस्य पथ्या३ अनु ॥११॥**

हे इन्द्र र अग्निदेव ! असल कर्म गर्ने मानिसहरू सत्यको बाटो पहिल्याउँदै सधैँभरि अगाडि बढ्दछन्।

**इन्द्राग्नी तविषाणि वां सधस्थानि प्रयांसि च। युवोरप्तूर्यं हितम् ॥१२॥**

हे इन्द्र र अग्निदेव ! तिमीहरूको बल र अन्न संयुक्त रूपमा रहन्छन्। तिमीहरूको बल शुभ कर्मतर्फ प्रेरित गर्ने खालको छ।

**क ईं वेद सुते सचा पिबन्तं कद्वयो दधे। अयं यः पुरो विभिनत्त्योजसा मन्दानः शिप्र्यन्धसः ॥१३॥**

सोमयज्ञमा एकै ठाउँमा बसेर सोमपान गर्ने अत्यधिक वैभवसम्पन्न इन्द्रलाई कसले चिन्दैन ? सोमपानले खुसी हुने, राम्रो मुकुटधारी इन्द्रदेवका शक्तिले विरोधीको सहर विनाश गर्दछ।

**दाना मृगो न वारणः पुरुत्रा चरथं दधे। नकिष्ट्वा नि यमदा सुते गमो महाँश्चरस्योजसा ॥१४॥**

आफ्ना ओजले विचरण गर्ने, हाम्रा लागि सम्माननीय हे इन्द्रदेव ! तिमी यस सोमयज्ञमा आऊ। शत्रुको खोजीमा घुम्ने, मातिएको मत्ता हात्तीजस्तै भएर रथद्वारा यज्ञमा जाँदा तिमीलाई कसैले रोक्न सक्दैन।

**य उग्रः सन्ननिष्टृतः स्थिरो रणाय संस्कृतः। यदि स्तोतुर्मघवा शृणवद्धवं नेन्द्रो योषत्या गमत् ॥१५॥**

शस्त्रले सुसज्जित भएर युद्धभूमिमा रहने, अपराजेय, पराक्रमी, वैभवशाली इन्द्रदेव हाम्रो स्तुति सुनेर अर्का स्थानमा नगईकन यसै यज्ञमा उपस्थित हुनेछन्।

## इति तृतीयः खण्डः

तेस्रो खण्ड समाप्त भयो

***

## चतुर्थः खण्डः

चौथो खण्ड

**पवमाना असृक्षत सोमाः शुक्रास इन्दवः। अभि विश्वानि काव्या ॥१॥**

शुभ्र ज्योतिले सम्पन्न पवित्रता प्राप्त गरेको सोमरस वेदमन्त्रका स्तुतिसँगै प्रकट हुन्छ।

**पवमाना दिवस्पर्यन्तरिक्षादसृक्षत। पृथिव्या अधि सानवि ॥२॥**

शोधन गरिएको सोम पृथ्वीको उच्च भाग आकाशको किरण र अन्तरिक्षको वर्षाजस्तै गरी प्रकट हुन्छ।

**पवमानास आशवः शुभ्रा असृग्रमिन्दवः। घ्नन्तो विश्वा अप द्विषः ॥३॥**

उज्ज्वल, पवमान सोम विकृति हटाउँदै तीव्र गतिले सुन्दर पात्रमा स्थिर हुँदै छ।

**तोशा वृत्रहणा हुवे सजित्वानापराजिता। इन्द्राग्नी वाजसातमा ॥४॥**

दुष्ट र दुराचारी शत्रु नाश गरेर सधैँ युद्धमा विजय प्राप्त गर्ने, अपराजित, साधकलाई मनग्गे वैभव प्रदान गर्ने इन्द्र र अग्निदेवलाई हामी सधैँ वन्दना गर्दछौँ।

**प्र वामर्चन्त्युक्थिनो नीथाविदो जरितारः। इन्द्राग्नी इष आ वृणे ॥५॥**

हे इन्द्र र अग्निदेव ! वेदपाठ गर्नेले तिमीहरूलाई प्रार्थना गर्दछन्। सामवेद गाउनेहरू तिमीहरूको गुण गाउँछन् र अन्न प्राप्त गर्नका लागि हामी पनि स्तुति गर्दछौँ।

**इन्द्राग्नी नवतिं पुरो दासपत्नीरधूनुतम्। साकमेकेन कर्मणा ॥६॥**

हे इन्द्र र अग्निदेव ! तिमीहरू दुवैले संयुक्त भएर शत्रुका नब्बे सहर र उनको विभूति एकै पटकको आक्रमणमा एकै समयमा कम्पित गरायौ।

**उप त्वा रण्वसन्दृशं प्रयस्वन्तः सहस्कृत। अग्ने ससृज्महे गिरः ॥७॥**

हे बलका पुत्र अग्निदेव ! तिमी रमणीय देखिन्छौ। हामी हविष्यान्न अर्पित गर्दै तिम्रो स्तुति गर्दछौँ।

उपच्छायामिव घृणेरगन्म शर्म ते वयम् । अग्ने हिरण्यऽसन्दृशः ॥८॥
हे अग्निदेव तिमी स्वर्णिम आभायुक्त छौ । थाकेका प्राणीलाई छायामा सुख प्राप्त भएजस्तै तिम्रा नजिकमा हामीलाई आनन्द प्राप्त हुन्छ ।

य उग्र इव शर्यहा तिग्मशृङ्गो न वंसगः । अग्ने पुरो रुरोजिथ ॥९॥
हे अग्निदेव ! तिमी महान् योद्धाका बाण र साँढेका तिखा सिङ जस्तै ज्वालाले शत्रु संहार गर्दछौ । हे देव ! तिमीले नै असुरका तीन वटा सहर ध्वस्त गरेका थियौ ।

ऋतावानं वैश्वानरमृतस्य ज्योतिषस्पतिम् । अजस्रं घर्ममीमहे ॥१०॥
हे अग्निदेवता ! तिमी यज्ञीय सत्कर्मले युक्त, मानवहरूका लागि कल्याणकारी, आफ्नो तेजले यज्ञको रक्षा गर्ने, जाज्वल्यमान छौ । हामी तिम्रो उपासना गर्दछौँ ।

य इदं प्रतिपप्रथे यज्ञस्य स्वरुत्तिरन् । ऋतूनुत्सृजते वशी ॥११॥
अग्निदेवता संसारको कल्याणका लागि यज्ञमा उपस्थित अवरोध हटाइदिन्छन्, उनी संसारलाई आफ्ना वशमा राख्दछन् र समस्त ऋतुहरूको निर्माण गर्दछन् । उनैले यस संसारलाई विस्तार पनि गर्दछन् ।

अग्निः प्रियेषु धामसु कामो भूतस्य भव्यस्य । सम्राडेको विराजति ॥१२॥
भूत र भविष्यमा जन्म लिएका वा लिनेहरूले अग्निदेवताको कामना गर्दछन् । उनी एक मात्र राजाधिराज हुन् र उनै अग्निदेवता आफ्ना प्रिय यज्ञस्थलमा विराजमान छन् ।

## इति चतुर्थः खण्डः

चौथो खण्ड समाप्त भयो

***

## इति सामवेद संहिता अष्यदशोऽध्यायः

सामवेद संहिताको अठारौँ अध्याय समाप्त भयो ।

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# सामवेद संहिता

## एकोनविंशोऽध्यायः

**ऋषि–** विरूप आङ्गिरस। अवत्सार काश्यप। विश्वामित्र गाथिन। देवातिथि काण्व। गोतम राहूगण। वामदेव गौतम। प्रस्कण्वा काण्व। वसुश्रुत आत्रेय। सत्यश्रवा आत्रेय। अवस्यु आत्रेय। बुध गविष्ठिर आत्रेय। कुत्स आङ्गिरस। अत्रि भौम। दीर्घतमा औचथ्य।

**देवता–** अग्नि। पवमान सोम। इन्द्र। उषा। अश्विनीकुमार।

**छन्द–** गायत्री। त्रिष्टुप्। बार्हत प्रगाथ बृहती सतोबृहती। उष्णिक्। पङ्क्ति। जगती।

### प्रथमः खण्डः

पहिलो खण्ड

**अग्निः प्रत्नेन जन्मना शुम्भानस्तन्वां३ स्वाम्। कविर्विप्रेण वावृधे ॥१॥**

तेजस्वी स्वरूपमा सुशोभित, मेधावी अग्निदेवलाई ऋत्विक्हरू पुरातन स्तोत्रले प्रज्वलित गर्दछन्।

**ऊर्जो नपातमा हुवेऽग्निं पावकशोचिषम्। अस्मिन्यज्ञे स्वध्वरे ॥२॥**

ऊर्जा खस्न नदिने, पवित्र बनाउने, दीप्तिमान् अग्निदेवलाई उत्तम यज्ञमा आह्वान गर्छौं।

**स नो मित्रमहस्त्वमग्ने शुक्रेण शोचिषा। देवैरा सत्सि बर्हिषि ॥३॥**

पूज्य, मित्रजस्ता हे अग्निदेव! सफा ज्वाला र तेजले पूर्ण भएर देवताहरूसँगै यस यज्ञमा प्रतिष्ठित होऊ।

**उत्ते शुष्मासो अस्थू रक्षो भिन्दन्तो अद्रिवः। नुदस्व याः परिस्पृधः ॥४॥**

ढुङ्गाले कुटिएका हे शुद्ध सोमदेव! तिम्रा उठिरहेका तरङ्गबाट राक्षसको विनाश हुन्छ। हामीसित लडाइँ गर्ने शत्रुलाई तिमी पर भगाइदेऊ।

**अया निजघ्निरोजसा रथसङ्गे धने हिते। स्तवा अबिभ्युषा हृदा ॥५॥**

हे सोमदेव! तिमी आफ्ना सामर्थ्यले शत्रु विनाश गर्न सक्षम छौ। युद्धमा हामी निर्भय मनले रथमा बसेर धन प्राप्तिका लागि तिम्रो स्तुति गर्दछौँ।

**अस्य व्रतानि नाधृषे पवमानस्य दूढ्या। रुज यस्त्वा पृतन्यति ॥६॥**

संस्कारित सोमका कर्मले दुष्ट राक्षसको प्रगति हुन सक्दैन। हे सोमदेव! तिमीप्रति आक्रमण गर्न खोज्ने शत्रुको विनाश गर।

**तं हिन्वन्ति मदच्युतं हरिं नदीषु वाजिनम्। इन्दु मिन्द्राय मत्सरम् ॥७॥**

आनन्दको रस बगाउने, बल र उत्साह बढाउने हरियो आभासम्पन्न सोमले नदीका माध्यमबाट इन्द्रदेवलाई प्रेरित गर्दछ।

**आ मन्द्रैरिन्द्र हरिभिर्याहि मयूररोमभिः। मा त्वा के चिन्नि येमुरिन्न पाशिनोऽति धन्वेव ताँ इहि ॥८॥**

यात्रीले मरुस्थल पार गरेभैँ हे इन्द्रदेव ! मयुरले आनन्ददायी पँखेटा फिँजाएको जस्तो जगर भएका घोडामा मार्गको बाधा हटाउँदै तिमी आऊ। बाटामा जाल फिँजाउनेहरूले तिमीलाई बाधा हाल्न नसकून्।

**वृत्रखादो वलं रुजः पुरां दर्मो अपामजः। स्थाता रथस्य हर्योरभिस्वर इन्द्रो दृढहा चिदारुजः ॥९॥**

वृत्रासुर मार्ने, राक्षसको बल सिध्याउने, सहर ध्वस्त पार्ने, जल बर्साउने र घोडामा सजिएका इन्द्रदेव शत्रुलाई जित्न सक्छन्।

**गम्भीराँ उदधीँरिव क्रतुं पुष्यसि गा इव। प्र सुगोपा यवसं धेनवो यथा ह्रदं कुल्या इवाशत ॥१०॥**

हे इन्द्रदेव ! गहिरो समुद्रलाई जलका धाराले भरिपूर्ण पारेभैँ तिमी याज्ञिकहरूलाई चाहिएको फल दिएर पुष्ट गराउँछौ। असल गोठालाले राम्रो दाना खुवाएर गाई पोसेभैँ र नदीहरू समुद्रमा मिसिएर पोसेभैँ सोमका धाराले तिमीलाई पोस्दछन्।

**यथा गौरो अपा कृतं तृष्यन्नेत्यवेरिणम्। आपित्वे नः प्रपित्वे तूयमा गहि कण्वेषु सु सचा पिब ॥११॥**

हे इन्द्रदेव ! तिर्खाएको गौर मृग तलाउनजिक कुदेर गएभैँ तिमी हाम्रा सहचर बनेर यज्ञमा आऊ र हामी कण्वपुत्रहरूका यज्ञमा सोमपान गरेर सन्तुष्ट होऊ।

**मन्दन्तु त्वा मघवन्निन्द्रेन्दवो राधोदेयाय सुन्वते। आमुष्या सोममपिबश्चमू सुतं ज्येष्ठं तद्दधिषे सहः ॥१२॥**

हे ऐश्वर्यवान् इन्द्रदेव ! सोमयज्ञ सम्पन्न गर्ने साधकलाई वैभव प्रदान गर्नका लागि सोमरसले तिमीलाई आनन्दित पारोस्। पात्रमा राखिएको शोधित सोमरस पिएर तिमी श्रेष्ठ बलले युक्त हुन्छौ।

**त्वमङ्ग प्र शंसिषो देवः शविष्ठ मर्त्यम्। न त्वदन्यो मघवन्नस्ति मर्डितेन्द्र ब्रवीमि ते वचः ॥१३॥**

हे प्रशंसनीय बलवान् इन्द्रदेव ! तिमी आफ्ना तेजले तेजस्वी भएर साधकको प्रशंसा गर्दछौ। हे ऐश्वर्यवान् इन्द्रदेव ! सुख प्रदान गर्ने तिमीबाहेक अन्य कोही पनि छैन। त्यसैले हामी सबैले तिम्रै स्तवन गरिरहेका छौँ।

**मा ते राधांसि मा त ऊतयो वसोऽस्मान्कदा चना दभन्। विश्वा च न उपमिमीहि मानुष वसूनि चर्षणिभ्य आ ॥१४॥**

हे विश्वका आश्रयदाता इन्द्रदेव ! तिमीले दिएको साधन हाम्रो विनाशका लागि नहोस्, रक्षाका लागि होस्। तिमीबाट प्रेरित शक्तिले विध्वंस नगरोस्। हे इन्द्रदेव ! तिमी मानव हितैषि छौ। हामी सज्जन नागरिकहरूलाई सबै खालका सम्पत्ति देऊ।

**इति प्रथमः खण्डः**

पहिलो खण्ड समाप्त भयो

***





## द्वितीयः खण्डः

दोस्रो खण्ड

**प्रति ष्या सूनरी जनी व्युच्छन्ती परि स्वसुः। दिवो अदर्शि दुहिता ॥१॥**

प्राणीका प्रेरक, फल प्रदायक, आफ्ना दिदीबहिनीजस्ता रात्रिका अन्तिममा प्रकाश फिँजाउने, सूर्यपुत्री उषालाई सबैले देख्छन्।

**अश्वेव चित्रारुषी माता गवामृतावरी। सखा भूदश्विनोरुषाः ॥२॥**

चञ्चल बिजुलीजस्तो अद्भुत दीप्तिमान् किरणकी माता, यज्ञ आरम्भ गर्ने उषाका मित्र अश्विनीकुमार हुन्।

**उत सखास्यश्विनोरुत माता गवामसि। उतोषो वस्व ईशिषे ॥३॥**

तिमी अश्विनीकुमारका मित्र हुनाले देदीप्यमान रश्मि रचना गर्ने हे उषादेवी ! तिमी स्तुति गर्न योग्य छ्यौ।

**एषो उषा अपूर्व्या व्युच्छति प्रिया दिवः। स्तुषे वामश्विना बृहत् ॥४॥**

अपूर्व प्रिय उषादेवीले आकाशको तम नाश गर्दछिन्। देवी उषाका कार्यमा सहयोगी हे अश्विनीकुरमाहरू ! हामी महान् स्तोत्रले तिमीहरूलाई स्तुति गर्दछौँ।

**या दस्रा सिन्धुमातरा मनोतरा रयीणाम्। धिया देवा वसुविदा ॥५॥**

हे अश्विनीकुमारहरू हो ! शत्रुलाई नाश गर्ने र नदीका उत्पत्तिकर्ता तिमीहरू नै हौ। विवेकपूर्वक कर्म गर्नेहरूलाई तिमीहरू अपार सम्पत्ति दिने गर्दछौ।

**वच्यन्ते वां ककुहासो जूर्णायामधि विष्टपि। यद्वां रथो विभिष्पतात् ॥६॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरूको रथ पक्षीझैँ उडेर आकाशमा पुग्दछ। त्यस बेला स्वर्गलोकमा तिमीहरूका लागि प्रशंसनीय स्तोत्रको पाठ हुने गर्दछ।

**उषस्तच्चित्रमा भरास्मभ्यं वाजिनीवति। येन तोकं च तनयं च धामहे ॥७॥**

हवन प्रारम्भ गराउने हे उषादेवी ! हामीलाई सन्तानको पोषण गर्न सक्ने गरी विलक्षण ऐश्वर्य प्रदान गर।

**उषो अद्येह गोमत्यश्वावति विभावरि। रेवदस्मे व्युच्छ सूनृतावति ॥८॥**

गाई र अश्वले युक्त यज्ञकर्मकी प्रेरक हे उषादेवी ! आज हामीलाई तिमी धनधान्यले परिणपूर्ण गराऊ।

**युंक्ष्वा हि वाजिनीवत्यश्वाँ अद्यारुणाँ उषः। अथा नो विश्वा सौभगान्या वह ॥९॥**

हवन प्रारम्भ गराउने हे उषादेवी ! अरुण वर्णका अश्व आफ्ना रथमा जोड र हामीलाई विश्वका सबै सौभाग्य प्रदान गर।

**अश्विना वर्तिरस्मदा गोमद्दस्रा हिरण्यवत्। अर्वाग्रथं समनसा नि यच्छतम् ॥१०॥**

शत्रु नाश गर्ने हे अश्विनीकुमारहरू हो ! मन लगाएर तिमीहरू गाई र स्वर्णमय रथ हाम्रा लागि पठाइदेओ।

**एह देवा मयोभुवा दस्रा हिरण्यवर्तनी। उषर्बुधो वहन्तु सोमपीतये ॥११॥**

स्वर्णिम प्रकाशयुक्त उषादेवीका साथ दुःख निवारक र सुखदायी अश्विनीकुमारलाई यस यज्ञमा सोमपानका लागि जाग्रत अश्वले ल्याइदिऊन्।।

**यावित्था श्लोकमा दिवो ज्योतिर्जनाय चक्रथुः। आ न ऊर्जं वहतमश्विना युवम् ॥१२॥**

हे अश्विनीकुमारहरू हो ! द्युलोकबाट प्रशंसायोग्य प्रकाश ल्याएर तिमीहरू दुनियाँको हित गर्दछौ। यस्तो काम गर्ने तिमीहरू हामीलाई अन्नले पुष्ट गर।

## इति द्वितीयः खण्डः

दोस्रो खण्ड समाप्त भयो

***

## तृतीयः खण्डः

तेस्रो खण्ड

**अग्निं तं मन्ये यो वसुरस्तं यं यन्ति धेनवः। अस्तमर्वन्त आशवोऽस्तं नित्यासो वाजिन इषं स्तोतृभ्य आ भर ॥१॥**

सबैका आश्रयस्वरूप अग्निदेवसित हामी परिचित छौँ। अग्निदेव प्रदीप्त भएको देखेपछि साँझपख गाई आआफ्ना थलामा फर्कन्छन् र तीव्रगामी अश्व नित्य प्रदीप्त अग्नि देखेर तबेलामा फर्कन्छन्। हे अग्निदेव तिमी यस्तै भएर याजकहरूलाई मनग्गे धनधान्य प्रदान गर।

**अग्निर्हि वाजिनं विशे ददाति विश्वचर्षणिः। अग्नी राये स्वाभुवं स प्रीतो याति वार्यमिषं स्तोतृभ्य आ भर ॥२॥**

अग्निदेव निश्चय नै यजमानलाई अन्न दिने, पूज्य र सबैमाथि दृष्टि पुऱ्याउने खालका छन्। उनी प्रसन्न भएर यज्ञमा सबैलाई ऐश्वर्य प्रदान गर्नमा अलिकति पनि सङ्कोच गर्दैनन्। हे अग्निदेव ! तिमी स्तोताहरूलाई पर्याप्त पोषण देऊ।

**सो अग्निर्यो वसुर्गृणे सं यमायन्ति धेनवः। समर्वन्तो रघुद्रुवः सं सुजातासः सूरय इषं स्तोतृभ्य आ भर ॥३॥**

जो सबैका आश्रयरूप र सहायक हुन्, उनै अग्निदेवलाई हामी प्रार्थना गर्दछौँ। अग्निका नजिकै गाई र तेज गतिमा कुद्ने अश्व पनि आउँछन्। श्रेष्ठ कुलमा उत्पन्न र सुसंस्कार सम्पन्न विद्वान्हरूले अग्निदेवलाई उपासना गर्दछन्। उपास्य गुणले युक्त हे अग्निदेव ! याजकहरूका लागि मनग्गे धनधान्य प्रदान गर।

**महे नो अद्य बोधयोषो राये दिवित्मती। यथा चित्रो अबोधयः सत्यश्रवसि वाय्ये सुजाते अश्वसूनृते ॥४॥**

हे सुख प्रकट गराउने उषादेवी ! पहिलेको जस्तै हामीलाई ज्ञानयुक्त गराऊ, ऐश्वर्य प्राप्तिको चेतना देऊ। हे श्रेष्ठ कुलकी सत्य भाषिणी ! वय्यका पुत्र सत्यश्रवालाई आफ्ना कृपाको पात्र बनाऊ।

**या सुनीथे शौचद्रथे व्यौच्छो दुहितर्दिवः। सा व्युच्छ सहीयसि सत्यश्रवसि वाय्ये सुजाते अश्वसूनृते ॥५॥**

हे द्युलोककी पुत्री उषादेवी ! तिमी शुचद्रथका पुत्र सुनीथका लागि अन्धकार हटाएर प्रकट भयौ। अब तिमी वय्यका पुत्र सत्यश्रवामाथि उपकारको वर्षा गर।

